# हाम्रो पुरुषार्थ
(त्रैमासिक)

❑ वर्ष : ४७ ❑ अङ्क : २ ❑ सम्पूर्णाङ्क : ८५ ❑ माघ–चैत, २०७६





**किरण पुस्तकालय**
तम्घास, गुल्मी (फोन : ०७९–५२०२८७)
सम्पर्क फोन नं. : ०७९–५२०२६०, ५२०४८३)
मो.नं. : ९८५११४८८०७, ९७४७००२०७९
E-mail : hamropurushartha@gmail.com, shashipanthi9@gmail.com
Website : www.kiranpustakalaya.com

मूल्य : रु.५०/–

*कम्प्युटर सेटिङ : ईश्वर वि.क.*

*मुद्रक :*  *सुशिला प्रिन्टर्स, गुल्मी ०७९–५२०४५०*
*E-mail : spgulmi 33@yahoo.com*

आवरण पृष्ठ : महामारीबाट जोगिन सामाजिक दूरीको सङ्केत

# हाम्रो पुरुषार्थ (त्रैमासिक)



*काठमाडौं प्रतिनिधि*

**डा. दुर्गाप्रसाद अर्याल**
फोन नं. ०१-४८२०५९७
**डा. लक्ष्मीकान्त पन्थी**
फोन नं. ०१-४८२०२२१
**गोविन्दप्रसाद पोखरेल**
फोन नं. ९८४१८४९६६६
**भानुभक्त मरासिनी**
फोन नं. ९८४१७१३३३६
**ध्रुवराज पन्थी**
फोन नं. ०१४२७८६५१
**कृष्णप्रसाद भण्डारी "मुमुक्षु"**
फोन नं. ९८५६०३२४७७

*रुपन्देही प्रतिनिधि*

**गोपाल पन्थी**
फोन नं. ९८५७०३३३३८
**रुरु शर्मा**
फोन नं. ९८४७०९३०११
**कविता पन्थी**
फोन नं. ९८४७०३३९२४
**माधव गौतम**
फोन नं. ९८५१०१३२८१

*चितवन प्रतिनिधि*

**पूर्णप्रसाद अधिकारी**
फोन नं. ०५६-५२८१६०

*दाङ प्रतिनिधि*

**अर्जुनप्रसाद भट्टराई**
फोन नं. ९८६८६३०४६१

*पाल्पा प्रतिनिधि*

**कमल खत्री**
फोन नं. ९८४७३०९०८

*पोखरा प्रतिनिधि*

**शङ्कर ज्ञवाली**
फोन नं. ९८५६०३१४४४

*विदेश प्रतिनिधि*

**डा. गोपालप्रसाद शर्मा**
के. २२/१८ पञ्चगङ्गाघाट
वाराणसी, उत्तरप्रदेश, भारत
फोन नं. ००९१८००५३११०७२

**शंकरप्रसाद शास्त्री**
गढी केन्ट, घुच्चुपानी रोड, अनारवाला
देहरादून, उत्तराखण्ड, भारत
फोन नं. ००९१९९९७२०७४८४

**महेन्द्रकुमार लम्साल**
लेनकास्टर स्ट्रीट-२२
सिड्नी, अस्ट्रेलिया
फोन नं. ०६१४१२००१७६९

**विष्णु शर्मा**
पी. डब्लू. डी. कोलोनी
डिफू, कर्बी, एङ्गलोङ्ग, आसाम, भारत
फोन नं. ००९१३६७१२७३१८५

**हरिनारायण सापकोटा**
७१९-सेमेका एभेन्यू, १ आर, रिजवुड, क्वीन्स, जिप्कोड-११३८५, न्यूयोर्क, अमेरिका
फोन नं. १-३४७-५१०-२७७१

सम्पादकीय

# कोरोनाको कहर

- एउटा महाव्यथा, एउटा महामारीको त्रासदीबाट विश्व त्रस्त भएको छ अहिले । महाचीनबाट प्रकट भएको कोविड–१९ कोरोना भाइरसले अहिले विश्वमानवलाई पिरोलेको छ, आतंकित तुल्याएको छ । यसले अहिले करोडौंलाई त्रस्त बनाएको छ, लाखौंलाई ग्रस्त बनाएको छ र हजारौंलाई मृत्युको मुखमा धकेलेको छ ।

- चीनदेखि यूरोप–अमेरिकासम्म कोरिया जापान भारत र अरबको खाडीसम्म कोरोनाको कहर व्याप्त छ । कालसर्प झैं फणा उठाएर कोरोना मानव जातिमाथि आक्रामक बनेको छ । कोरोनाले विश्वलाई नै भयभीत र अस्तव्यस्त बनाएको छ । भयभीत छौं हामी पनि । खतरामा छौं हामी पनि ।

- विकसित र साधनसम्पन्न राष्ट्रहरूलाई समेत अत्याएको कोरोना हाम्रोमा पस्यो भने उत्पात मच्चिन सक्छ । हामी साधनहीन छौं । अनुशासनले, धैर्यले, मन्त्रबलले, औषधले, आचरणले हामी कोरोनासँग सामना गर्नुपर्छ ।

- कोरोनाको कालसर्पले फैलाएको विषले अहिले संसारलाई जलाइरहेछ । प्राचीन कालमा कालकूट जस्ता विषहरू निस्केर संसारलाई पिरोलेका थिए । लोककल्याणार्थ शिवले पिएथे कालकूट नीलकण्ठ बनेर । हामी नीलकण्ठको धाममा छौं । जगत्को रक्षा गर नीलकण्ठ !

- **आ वात वाहि भेषजं वि वात वाहि यद्रपः**
  **त्वं हि विश्वभेषज देवानां दूत ईयसे ।** – अथर्ववेद ।

  हे वायु ! औषधिका थोपाहरू उडाएर ल्याऊ ! तिमी विश्वका औषध हौ र देवताका दूत हौ ।

–ooo–

# कुटुरो फुकाउँदा



## स्थायी स्तम्भहरू



ooo

# जहाँ जहाँ भारतीय सभ्यताको प्रभाव पर्‍यो, त्यो बुझ्न संस्कृत भाषा र वाङ्मय अपरिहार्य छ ।



✍ **महेशराज पन्त**

*(श्री महेशराज पन्तको जन्म वि.सं. २००१ सालको भदौ ४ गते काठमाडौंमा भएको थियो । उहाँले कुनै प्रकारको औपचारिक शिक्षा नलिई आफ्नै पिता स्व. नयराज पन्तले स्थापना गरेको आफ्नै ढङ्गको पाठशालाबाट असाधारण शिक्षा प्राप्त गर्नुभएको थियो । नेपाली, संस्कृत, अङ्ग्रेजी, हिन्दी, नेवारी, फ्रेन्च, जर्मन आदि भाषाका ज्ञाता महेशराज पन्तका नेपाली र अङ्ग्रेजी भाषामा १ दर्जनभन्दा बढी पुस्तकहरू प्रकाशित भएका छन् । उहाँले जर्मनीको ह्याम्वर्ग विश्वविद्यालयबाट संस्कृत शब्दकोष अमरकोषको टीकामा विद्यावारिधि गर्नुभएको छ । संस्कृत र संस्कृतिविद् पन्तले ६५० भन्दा बढी शोधलेख लेख्नुका साथै विद्यावारिधिका अनेकौं शोधार्थीहरूका शोधप्रबन्धको निर्देशक, विशेषज्ञ भई कार्य गर्नुभएको छ । उहाँ खोजमूलक 'पूर्णिमा' पत्रिकाको स्थापनाकालदेखि वर्तमानसम्म सम्पादक भई नेपाली भाषा र इतिहासको संशोधनमा महत्त्वपूर्ण योगदान पुर्‍याउँदै आइरहनुभएको छ । उहाँसँग हाम्रो पुरुषार्थका प्रतिनिधि श्री अर्जुनप्रसाद भट्टराईले भेट गरी केही जिज्ञासाहरू राख्नुभएको थियो । अन्तर्वार्ताकार भट्टराईले 'महेश गुरुको अन्तर्वार्ताका प्रश्नहरू' भनी दिएका प्रश्नहरूको उत्तर यहाँ प्रस्तुत गरिएको छ । -**सम्पादक**)*

**१. हजुरको जन्म बाल्यकाल र शिक्षा आर्जनका बारेमा संक्षेपमा बताइदिनुहोस् न ।**

❑ सबभन्दा पहिले त हाम्रो भाषामा चलेका 'अन्तर्वार्ता' जस्ता असंस्कृत शब्दको विषयमा म केही बोल्छु । अङ्ग्रेजी international र interview जस्ता शब्दमा परेका पूर्वपद झ्वाट्ट हेर्दा संस्कृत जस्तो देखिने उल्था अन्तर्राष्ट्रिय र अन्तर्वार्ता जस्ता शब्द चलाइएकोमा मलाई घोर

आपत्ति छ । अन्तः शब्दको अर्थ भित्र हुने हुनाले यस्ता शब्दले विवक्षित अर्थ दिँदैन । यसैले international लाई सार्वदेशिक र interview लाई कुराकानी भनेको खण्डमा भन्न खोजेको कुरा स्पष्ट हुन्छ जस्तो लाग्छ ।

अर्को, बहुवचनमा प्रयोग भएको अप्राणिवाचक शब्द त्यस शब्दभन्दा अगाडि आएको अर्को शब्दबाट त्यो संज्ञा बहुवचनमा प्रयोग भएको रहेछ भन्ने बुझिने हुनाले यहाँले माथि लेखेको महेश गुरुको अन्तर्वार्ताका प्रश्नहरूमा हरू हटाउनैपर्छ । यस विषयमा मैले अहिलेभन्दा ९ महीनाअगाडि लेखिसकेकोले त्यही हेर्न यहाँलाई आग्रह गर्छु । (२०७६।२।१२।१ मा नेपाल साप्ताहिक पत्रिका, १९ वर्ष ४२ अङ्कका ४२-४३ पृष्ठमा प्रकाशित प्रज्ञा-प्रतिष्ठानमा वङ्गबन्धु) ।

बाल्य शब्दले नै अभिप्रेत अर्थ बुझाउने हुनाले त्यसमा काल जोड्नुपर्दैन, त्यसैले पहिलो प्रश्नमा परेको बाल्यकाल शब्दमा पनि म सन्तुष्ट छैन । अर्जन शब्दको अर्थमा हाम्रो भाषामा आर्जन शब्द चलेकोले त्यसलाई तद्भव मान्न सकिने भएकोले आर्जनको विषयमा मेरो त्यति बिदि विप्रतिपत्ति छैन ।

अब प्रकृत विषयतर्फ लागूँ । मेरो जन्म वि.सं. २००१ भाद्रशुक्लद्वितीयाको दिन भदौ ४ गते भएको हो । मेरो बालककाल १० वर्षको उमेरमा भएको मातृवियोगबाहेक सामान्य नै थियो । तर, मैले पाएको शिक्षा असाधारण थियो । भरखरै मैले एक ठाउँमा बोले जस्तै मेरो शिक्षादीक्षा लाखौंलाख नेपालीको भन्दा भिन्नै किसिमले भयो (२०७६।११।४।१ मा अन्नपूर्ण अंकुर, १ वर्ष ५१ अङ्कको १६ पृष्ठमा प्रकाशित पढ्ने संस्कार बसालौं) ।

२. **गुरु नयराज पन्तले आधुनिक शिक्षा प्रणालीप्रति असहमति राख्दै प्राचीन गुरुकुलीय पद्धतिअनुसारको पठनपाठन हुनुपर्छ भनेर आफ्नै गुरुकुलीय पद्धतिअनुसारको पाठशाला खोलेको बुझिन्छ । सोही पाठशालामा अध्ययन गरेका विद्यार्थीहरू आज देशकै प्रतिष्ठित लेखक र विचारकहरू बनेका पनि छन् । आधुनिक शिक्षा पद्धतिको विशेष गरी कुन कुरामा गुरु नयराज पन्तको असहमति थियो ? कस्तो उद्देश्य राखेर गुरुले छुट्टै किसिमको पाठशालाको स्थापना गर्नुभएको बुझ्नुभएको छ ? उहाँको शिष्य र पुत्र दुबै भएकोले यस बारेमा केही प्रकाश पारिदिनुहुन्छ कि ?**

❏ तपाईंले भने जस्तै, मेरा बुबा नयराज पन्तले वर्तमान शिक्षाप्रणालीप्रति असहमति राख्दै आफ्नै ढङ्गको पाठशाला खोल्नुभएको थियो । मैले मूलतः त्यही पाठशालामा पढेको हुँ । तर, हाम्रो शिक्षापद्धति गुरुकुलीय पद्धतिअनुसारको भनी धेरैले सम्झेका छन् । तपाईँको धारणा पनि त्यही रहेछ । गुरुकुलीय पद्धतिमा धार्मिक रङ्ग चढेको हुन्छ भनी भनिरहनु नपर्ला । मैले अन्त लेखे जस्तै, गुरुकुल भन्नेबित्तिकै त्यस्तो पाठशालामा

धर्मसम्बन्धी विधिविधान त्यहाँ पढ्ने पढाउनेले अवश्यै गर्नुपर्ने हुन्छ । हाम्रो पाठशालामा भने त्यस्तो विधिविधानको दुम्सो पनि थिएन । बिहान भात खाई १० बजे पढ्न गयो, ४ बजे घर फर्क्यो, बस । हाम्रो पाठशालाको नियमावली अर्थात् हाम्रो उद्देश्य र कार्यप्रणालीमा पनि त्यस पाठशालाको सन्दर्भमा गुरुकुल शब्दको प्रयोग कहीँ भएको छैन । यस कारण गुरुकुल शब्दले हाम्रो पाठशालाको स्वरूप बुझाउन सक्दैन (२०६० मा काठमाडौंबाट आगम प्रकाशनद्वारा प्रकाशित, गुहनाथ पौडेलको औँसीको रातमा छापिएको मेरो औँसीको रात पढ्दा, ३ पृष्ठ) । अर्को शब्दमा भन्नुपर्दा, संस्कृतपाठशाला आध्यात्मिक रूपको हुनैपर्नेमा हाम्रो पाठशाला भने ऐहलौकिक अर्थात् आजभोलिको भाषामा भन्दा धर्मनिरपेक्ष थियो ।

आफूले प्रचलित शिक्षापद्धतिअनुसार शिक्षा पाएको हुँदा हुँदै पनि त्यस पद्धतिमा भएको खामीसँग बुबा पूरा जानिफकार हुनुभएकोले त्यस पद्धतिमा रहेका कमीकमजोरी हटाउन त्यो पाठशाला उहाँले खडा गर्नुभएको थियो । भनौँ कि, पाठ्यवस्तुको तृतीयांश उपस्थित गरे पनि पढाइ पूरा भएको ठानिने हुनाले विद्यार्थीकालपछि कार्यक्षेत्रमा उत्रिँदा त्यस खण्डित शिक्षापद्धतिले राम्रो काम नगरेको देखिएकोले बुबाले त्यो कदम उठाउनुभएको थियो । त्यसमाथि, संस्कृतका विद्यार्थीमा धेरथोर ग्रन्थ पढ्यो, त्यतिले नै काम चलायो, आफूले पढेको विद्याको मीमांसा गर्ने र ऐतिहासिक दृष्टिले त्यसतर्फ हेर्ने परम्परा थिएन । उता अङ्ग्रेजी पढ्ने विद्यार्थीको पनि अवस्था त त्यस्तै हो, तर उनीहरूलाई मीमांसाको र ऐतिहासिक दृष्टिको थोरै परिचय दिने चलन थियो । इतिहासकै पढाइको कुरा गरौँ । नेपालमा अङ्ग्रेजी शिक्षा चलेपछि इतिहासको पनि पढाइ चल्यो, इतिहासको तयारी पुस्तकबाट काम चलाइयो, तर इतिहासका आकर अर्थात् स्रोतको आधारमा आफूले पढेको पुस्तकको परख गर्न सक्ने पुरुषसम्पत् अर्थात् आजभोलिको भाषामा जनशक्ति निस्केन । त्रिभुवनविश्वविद्यालय खुलेको ६० वर्ष नाघिसक्यो । त्यहाँबाट इतिहासविषयमा चूडान्त पाण्डित्य हासिल गरी हजारौँ विद्यार्थी निस्किसके । तर प्राचीन अभिलेख पढ्न सक्ने र त्यसको अर्थ गर्न सक्ने एक जना विद्यार्थी पनि विश्वविद्यालयले निकाल्न सकेको छैन । हाम्रो पाठशालाले विद्याका थरी थरी हाँगाबिँगामा काम गर्ने उद्देश्य राखेको थियो, देश, काल र स्थितिले गर्दा अरू विषयमा त्यति काम गर्न नसके पनि नेपालको इतिहासको खोजीमा देशलाई परमुखापेक्षी हुनबाट बचाएको छ । नेपालको इतिहासका जति तथ्य बाहिर आएका छन्, त्यसमध्ये धेरैको श्रेय हाम्रै पाठशालालाई जान्छ । अर्को शब्दमा भन्नुपर्दा, नेपालको इतिहाससम्बन्धी जति तथ्य बाहिर आएको छ, त्यसको सयकडा असी हाम्रै खोजीबाट प्रकट भएको हो । त्यस पाठशालाको प्रकाशन शुरू हुनभन्दा अगाडि नेपालको

इतिहासका जे जति पुस्तक थिए, ती त कि विदेशीका थिए कि तिनीहरूकै किताबका अनुकृति थिए । हाम्रो प्रकाशन आउन थालेपछि क्रमशः चित्र बदलिँदै गयो र हाम्रो पाठशालाको खोजी इतिहासको विषयमा कोसेढुङ्गा बन्न पुग्यो । अर्को शब्दमा भन्नुपर्दा, हाम्रो पाठशालाको खोजीले नेपालको इतिहासको अनुसन्धानमा नेपालीकै हातमा गुरुकिल्ली आयो । यसले गर्दा विद्याको एउटा सानो शाखामा हामीले कीर्तिमान राख्न सक्यौं । यसै गरी विद्याका धेरै शास्त्रमा पठनपाठन भएको भए, देशकै गौरव बढ्थ्यो । हाम्रो पाठशाला फैलिएर गएको भए विद्याका केही विषय हाम्रो पाठशालाभित्र अन्तर्भूत हुन्थे । मैले एक ठाउँमा लेखे जस्तै, संस्कृतविश्वविद्यालय संशोधन-मण्डलले बनाएको गोरेटोबाट अघि बढ्न सक्थ्यो (२०७१।८।१।२ मा राजधानी, १४ वर्ष १५७ अङ्कको ७ पृष्ठमा प्रकाशित संस्कृतग्राम, संस्कृतविश्वविद्यालय र संशोधन-मण्डल) ।

**३. गुरु नयराज पन्तले नै इतिहास संशोधन मण्डल गठन गरी नेपालको इतिहासमा घटेका र प्रकाशमा नआएका घटनाहरूलाई सार्वजनिक गर्ने र इतिहासका बारेमा भएका भ्रमहरूलाई सप्रमाण सच्याउने कार्य गर्दै आउनुभएको बुझिन्छ । यो इतिहास संशोधन मण्डलको गठनको मुख्य उद्देश्य र यसले गरेका उल्लेख्य कार्यहरूको संक्षेपमा प्रकाश पारिदिनुहुन अनुरोध छ ।**

❑ पहिले हाम्रो संस्थाको नाउँकै विषयमा कुरा गरुँ । हाम्रो संस्थाको आधिकारिक नाउँ इतिहाससंशोधन-मण्डल नभई संशोधन-मण्डल हो । यस संस्थाको उद्देश्य खालि इतिहासको विषयमा मात्र काम नगरी विद्याका अरू अरू शाखाप्रशाखामा पनि काम गर्ने थियो । यहाँनिर यस संस्थाको नाउँसँग गाँसिएको संशोधन शब्दको विषयमा पनि केही कुरा गर्नुपर्छ । धेरैले सम्झे जस्तै, संशोधन शब्दको प्रयोग खालि सच्याउनु भन्ने अर्थमा मात्र भएको छैन । जसलाई उत्तरभारत र नेपालमा अनुसन्धान भनिन्छ, त्यसलाई बङ्गालमा गवेषणा र महाराष्ट्र र गुजरातमा संशोधन भनिँदो रहेछ । त्यसैको प्रभावमा होला, बुबाले हाम्रो संस्थाको नाउँ संशोधन-मण्डल भनी राख्नुभएको ।

**४. कतिपय आलोचकहरूको नेपालको इतिहास केवल शक्तिशालीहरूले आफू अनुकूल लेखेको इतिहास हो, वास्तविक इतिहास होइन भनेर आलोचना गर्ने गरेका पनि छन् । के नेपालको अहिलेको इतिहास शक्तिकेन्द्रको गुणगान मात्र हो ? यसमा यहाँको के दृष्टिकोण छ ?**

❑ सबभन्दा पहिले त यस प्रश्नमा परेको वास्तविक शब्दको विषयमै केही कुरा गरुँ । वस्तुबाट वास्तव शब्द बनेकोले त्यहाँ फेरि इक प्रत्यय लगाई वास्तविक बनाउँदा त्यो व्याकरणविरूद्ध हुन्छ ।

इतिहासका आकर अर्थात् स्रोत मूलतः शक्तिशालीले नै छोडेर गएकाले एक हिसाबले पहिलेका शक्तिशालीको विषयमा नै लेखिने गरेको कुरा सत्य हो । तर शक्तिशालीले छोडेर गएका सामग्रीबाट पनि सर्वसाधारणको विषयमा परिश्रम गरे केही मात्रामा बुझ्न नसकिने होइन । तपाईँको मूल प्रश्नको जवाफ यति उत्तरबाट मात्र पर्याप्त छैन । तपाईँको इङ्गित कुनै उद्देश्यविशेषको परिपूर्तिको लागि इतिहासको ज्ञानको दुरूपयोग भएकोतर्फ छ जस्तो मलाई लाग्छ । त्यस्तो काम ऐतिहासिक अर्थात् आजभोलिको भाषामा इतिहासकार कहलाएकाहरूले गरेका छन् । त्यसको टड्कारो दृष्टान्त चित्तरञ्जन नेपाली (वि.सं. १९८८ मा जन्म)का जनरल भीमसेन थापा र तत्कालीन नेपाल (२०१३ मा पहिलोपटक काठमाडौँबाट नेपाल–सांस्कृतिक संघद्वारा प्रकाशित) र श्री ५ रणबहादुर शाह (२०२० मा पहिलोपटक काठमाडौँबाट मेरी राजभण्डारीद्वारा प्रकाशित) पाइन्छ । हामीकहाँ इतिहास र गाथामा त्यति फरक नमानिने हुनाले यस्तो अवस्था आएको हो । श्री ३ चन्द्रको स्तुतिगान गरी बाबुछोरा जगन्नाथ र बैजनाथ सेढाञीले लेखी अहिलेभन्दा १०० वर्षअगाडि बम्बईबाट प्रकाशित चन्द्रमयूख र भूचन्द्रचन्द्रिका (१९७० मा प्रकाशित) अर्को उदाहरण हो । संस्कृतका स्तुतिकाव्यको परम्परामा धेरथोर शिक्षा पाएका सेढाञी बाबुछोराले लेखेको यस्तो कृतिलाई कालको हिसाबले क्षम्य मान्न सकिएला । तर अङ्ग्रेजी शिक्षा पाएका भनी कहलिएका चित्तरञ्जन नेपाली जस्ता मानिसको कलमबाट यस्ता कृति निस्कनु अक्षम्य अपराध हो । यस विषयमा मैले अन्यत्र खुलाएर लेखिसकेको हुनाले अहिले यतातिर बढी नजाऊँ (२०७१।१२।१५।१ मा राजधानी, १४ वर्ष २८९ अङ्कको ७ पृष्ठमा प्रकाशित इतिहासको अपव्याख्याको एउटा कडी– चित्तरञ्जन नेपालीको नजरमा रणबहादुर शाह र भीमसेन थापा) ।

**५. हाल नेपालमा संस्कृतभाषाको अवस्था कस्तो रहेको पाउनुभएको छ ? यसको उन्नयनका लागि कुन कुन पक्षले के कस्तो भूमिका निर्वाह गर्नुपर्ने जस्तो लाग्छ ?**

❑ छुच्चो भई भन्नुपर्दा, नेपालमा मात्र होइन, भारतमा पनि संस्कृतशिक्षा मर्न मात्र बाँकी छ । प्राचीन ढङ्गको कण्ठस्थीकरण गर्ने र ग्रन्थको व्युत्पत्ति गर्न सक्ने पद्धतिको ध्वंसको अलिकति मात्र अवशेष अब बाँकी छ । उता पश्चिमाहरूले विकास गरेको मीमांसात्मक र ऐतिहासिक पद्धतिको पनि मूल तत्त्व नै संस्कृतशिक्षाको डाडुपन्यू हातमा लिएर बसेकाहरूलाई पत्तै छैन । खालि संस्कृतशिक्षा धर्मकर्मसँग जोडिएकोले र अहिले पनि ठूलै समुदाय धार्मिक भएकोले र त्यो समुदाय शासकको सिंहासनमा बसेकाहरूको ठूलो भोट ब्याङ्क भएकोले संस्कृतशिक्षाको दुम्सो बाँकी रहेको हो ।

संस्कृतशिक्षाको उन्नयनको लागि नयराज पन्तले वि.सं. १९९७ मा परिकल्पना गरेको जस्तो पाठशालाको विकल्प छैन ।

**६. यहाँले विदेश जर्मनी आदि देशमा गएर अध्यापन अनुसन्धान गर्नुभयो । त्यहाँ संस्कृत भाषा र पूर्वीय धर्म-संस्कृतिको अवस्था कस्तो छ र यस बारेमा पाश्चात्यहरूको के कस्तो दृष्टिकोण रहेको पाउनुभयो ?**

❑ सबभन्दा पहिले पूर्वीय शब्द व्याकरणसम्बन्धी र भुवनकोशीय दुवै दृष्टिले ठीक छैन । पूर्व शब्दमा ईय प्रत्यय नलाग्ने भएकोले व्याकरणको दृष्टिले यो अशुद्ध छ । किनभने, भुवनकोशीय दृष्टिले हेर्दा भारतवर्षभन्दा पूर्व पनि चीन र जापान आदि देश भएकाले यो शब्द हामीले सम्झेर आएको अर्थमा चलाउन मिल्दैन । यसलाई भारतीय किंवा दक्षिण-एशियाली शब्दले व्यवहृत गर्नुपर्छ ।

पाश्चात्यहरूको संस्कृत पढ्नाको उद्देश्य हाम्रोभन्दा निकै फरक भएकोले हाम्रो यहाँ प्राथमिक कक्षामा राम्रोसँग पढ्ने विद्यार्थीको जति पनि संस्कृतभाषामा अधिकार पश्चिमा विद्वान्हरूको हुँदैन भन्दा त्यति बिदि फरक पर्दैन । अपवादमा धेरै नै थोरै मात्र पाश्चात्त्य विद्वान् पर्ने हुनाले संस्कृतमा उनीहरूको अधिकार नहुनु नियम हो, अपवाद होइन ।

नेपाली पण्डित सरदार छविलाल सूरि (वि.सं. १८९६-१९६४)ले संस्कृतमा लेखेका केही पुस्तक छन् । उनले ती पुस्तक यूरोपका प्रसिद्ध संस्कृत विद्वान् फ्रीद्रिख म्याक्स म्यूलर (वि.सं. १८८०-१९५७)कहाँ पठाएछन् । छविलालले संस्कृतमा लेखेको पुस्तक पाएर म्याक्स म्यूलरले उनको प्रशंसामा चिठी पठाएछन् । छविलाल तात्कालिक नेपाली समाजमा विद्वान्को रूपमा न कहलिएका थिए, न उनका ग्रन्थ नै उच्च कोटिका छन् । पश्चिममा संस्कृतविद्याको उत्कर्ष छैन भन्ने प्रसङ्गमा बुबाले छविलालका लेखमा परेका च्युतसंस्कृतिदोषको विषयमा लामै लेख लेख्नुभएको छ (२०३३ मा पूर्णिमा ३४ पूर्णाङ्कका ८३-९४ पृष्ठमा प्रकाशित वेदाङ्गज्यौतिष र लिच्छवि-कालगणना र त्यही अङ्कका १२८-१३५ पृष्ठमा प्रकाशित सरदार पण्डित छविलाल ढुङ्गेलको सुन्दरचरित नाटकमा परेका व्याकरणविषयका केही अशुद्धिको संशोधन) ।

हाइडल्बर्गविश्वविद्यालय अहिले जर्मनीमा संस्कृतविद्याको लागि ज्यादै प्रसिद्ध छ । त्यहाँ नेपालको पुराविद्याको विषयमा पनि धेरै वर्ष यतादेखि काम भइरहेछ । तर त्यहाँका अन्वेषकहरूमा संस्कृतभाषाको आवश्यक ज्ञान नहुँदा कामको तह राम्रो छैन । साधारण संस्कृतमा अनुष्टुभ् छन्दमा लेखिएको कर्मकाण्डको किताबको राम्रोसँग उल्था गर्नसम्म सक्ने पुरुषसम्पत् पनि त्यहाँ छैन । पश्चिममा संस्कृतविद्याको पहिलेको र

अहिलेको अवस्थाको विषयमा मैले पटक पटक लेखिसकेको छु (२०६९।७।१।४ मा राजधानी १२ वर्ष १३७ अङ्कको ७ पृष्ठमा प्रकाशित यूरोपियन संस्कृत, २०७०।८।१६।१ मा राजधानी १३ वर्ष १७० अङ्कको ७ पृष्ठमा प्रकाशित जर्मनीमा संस्कृत, २०७४।९।८।७ मा राजधानी १७ वर्ष १९२ अङ्कको ९ पृष्ठमा प्रकाशित संस्कृतशिक्षातर्फ फेरि एकपल्ट) । यस कारण हाम्रो यहाँ परापूर्वकालदेखि चलेको पद्धतिअनुसार संस्कृतभाषा र वाङ्मयमा अधिकार प्राप्त नगरी अनुसन्धान थाल्दा त्यो एकाङ्गी हुन्छ । हो, पश्चिममा ५०० वर्षयतादेखि चलेको मीमांसात्मक र ऐतिहासिक पद्धतिसँग संस्कृतभाषा र वाङ्मयलाई जोड्न सके त्यसको प्रतिफल राम्रो हुन्छ । त्यो गर्न भने पश्चिमाहरूलाई गाह्रो छ । किनकि हाम्रो विद्यासम्पत्तिसँग विश्वविद्यालयमा खुट्टा टेकेपछि मात्र उनीहरू परिचित हुन्छन् । त्यसपछिको विश्वविद्यालयीय जीवनमा केही वर्ष उनीहरूले हाम्रो यतातिरको विद्यामा बिताई पढाइ पूरा गरिसक्नुपर्छ । यस कारण हामीले उनीहरूबाट धेरै अपेक्षा गर्नु हुँदैन, खालि उनीहरूको राम्रो पद्धतिको मात्र अनुसरण गर्नुपर्छ ।

संस्कृतभाषा र हाम्रो धर्मसंस्कृतिको अवस्था त्यहाँ कस्तो छ भन्ने तपाईंको प्रश्नको उत्तरमा के भन्न सकिन्छ भने पश्चिमाहरू हाम्रो धर्म र रहनसहनका अनुयायी होइनन्, उनीहरू त खालि मीमांसात्मक र ऐतिहासिक दृष्टिले त्यस विषयमा अनुसन्धान गर्छन् । भाषा र शास्त्रको यथोचित ज्ञानको अभावमा त्यो अनुसन्धान सत्यको कति नजीक हुन्छ भन्ने कुरा अर्कै हो ।

**७. आफूलाई भाषाविद् भन्ने कतिपय मानिसहरू संस्कृत मृत भाषा हो । यसको पठनपाठनमा राज्यले खर्च गर्नु हुँदैन भनेर पनि भन्ने गरेका छन् । उनीहरूको भनाइप्रति यहाँको के प्रतिक्रिया छ ?**

❑ कठोर रूपले भन्नुपर्दा अहिले संस्कृत मृत भाषा नै हो । किन मृत भाषा भने केही ठाउँमा पुनरूत्थानवादीहरूले संस्कृत बोल्दैमा यो भाषा जन्मभाषा अर्थात् मातृभाषा होइन । तर बोलीचालीमा मात्र रहेका भाषा कालान्तरमा हराए जस्तो गरी हराएको भाषा भने होइन, हजारौं वर्षदेखि विद्वत्भाषाको रूपमा रही विपुल वाङ्मय समेटेको यो भाषा जीवित भाषा नै हो । यस कारण संस्कृतभाषा कसैको जन्मभाषा नभए पनि यसको पठनपाठनमा राज्यले खर्च गर्न हुँदैन भनेर भन्न मिल्दैन, किनभने भारतवर्षभरका अर्थात् दक्षिण एशियाको मात्र होइन, जहाँ जहाँ भारतीय लोकयात्रा अर्थात् सभ्यताको प्रभाव पर्‍यो, त्यो बुझ्न संस्कृतभाषा र वाङ्मय अपरिहार्य छ । साँच्चै भन्ने हो भने, संस्कृतभाषाको पठनपाठनबाट शिल्पशास्त्र अर्थात् विज्ञानसँग पनि यसलाई जोड्न सकिन्छ । हामीकहाँ अहिले बचेखुचेका

आयुर्वेद र ज्यौतिषमा हजार वर्ष जति हुन लाग्यो, उन्नति हुन त परै जाओस् अवनति हुँदै गइरहेको छ । हामी जहाँ पुगेर अड्क्यौँ, त्यहाँबाट ती ती क्षेत्रमा शास्त्रको उत्थान गर्न संस्कृत अत्यावश्यक छ । तर, अहिले जुन ढङ्गले संस्कृतको पठनपाठन चलिरहेछ, त्यसबाट खास उपलब्धि छैन ।

**८. हाल हाम्रो धर्म र संस्कृतिमाथि विदेशी धर्म र संस्कृतिको प्रभाव परिरहेको पाइन्छ । यसले के कस्ता सकारात्मक र नकारात्मक परिणाम ल्याएको महसुस यहाँले गर्नुभएको छ ?**

❑ बाहिरिया प्रभावले हाम्रो आफ्नो चिन्तनप्रणाली नै ध्वस्त भएकोले हाम्रो भाषामा संस्कृति, सकारात्मक, नकारात्मक जस्ता शब्द चलनचल्तीमा आएका हुन् । यसैले यस्ता शब्दलाई हाम्रो पद्धतिअनुसार कसरी व्यक्त गर्नुपर्ने हो, यस विषयमा संस्कृतज्ञहरूले चिन्तन गर्नु जरूरी छ । विजेताको रहनसहनको प्रभाव विजितमा पर्ने हुनाले यसका राम्रा नराम्रा दुबै खालका प्रभाव पर्छन् । हरेक मानिसको स्वतन्त्रताको कदर गर्ने पद्धति हाम्रो गृहस्थधर्मको परिपालनासँगै गर्न सके राम्रो हुने हो । हामीकहाँ संस्कृतविद्याअन्तर्गत धर्मशास्त्रको पढाइ निरन्तर चलिरहेको छ । धर्मशास्त्र भनेको कानून न हो । धर्मशास्त्रमा पहिलेपहिलेदेखि चलेर आएका नियममा जमानाअनुसार परिवर्तन हुँदै जान्थ्यो र त्यो कालसापेक्ष बन्थ्यो । असवर्ण विवाहबाट जन्मेका सन्तानको स्थितिको विषयकै कुरा गरुँ । असवर्ण विवाह पहिलेपहिलेको अनुपातमा धेरै नै बढिसकेको छ । वर्तमान शासनले जातपातको विषय ऐनबाट खारेज गरे पनि घरघरमा अझैं त्यो हटिसकेको छैन । यस कारण धर्मशास्त्रज्ञहरूको दृष्टि जातिनिर्णयतर्फ पनि जानुपर्छ ।

**९. हजुरले विभिन्न विद्यावारिधि आदि अनुसन्धानात्मक कार्यको निर्देशक, विशेषज्ञ र बाह्यविशेषज्ञ आदि भएर कार्य गरिरहनुभएको छ ? हालको नेपालको अनुसन्धनात्मक कार्यबाट कत्तिको सन्तुष्ट हुनुहुन्छ ?**

❑ सबभन्दा पहिले विद्यावारिधि शब्दकै कुरा गरुँ । यो शब्द पीएच्डी.को पर्यायमा चलाइएको छ । पीएच्डी. हाम्रो पद्धतिअनुसारको होइन, पाश्चात्त्य पद्धतिअनुसारको हो । यस कारण पीएच्डी. नै नभनी विद्यावारिधि किन भन्नुपर्‍यो ? त्यस्तै अहिले मास्टर्स पास गरेकालाई स्नातकोत्तर भन्ने गरिएको छ । त्यो पनि ठीक छैन, किनभने पूरा पढाइ सिद्ध्याएको मानिसलाई हाम्रो पद्धतिमा स्नातक भनिन्छ । यस पद्धतिअनुसार स्नातकोत्तर हुनै सक्दैन । पाश्चात्त्य पद्धतिअनुसार विद्याको मापन गर्न थालेपछि हाम्रो पद्धतिमा नभएका बीए, एम्ए., पीएच्डी. शब्द बकितम्मा चल्दा चल्दै पनि लिखितम्मा किन नचलाउने ? यो मैले हाम्रो परम्पराअनुसार भनेको हुँ । पहिलेपहिले हाम्रो भाषामा विदेशी शब्दलाई पनि

पचाई आफ्नो बनाउने चलन थियो । ज्यौतिषकै कुरा गरुँ । हेलि, केन्द्र जस्ता शब्द संस्कृतका होइनन्, ग्रीक भाषाका हुन् । तर ती ज्यौतिषशास्त्रमा आफ्नै भएर चलेका छन् । कति अरबी-फारसी भाषाका शब्द पनि हाम्रो ज्यौतिषशास्त्रले पचाएको छ । जीवित भाषाको लक्षण आफूसँग नभएका विदेशी शब्द निःसङ्कोच भित्र्याउन सक्नुपर्छ ।

अब प्रश्नको उत्तर दिनतिर लागूँ । एक शब्दमा भन्नुपर्दा म हालको नेपालको अनुसन्धानात्मक कार्यबाट कत्ति पनि सन्तुष्ट छैन । यसमा सुधार गर्नुपर्ने कुरा मैले माथि माथि सोधिएका कुराको जवाफमै भनिसकेकोले यहाँ दोहऱ्याइरहनु नपर्ला ।

**१०. गुल्मीको किरण पुस्तकालयबाट प्रकाशित हुने हाम्रो पुरुषार्थले धेरै वर्ष पहिले हजुरका पिताजी नयराज पन्तको अन्तर्वार्ता पनि छापेको थियो । यस पत्रिकाको बारेमा हजुरलाई के कति ज्ञान छ र यसलाई केही सल्लाह सुझाव दिनु छ कि ?**

❑ हाम्रो पुरुषार्थको लागि यस पत्रिकाका सम्पादकहरूले बुबासँग गरेको कुराकानी यही पत्रिकाको ३५ सम्पूर्णाङ्कमा वि.सं. २०५४ मा प्रकाशित भयो । यो मैले पहिल्यै पढेको थिएँ, अहिले फेरि पढेँ । यो पत्रिका सबभन्दा पहिले म प्यारिसमा सीएन्आर्एसमा रहँदा देखेको हुँ । त्यो कुरा बुबासँग गरेको कुराकानीको प्रसङ्गमा मैले भनेको भनी त्यहाँ छापिएको पनि रहेछ । यहाँहरूले त्यसका केही अङ्क बुबालाई दिनुभएको रहेछ र भेट्टाए जति बागबजारको हिमालयन बुक सेन्टरबाट पनि म किन्ने गर्थें । पछि तपाईंले मसँग पीएच्डी. गर्दा केही अङ्क ल्याइदिनुभयो । अहिले बजारमा यो पत्रिका म देख्दिनँ, भएका जति सह्मालेर राखेको छु । यो पत्रिका मलाई मन पर्छ, कहीं कहीं रक्सीको प्ररोचना अर्थात् विज्ञापन देख्दा मन खट्कन्छ । त्यो पनि म सहन्छु नै, किनभने पुरुषार्थमध्ये एक कामको वर्धन रक्सीबाट हुने हुनाले त्यो क्षम्य छ ।

**११. अन्तमा हामीले सोध्न छुटेको र हजुरले भन्नै पर्ने केही विषय छ कि ?**

❑ सोध्न छुटेका र भन्न छुटेका कुरा प्रशस्त छन् । पछिपछिको लागि तिनलाई थाँती राखूँ ।

**१२. आफ्नो अमूल्य समय दिई अन्तर्वार्ता दिनुभएकोमा यहाँलाई धन्यवाद छ ।**

❑ हृदय खोलेर कुरा गर्ने अवसर दिनुभएकोले यहाँलाई पनि त्यत्तिकै धन्यवाद छ ।

ooo

# महाभारतकी एक असाधारण नारी पात्र : योजनगन्धा कृष्णा

✍ **प्रा.डा. बाबुराम झवाली**
**बुटवल बहुमुखी क्याम्पस**
**रूपन्देही**

महाभारतका नारी पात्रमा सबभन्दा असाधारण पात्रको नाम हो- पाञ्चाल नरेश द्रुपदकी छोरी अर्थात् द्रौपदी । उनका हजुरबाबाको नाम पर्षत थियो त्यसैले द्रौपदीको एक नाम पर्षती पनि हो । द्रौपदीको एक दाजु शिखण्डी नपुंसक थियो अनि अर्को जुम्ल्याहा दाजु धृष्टद्युम्न कुरुक्षेत्र युद्धको सेनापति । पाञ्चाल देशकी छोरी भएकोले उनको एक नाम पाञ्चाली हो । द्रौपदीको नाम र देवी सीताको नाममा समानता छन् । सीताको जन्म स्थान हलोले जोतिएको जमीन हो । जसलाई संस्कृतमा सीता (नेपालीमा सियो) भनिन्छ । यज्ञबाट जन्म भएकोले उनको एउटा नाम हो याज्ञसेनी । यज्ञको अग्नि जस्तो धप्धप् बलेको आकर्षक रूप । द्रौपदी र भगवान् कृष्णको रूप, रंग, र सुन्दरता त्यसबेलाको सबभन्दा प्रसिद्ध रूप थियो । मानौं कुनै कालो मानिसको रंग गोरो हुन जाओस् छालाको रंग जस्तो । नीलो स्वच्छ आकाशमुनिको गहिरो समुद्रलाई हेरेजस्तो । पानी भरिएको श्यामल बादल जस्तो, कालो, नीलो, सेतो मिश्रित । छालामा एउटा गहिराइ जस्तो । अनुहारमा हेर्‍यो भने हेरिरहूं जस्तो मोहनी लगाउने रंग ।

द्रौपदीको एक नाम सैरन्ध्री पनि हो । द्रौपदी एक उच्चकोटिकी गृहिणी थिइन् । उनी रनिवासलाई सफा सुन्दर राख्न, सजाउन, बैठक र शयन कक्ष सजाउन तथा महिलाहरूको शृङ्गार गर्ने सबै कलामा निपुण मानिएकी छन् । फूल सजाउन, माला बनाउन उनी सिपालु थिइन् । त्यसैले एक नाम मालिनी पनि हो । यसै सीपले गर्दा उनले राजा विराटको रनिवासमा नोकरी गर्न पाएकी हुन् । नित्ययुवती पनि उनको नाम हो । उनको यौवन मृत्युपर्यन्त सधैं एकनासको थियो । एउटा उदाहरणबाट द्रौपदीका जीवनको जटिलता बुझ्न सकिन्छ । भनिन्छ, महाभारत धारावाहिकमा बहुपति द्रौपदीको अभिनय गरेबापत रूपा गाङ्गुलीले अनेक तनाव झेल्नुपर्‍यो । अन्तिममा उनका पतिले समेत उनको त्याग गरिदियो ।

द्रौपदीको शरीरबाट मधुर मनमोहक सुगन्ध निस्किन्थ्यो । गोपीचन्दन वा अष्टगन्धा जस्तो । त्यसैले उनको एक नाम योजनगन्धा पनि हो । सुन्दरताका सबै गुण भएकोले उनलाई परमसुन्दरी पनि भनिन्छ ।

कुरुक्षेत्र विजयी महारथी, ज्ञानी पतिहरूमा कोही पनि असन्तुष्ट नरहनु र प्रत्येक प्रति उनको पूर्ण समर्पण देखिनु अझ अनौठो चरित्र हो । युधिष्ठिरसंग धर्मशास्त्रको चर्चा, भीमसंग भोजन र आहारको चर्चा, अर्जुनसंग युद्धशास्त्रको चर्चा, पाँच भिन्न प्रकृतिका मानिससंग भिन्न प्रकृतिको स्तरपूर्ण व्यवहार । सबैलाई थाहा छ अर्जुनले सुभद्रासंग एक पटक चक्रव्यूहको चर्चा गरेका थिए । त्यस बेला सुभद्रालाई अल्छी लागेर निदाइन् । एक स्त्रीलाई युद्ध र हतियारमा के रुचि ? सुभद्राको अल्छी सबैले बुझ्न सकिन्छ तर द्रौपदीको रुचि र प्रत्येक विषयमा रहेको ज्ञान बुझ्न सकिंदैन । द्रौपदीलाई आफ्ना पतिहरूसँग कुनै पनि विषयको चर्चामा कहिल्यै अल्छी लागेको घटना महाभारतमा छैन । यति मात्र होइन नकुल र सहदेवलाई एक अभिभावकीय सुरक्षा प्रदान गरेर उनीहरूको जीवनमा आमाको कमीसमेत द्रौपदीले पूरा गरिदिएकी छन् ।

द्रौपदीले अर्जुनसंग विशेष प्रेम गर्थिन् तर वास्तविकता के हो भने सबभन्दा कम समय बिताउन पाएको पनि अर्जुनसंगै हो । कहिले अर्जुनको स्वनिर्वासन, कहिले साधनाकाल र कहिले अर्जुनले आफैं लिएको शपथले अर्जुनसँग उनको बसाइ सबभन्दा कम रह्यो । कहाँसम्म भने जब राजा विराटको दरबारमा दुबैले सँगै दिन बिताउन पाए त्यसबेला अर्जुनलाई नपुंसक हुने शाप थियो । यस्ता असह्य घटनाहरू द्रौपदीले सहन गरेको विवरण महाभारतमा छ । इतिहासमा, कल्पनामा यति अनौठो चरित्र यसअघि पनि थिएन र त्यसपछि पनि हुने छैन ।

महाभारतका दस शीर्ष पात्रको सूची बनाउँदा त्यसमा द्रौपदीको नाम अवश्य आउँछ । तर मैले भने महाभारतका शीर्ष तीन पात्रमा उनको नाम राख्छु । निश्चित रूपमा पञ्च पाण्डवभन्दा उनको नाम माथि हुन्छ ।

वाक्कलामा उनको बराबरी गर्न सक्ने कोही थिएन । तर यसका साथै उनी चतुर तर्कशास्त्री पनि थिइन् जसका तर्कका अगाडि भीष्म, द्रोण र कहिले काहीं भगवान् कृष्ण पनि नाजवाफ हुन्थे ।

दुशासनले जुआको खेल चलेका ठाउँमा द्रौपदीलाई कपाल तानेर घिसार्दै लैजाँदा उनले अनेक अनुनय विनय गरिन् । हस्तिनापुरकी रानीलाई जुआ खेल्ने ठाउँमा नलैजान आफ्नो देवरलाई अनुरोध गरिन् । नमानेपछि उनले महिलाको विशेष अधिकारको रूपमा आफू रजोवती भएकीले सार्वजनिक नगर्न अनुरोध गरिन् । तर पनि उनलाई जबरजस्ती दरबार लगियो । त्यहाँ उनले सबै विद्वान्हरूसंग एउटा प्रश्न गरिन्- 'मेरा पतिले जुआमा आफू हारेपछि मलाई दाउमा थापेका हुन् । के कुनै दासलाई अर्काको बारेमा निर्णय लिने अधिकार छ ?'

यस कुराको जवाफ कसैले पनि दिन सकेन । भीष्म, द्रोण र धृतराष्ट्र मात्र होइन विद्वान् विदुर पनि चूप रहे । तर दुर्योधनको सबभन्दा कान्छो भाइ

विकर्णले भन्यो- आफू हारिसकेपछि युधिष्ठिरलाई अर्काको मालिक रहने अधिकार हुँदैन । त्यसैले द्रौपदीलाई जुआमा थाप्ने अधिकार उनीसँग छैन ।

तथापि द्रौपदीलाई अपमानित गरियो । यसपछि क्रुद्ध द्रौपदीले दुशासनले लुछेको आफ्नो त्यो कपाल तेह्र वर्ष कोरिनन् । भीमले दुशासनको छाती फोरेर रगतले उनको कपाल भिजाएपछि बल्ल उनले कपाल कोर्न थालेकी हुन् । उनको प्रतिशोध यति तीव्र थियो ।

तर आज्ञाकारी कति भने सासूले पहिलो रातमा पाँचभाइले बाँडेर लेऊ भन्दा कुनै पनि प्रतिरोध नगरी चूपचाप स्वीकार गरिन् । जबकि उनलाई केवल अर्जुनले जितेका थिए । दरबारमा उनले अर्जुनलाई मात्र वरमाला पहिस्र्याएकी थिइन् ।

जीवनको उत्तरार्धमा उनले के बुझिन् भने प्रतिशोध राखेर मात्र शान्ति प्राप्त हुँदैन । त्यसैले आफ्ना पाँचवटा युवा पुत्रको टाउको काट्ने पापी अश्वत्थामालाई क्षमा गरिदिइन् । क्षमा नै शान्ति प्रदायक हुन्छ ।

दरबारमा रानी हुँदा मात्र होइन, वनवासको समयमा समेत पाण्डवहरूलाई भेट गर्न आउने सबै अतिथिहरू (क्रोधी दुर्वासासमेत) लाई सन्तुष्ट गरेको उदाहरणले उनको उच्च गृहव्यवस्थापन क्षमतालाई बुझाउँछ ।

सत्यभामाले भगवान् कृष्णलाई निकै माया गर्थिन् । तर उनलाई लाग्थ्यो भगवान् कृष्णले अरू रानीलाई बढी माया गर्नुहुन्छ । अनि उनले द्रौपदीलाई सोधिन्- 'तपाईंका पाँच पति छन् । प्रत्येक तपाईंसँग सन्तुष्ट छन् । हामी आठ जनाका पति भईकन पनि हामीसंग कृष्ण असन्तुष्ट रहे जस्तो लाग्छ । तपाईंले मोहनी लगाएर पतिहरूलाई वशमा राख्नु भएको हो ? कृपया मलाई पनि सिकाइदिनुस् ।'

द्रौपदीले भनिन्- 'पतिलाई मोहित गराउन टुनामुना गर्ने गल्ती कदापि नगर्नू । टुनामुनाले उनीलाई हानि गर्न सक्छ र तिमीलाई पनि केही फाइदा हुँदैन । मेरो अनुभव के छ, त्यो सुन-आफूभित्रको अहंकारलाई फालेर पतिहरूमा आफ्नो नारीत्वलाई पूजाको फूल झैं निष्काम प्रेमको जलले सुरभित गरेर पोखिदिन्छु । कुनै पनि परिस्थितिमा ईर्ष्यातुर नहुने चेष्टा गर्छु । पतिका अगाडि सधैं सहज रहने प्रयास गर्छु । पतिको भोजन र शयनभन्दा पहिले कहिल्यै पनि भोजन शयन ग्रहण गर्दिनँ, उनीहरू जाग्नुभन्दा पहिल्यै म जाग्छु । उनीहरूको सेवाको काममा कहिल्यै अल्छी गर्दिनँ । टाढाबाट यात्रा गरेर फर्के भने उनीहरूका निम्ति आसन, जल, भोजन, र विश्रामको व्यवस्था तत्काल प्रस्तुत गरिदिन्छु । पतिहरूको प्रिय भोजन आफैं बनाएर खुवाउँछु । आफ्नो दुःख र दुश्चिन्ताको बोझ उनीहरूमाथि पर्न दिन्नँ । बरू उनीहरूको चिन्तामा सहभागी बनेर आफ्नो विचार र सल्लाह दिन्छु । प्रसाधन, स्नान अनि वेशभूषाको विन्यासमा अनावश्यक समय र धन लगाउँदिनँ । पति टाढा छन् भने सौन्दर्य प्रसाधन गर्दिनँ ।

उनीहरूले मन नपराउने कुरालाई म पनि मन पराउँदिनँ । उनीहरूको इच्छा अनिच्छा, रुचि, अरुचि सबै नबताईकनै बुझ्छु । उनीहरूसँग व्यर्थ बहस गर्दिनँ । चालचलन, आचारविचार, भोजन, र विश्राममा संयम राख्छु । सबभन्दा ठूलो कुरा, म उनीहरूमाथि कहिल्यै सन्देह गर्दिनँ । न उनीहरूमाथि कहिल्यै गुनासोको पहाड खन्याउँछु । मैले उनीहरूसंग कुनै कुरा गोप्य राख्दिनँ । पतिको वंश वा माता कुन्तीको बारेमा एक शब्द पनि भन्दिनँ । पाँचैप्रति समभाव र समता निर्वाह गर्छु । कुनै एउटाको दोष गुणबारे अर्कोसंग भन्दिनँ । पतिले दासीलाई कुनै आदेश दिनुभन्दा पहिले नै म तत्पर हुन्छु । दासदासीहरू भए पनि घरको काममा निरन्तर रेखदेख गर्छु । दासदासीले समेत खाए नखाएको हेरविचार गर्छु । माइतको ठाट, विलास र बडप्पनको कुरा कहिल्यै पनि पतिहरूसंग गर्दिनँ । कुनै अन्य पुरुषको धन, ऐश्वर्यको तुलना गरेर आफ्नो भाग्यलाई धिक्कार्ने काम पनि गर्दनँ । कहाँसम्म भने पतिका अघि कुनै अन्य नारीलाई आफूभन्दा अधिक सौभाग्यवती छ भन्ने बखान गर्दिनँ । आफ्ना अजस्र कामनाहरूलाई पतिहरूसमक्ष राखेर उनीहरूलाई तनाव पुर्‍याउने काम गर्दिनँ । निर्जनमा अन्य पुरुषसंग समय बिताउँदिनँ । नराम्रो प्रकृतिका स्त्रीहरूसंग संगत गर्दिनँ । पतिसमक्ष स्वयंलाई स्वतेज, सफा, सुन्दर, र चिरयौवना राख्ने प्रयास गर्छु । पतिको कारण नै हामी सन्तानवती छौं, सौभाग्यवती छौं, गृहकर्ता र सुखी छौं । उनैले गर्दा सुरक्षा र सामाजिक मान छ । पतिहरूको सुख मात्र हाम्रो होइन उनको दुःख पनि हाम्रो हो । दुःखमा, विपत्मा, पतिलाई सहज साहस दिनु शक्ति दिनु स्त्रीधर्म हो । ध्यान राख योग्य पत्नी बन्नु पनि साधनाकै फल हो ।' द्रौपदीको यस विशिष्ट चरित्रले गर्दा नै उनीलाई सती द्रौपदी भनिन्छ ।

द्रौपदीले महाभारतमा विभिन्न प्रसंगमा बोलेका कुराले उनको दार्शनिक व्यक्तित्वको झलक पाइन्छ–

- आचार्य, ऋत्विक, कुटुम्बी, भूपति, सर्वज्ञानप्रिय व्यक्तिहरू प्रथम सम्मानका अधिकारी हुन्छन् ।
- पूर्णिमापछि अमावस्या आउने निश्चित हुन्छ तर सुख पछि दुःख कुन क्षणमा आउने छ यो कसैले जान्दैन ।
- स्त्री आनन्ददात्री हुन्छिन् । आफ्नो वक्षबाट अमृतदान गर्ने शक्ति केवल स्त्रीमा हुन्छ । पुरुषमा त्यो शक्ति हुँदैन । त्यसैले कुनै प्रियलाई भरपेट भोजन गराउँदा स्त्रीलाई आफ्नो सन्तानलाई भरपेट दूध खुवाए झैं आनन्द प्राप्त हुन्छ ।
- विना प्रयत्न पाएको धनको आनन्द जसरी नष्ट हुन्छ उसै गरी प्रेमीका निमित्त त्याग र उत्सर्गविनाको प्रेम प्राप्त गर्नाले नारीको महिमा कम भएर जान्छ ।

- केवल मृदुता र उग्रता देखाउने मानिस सुपुरुष हुनसक्दैन । पुरुषले जहाँ आवश्यकता पर्छ मृदुता, र जहाँ आवश्यकता पर्छ त्यहाँ उग्र हुनै पर्छ ।
- नारीका निम्ति जस्तै पुरुषका निम्ति पनि यदि परस्त्रीको कामना अक्षम्य अपराध अनि लज्जाजनक कुरा भए संसारमा यति पाप, व्यभिचार हुने थिएन ।

मत्स्यवेधपछि पाण्डव परिवारको मर्यादा बनेर आएकी द्रौपदीले हरेक सुखदुःख, मृत्युपर्यन्त पतिहरूलाई साथ दिइन् । बरू, स्वर्गारोहण पर्वमा उनी भुईंमा पछारिए पछि पाँचै जना द्रौपदीतिर हेर्दै नहेरीकन अगाडि बढे भन्ने कथा छ । निष्पक्ष दृष्टिले भन्ने हो भने इन्द्रप्रस्थ दरबारमा दुर्योधनमाथि अचानक गरेको हाँसो बाहेक द्रौपदीले सानोभन्दा सानो गल्ती पनि गरेकी छैनन् । जसले पनि महाभारत पढ्छ, द्रौपदीको निष्कलंक जीवन चरित्रले उसलाई आकृष्ट नगरी रहन सक्दैन ।

द्रौपदीको चरित्र कति विशाल छ भने उनलाई जुन कोणबाट हेरेर पनि साहित्य रचना गर्न सकिन्छ । द्रौपदीमाथि बंगाली, ओडिया, अंग्रेजी, नेपालीमा कथा र नाटक रचना गरिएका छन् । एल्फ हिल्टेबिटलको उपन्यास द कल्ट अफ द्रौपदी, सुचित्रा सेनको उपन्यास द प्यालेस अफ् इलुजन्स, महाश्वेता देवीको बंगालीभाषाको उपन्यास द्रौपदी सबै एकभन्दा एक उत्कृष्ट कृतिहरू मानिएका छन् ।

अहिले नेपालीमा दुई कृतिहरू उपलब्ध छन् । पहिलो हो, नीलम कार्कीको मौलिक उपन्यास चीरहरण । यसमा महाभारतका सबै महिला पात्रहरूको एक सम्मेलनको चर्चा छ । यो रोचक र घटना प्रधान छ । दोस्रो हो, डा. प्रतिभा रायको ओडिया भाषाको उपन्यास याज्ञसेनी । यो एक चरित्र प्रधान उपन्यास हो । विन्द्या सुब्बाले यसको नेपाली भाषामा अनुवाद गरेकी छन् । वास्तवमा यो एक पत्र हो जुन द्रौपदीले मृत्युको समयमा आफ्ना प्रिय सखा कृष्णलाई लेखेकी छन् किनभने यस बेलामा उनका पतिहरूले मर्नका लागि छोडेर हिमालयमा अगाडि बढिसकेका छन् । चीरहरणको समयमा झैं उनी बेसहारा बनेकी छन् । फरक के हो भने यतिबेला उनलाई अपमानित गर्ने उद्देश्य कसैको छैन ।

नेपाली भाषा दोर्जेलिङ, सिक्किम, र आसाममा बोलिन्छ । सिक्किमको राजकीय भाषाको रूपमा नेपाली स्वीकृत छ । सिक्किमका साहित्यकार विन्द्या सुब्बाद्वारा अनूदित द्रौपदी उपन्यासमा नेपाली भाषाको आञ्चलिक स्वरूपको झलक पनि पाइन्छ । त्यसैले यस उपन्यासले नेपाल तथा सिक्किम र आसामका नेपाली पाठकलाई आपसमा जोड्छ ।

ooo

# डा. धनेश्वर भट्टराईको देवकोटाका महाकाव्यमा सामाजिक चेतना समालोचना ग्रन्थमाथिको दृष्टि प्रक्षेपण

✍ **पूर्णप्रसाद अधिकारी**
**सह-प्राध्यापक : वीरेन्द्र बहुमुखी क्याम्पस**
**चितवन**

## १. लेखक परिचय

डा. धनेश्वर भट्टराई २०१९ राइपुर तनहूँमा जन्मेर देवघाटदेखि भारतको हरिद्वार ऋषिकेश हुँदै सँस्कृतमा शास्त्री र त्रि.वि. बाट स्नातकोत्तर पूरा गरी २०४८साल देखि गोरखा क्याम्पसमा १४ वर्ष सम्मको प्राध्यापन यात्रापछि २०६२ देखि वीरेन्द्र बहुमुखी क्याम्पसमा नेपाली विषयको सह-प्राध्यापक पदमा कार्यरत छन् । उनले देवकोटाका महाकाव्यको समाजशास्त्रीय अध्ययन शीर्षकमा नेपाल सँस्कृत वि.वि. बाट २०७२असारमा विद्यावारिधि Ph.d. गरेका हुन् भने त्यही विद्यावारिधि गर्ने क्रममा सह उत्पादन (वायोप्रोडक्ट) को रूपमा यो कृति आएका हो । त्यसो त उनी कवि र समालोचक हुन् । यो सहित सिर्जनाको रूपमा खण्डकाव्य र समालोचना गरी उनका सातवटा पुस्तकहरू प्रकाशित भएका छन् ।

१००को संख्यामा विभिन्न पत्रपत्रिकामा अनुसन्धानात्मक लेखहरूसमेत प्रकाशित भएका छन् । निरन्तर लागिरहने अफ्नो योग्यता र दक्षता निर्माणमा निपुण डा.भट्टराई वंशकै रत्न हुन् । उनको साहित्य साधना अझ उन्नतशील बन्न सकोस् भन्ने कामना गर्दछु ।

## २. कृति प्रकाशनको रचनागर्भ र पूर्वकार्यको सतही विवरण

लक्ष्मीप्रसाद देवकाटा नेपाली साहित्यका महाकवि हुन् । सम्पूर्ण विधामा कलम चलेका र लगभग ५०वर्षको उमेर पाएका व्यक्तित्व नेपाली साहित्य र राष्ट्रका गौरव हुन् । १०८औं लक्ष्मी जयन्तीको पावन अवसरमा सर्वप्रथम लक्ष्मीप्रसादप्रति हार्दिक श्रद्धाञ्जलि व्यक्त गर्दछु । २०७०सालमा एक जना आमा पर्ने देवकोटाको सहस्र चन्द्रदर्शन चौरासी पूजनमा म पनि आमन्त्रित थिएँ । पूर्वपरिचित मित्र केशव देवकोटाज्यूसँग यस पुस्तकको बारेमा जे जस्तो संवाद भयो त्यही नै पुस्तक प्रकाशनको आधार बन्यो । सम्पूर्ण देवकोटा जातिलाई म आफूले देवकोटाकै वंशवृक्षको रूपमा लिएको छु । भौतिक जीवनमा मानिसहरूका धेरै कमाइ र गुमाइ हुन्छन् । देवकोटा बन्धु समाजले यो कृति प्रकाशन गरेर केवल

लेखको महत्त्व बढाएको होइन आफ्ना पुर्खाको सम्मान र नेपाली साहित्यको उन्नयनमा समेत महत्त्वपूर्ण योगदान पुऱ्याएको छ भन्ने मेरो मान्यता छ ।

चितवनका देवकोटाहरू देशभरिकै बन्धुहरूका लागि प्रेरणाका पात्र बनेका छन् । यस पुस्तक प्रकाशनको संयोजन केशव देवकोटा, अध्यक्ष रामचन्द्र देवकोटा र कृति प्रकाशनमा महत्त्वपूर्ण सहयोग गर्ने सहयोगी हातहरूमा सुस्वाथ्य एवम् दीर्घायुका साथै उन्नति र प्रगतिको कामना गर्दछु । लक्ष्मीप्रसाद देवकोटा (१९६६-२०१६) नेपाली साहित्यमा सवैभन्दा बढी पढिएका र समीक्षा गरिएका नेपालीहरूको मुटुका धड्कन हुन् । सिङ्गो नेपाली साहित्य एकातिर र देवकोटाका सम्पूर्ण कृतिहरू अर्कातिर राख्ने हो भने देवकोटाका कृतिहरू नै गुणात्मक रूपले बढी वजनदार ठहरिन्छन् । उनका साढे दुई दर्जन खण्डकाव्य, पुगनपुग एक दर्जन महाकाव्य, सातवटा निबन्ध-संग्रहहरू, अनेकौ कवितासंग्रहहरू, भूमिका समालोचना, कथा, उपन्यासलगायत असंख्य कृतिहरू प्रकाशित छन् । कति हराए, कतिलाई अरू-अरूले आफ्नो नाममा छापे । यो सबैको लेखाजोखा नै छैन । त्यस बेलाको अस्तव्यस्त जीवनशैलीमा उनले कति लेख्न सकेका हुन् आज हामी अलि अलि कलम चलाउनेहरूलाई आश्चर्य लाग्छ । बहुआयामिक व्यक्तित्वका धनी देवकोटाको भौतिक जीवनमा कुनै प्रकारको मूल्याङ्कन भएन । उनकै प्रेरणामा त्रि.वि.को स्थापना भएर उच्चशिक्षाको जग बस्नु र देवकोटाको मृत्युपछि मात्र मूल्याङ्कन हुनु संयोग नै मान्नुपर्दछ । पंक्तिकारको जानकारीमा आए अनुसार ११ जना विद्वान्हरूले उनको बारेमा विद्यावारिधि Ph.d. गरेका छन् । ती व्यक्तित्वहरूको नाममात्र उच्चारण गर्दछु । इन्द्रविलास अधिकारी, कुमारबादुर जोशी, महादेव अवस्थी, घनश्याम नेपाल, दुर्गा अर्याल, नेत्रप्रसाद न्यौपाने, रामनाथ ओझा, रामप्रसाद ज्ञवाली (क), कृष्णराज अधिकारी, सञ्जय राई वान्तवा र धनेश्वर भट्टराई मुख्य छन् । यस्तै देवकोटालाई काव्यनायक बनाएर महाकाव्य लेख्ने महाकविहरूमा छविलाल उपाध्याय, श्री हरि फुँयाल र पूर्णप्रकाश नेपाल यात्री प्रमुख छन् । देवकोटालाई उच्चस्तरमा मूल्याङ्कन गर्ने विदेशी विद्वान्हरूमा डा.ल्यूदमिला अगानीना रूस, डा. शिवमङ्गलसिंह सुमन भारत, डा. माइकलहट र डा. एडभर आर. मिलर बेलायत उल्लेख्य रहेका छन् । (देवकोटाको जन्म, कर्म र मृत्युलाई मूल्याङ्कन गर्ने) डा.वर्कले अमेरिकामा चर्चित छन् । देवकोटा जन्म शताब्दी २०६६मा ५०जति साहित्यिक पत्रिकाका विशेषाङ्क र त्यति नै उनीसँग सम्बन्धित पुस्तकहरू पनि प्रकाशित छन् । यस्तै लक्ष्मीप्रसाद देवकोटामाथि फुटकर लेखन र समालोचना कविता इत्यादिबाट मूल्याङ्कन गर्ने लेखकको संख्या १०००भन्दा माथि छ । एउटै मुनामदनमाथि ५०० जनाभन्दा बढी समालोचकहरूले समालोचना गरेका छन् । तथापि उनको व्यक्तित्व र कृतिहरूलाई आधार बनाएर पुस्तक लेख्ने स्वतन्त्र लेखकहरूको संख्या मेरो जानकारीअनुसार साढे दुई दर्जन जति छ । ती सबैको

नाम यस प्रकार छ – नित्यराज पाण्डे, चूडामणि बन्धु, नरेन्द्रराज प्रसाई, घटराज भट्टराई, राजेन्द्र सुवेदी, मोदनाथ प्रश्रित, देवी नेपाल, रविलाल अधिकारी । इन्दिरा प्रसाई, शिव रेग्मी, मोहनबहादुर कायस्थ, हेमचन्द्र पोखरेल, नारायण गड्तौला, ईश्वर बराल, विष्णुकुमार खत्री, ताराकान्त पाण्डेय, कोशवप्रसाद उपाध्याय, गणेशबहादुर प्रसाई, चन्द्रेश्वर दुवे, जनकलाल शर्मा मुख्य हुन् । विद्वत्तापूर्ण भूमिकासहित देवकोटाको काव्ययात्रा प्रवत्ति र कृति मूल्याङ्कनलाई आधार बनाएर र उच्चस्तरको मूल्याङ्कन गर्ने प्रा.डा. वासुदेव त्रिपाठी मूल्याङ्कनकर्ताकै रूपमा अग्र पंक्तिमा आउँछन् ।

## ३. कृतिभित्रको विषय सामग्री

यो पुस्तक डिमाइ साइजको लगभग ४०० पृष्ठको मोटाइ भएको २०७३, १०८ औं लक्ष्मी जयन्तीको पावन अवसर पारेर देवकोटा बन्धु समाज जिल्ला शाखा चितवनले प्रकाशित गरेको छ । अगाडिको आवरणमा नागरिकशास्त्र नामक पुस्तकबाट साभार गरिएको महाकविको उज्ज्वल आकृतिको फोटो र पछिल्लो आवरणमा लेखकको व्यक्तिगत परिचय विवरण छ । समर्पण, प्रकाशन, प्रकाशकीय, अध्यक्षको कलमबाट, लेखकीय, विषय–सूची, परिशिष्टमा सहयोगी हातहरूको चित्रसहितको विवरणमा पच्चीस पृष्ठहरू खर्चिएका छन् भने ३६५ पृष्ठमा विषय सामग्रीको विश्लेषण र १० पृष्ठमा सन्दर्भ सामग्रीहरूको तथ्याङ्कलाई समावेश गरिएको छ । नेपाली साहित्यका अमर साधक देवकोटाप्रति लेखकको समर्पण भएको यस कृतिमा पुस्तक प्रकाशनका प्रमुख केशव देवकोटाले कुन सन्दर्भमा पुस्तक प्रकाशन गर्न थालियो भन्ने विवरण दिएका छन् । देवकोटा बन्धु समाजका अध्यक्ष रामचन्द्र देवकोटाले संस्था स्थापनाको उद्देश्य, कार्यसमिति, पुस्तकप्रकाशनको वातावरणमा सहयोगी हातहरूको नामाङ्कनसहित कृतज्ञता व्यक्त गरेका छन् । लेखकीयभित्र डा.धनेश्वर भट्टराईद्वारा विद्यावारिधि ग्रन्थको सहायक सामग्रीसँगै पुस्तक लेखनमा सहयोग गर्ने मित्रहरू र प्रकाशनको चाँजोपाँजो मिलाउने व्यक्तिलाई कृतज्ञता व्यक्त गरिएको छ । त्यस्तै कृतिभित्रका परिच्छेद र खण्डहरूको बारेमा मन्तव्य राखिएको छ । विषय सूचीका शीर्षक उपशीर्षकहरूमा ६ पृष्ठहरू खर्चिएका छन् ।

## ४. परिच्छेद एक-देवकोटाको जीवनी, व्यक्तित्व र कृतित्व

यस खण्डमा अनुसन्धान प्रविधिमा आधारित १६ वटा उपशीर्षकहरू छन् । विषय परिचय देवकोटाकालीन समाज र परिवेशको झलक दिनु, जन्म र बाल्यकालभित्र जन्म कुण्डली, नाम र बालसुलभ स्वभावको चर्चा गर्नु, पारिवारिक, शैक्षिक अवस्थामा पैतृक परिवेश, शैक्षिक योग्यता, कविता चेतनाको विकास आदि १९७६–१९९०सम्मको उनको जीवनी र शैक्षिक यात्रामाथि प्रकाश पारिएको छ । कवितात्मक लेखन र प्रकाशन पनि पूर्ववत् समयलाई उर्वर मानिएको छ । यस

बाहेक पारिवारिक दायित्व, जागीरे जीवन र लेखनमा निरन्तरता, बनारसकालीन देवकोटा, सामाजिक, राजनैतिक सक्रियता, भ्रमण र चेतनाविस्तार, रोगग्रस्त अवस्था र जीवनको स्वरूप, अन्त्यपछिका सम्मान र सम्झना, देवकोटाको कवितायात्रा र चरणविभाजन, कवितायात्राको परिप्रेक्ष्यमा महाकाव्ययात्रा र चरणविभाजन, देवकोटाका महाकाव्ययात्राको विवेचना र निष्कर्ष गरी अनुसन्धान प्रविधिका अनेकौ उपशीर्षकहरूबाट यो प्रथम परिच्छेद समापन भएको छ । देवकोटालाई सबैले उपयोग गरेको तर सुविधा दिने बेलामा यो पागल हो भनेर सत्ताका मतियारहरूले उपेक्षा गरेको स्थिति छ । साहित्यकार जस्तो प्र.म. भएका बी.पी.को विवेकमा पनि देवकोटाका सम्बन्धमा बिर्को लागेको छ । रोगाक्रान्त र मृत्युको क्षणका दृश्यचित्रलाई लेखकले इमान्दारिता र वस्तुवादी ढङ्गबाट चित्रण गरेका छन् । समग्रमा यो परिच्छेद जीवनी र काव्ययात्राको समग्रता पनि हो । यसले पुस्तकको ५३ पृष्ठ ओगटेको छ ।

## ५. परिच्छेद दुई - सामाजिक चेतनामा सैद्धान्तिक अवधारणा

यस मूल शीर्षकभित्र १६ वटा उपशीर्षकहरू छन् । यो विशुद्ध सैद्धान्तिक र ऐतिहासिक विकासक्रमको समाज चेतनासापेक्ष खण्ड हो । कतिपय उपशीर्षकहरू एक अनुच्छेदमा र कतिपय छ पृष्ठसम्मको आयतनमा लम्बिएका छन् । समाज चेतनाको कालखण्डलाई कहीं सूचनामूलक र कहीं विश्लेषणात्मक विधि अंगालिएको छ । ती उपशीर्षकहरूमा विषय परिचय समाज शब्दको व्युत्पति र अर्थ, समाजशब्दको कोशीय अर्थ, तात्पर्यगत अर्थ, विविध अर्थ, सामाजिक चेतनाको परिचय साामाजिक चेतनाको स्वरूप, मार्क्सवादी सौन्दर्य शास्त्रीय र अध्यात्मवादी तथा समाजवादी चेतना गरी १५ प्रकारको नामावली दिदै विवेच्य ६वटा महाकाव्यको विश्लेषणीय आधार पनि यही मानिएको छ । साहित्यमा सामाजिक चेतनाको विकास, पाश्चात्य महाकाव्यमा सामाजिक चेतना, पूर्वीय महाकाव्यमा सामाजिक चेतना, नेपाली साहित्यमा सामाजिक चेतना, प्राथमिक काल, माध्यमिक काल, आधुनिक काल, नेपाली महाकाव्यको पृष्ठभूमि र परम्परा, निष्कर्ष गरी यो खण्ड समापन भएको छ । समग्रमा देवकोटाका काव्य कृतिमा सामाजिक चेतनाको रूपान्तरण कसरी भएको छ भन्ने कुरामा लेखकको गहन र विद्वत्तापूर्ण बहस भएको छ । विषयसूची र भित्री भागमा समेत अनुसन्धानको विधि र पद्धतिअनुसारका उप-शीर्षकहरू राखिएका छन् ।

## ६. परिच्छेद तीन - शाकुन्तल महाकाव्य

यस महाकाव्यभित्र आरम्भदेखि निष्कर्षसम्मका १६ वटा उपशीर्षकहरू छन् । विषय परिचयमा यस महाकाव्यको संक्षिप्त खाका छ भने दोस्रो उपशीर्षकमा यस कृतिको रचनागर्भ लेखकको भूमिका, यसका सर्ग, पृष्ठ, श्लोकसंख्या, समाज

चेतनाका सन्दर्भहरूमाथि प्रकाश परिएको छ । नेपाली महाकाव्य परम्परामा नै प्रथम र मौलिक महाकाव्यका रूपमा यसको जन्म भएको छ । डेढ पृष्ठको महाकविको भूमिका नै विद्यावारिधि Ph.d. को सामग्री बन्ने खालका छन् । ने.भा.प्र.स.मा. जागीरे हुँदा तीन महिनाको फुर्सतको समयमा रचिनु, विस्तारलाई नै गुण र अवगुणको पूर्वाधार मान्नु, कवि आफैले तीन महिनाको रचना र तीन वर्षको पढाइ भनी मूल्याङ्कन गर्नु, विद्युत् गतिमा दौडिएको लेखनी हुनु र यस महाकाव्यलाई भगीरथको गङ्गासँग तुलना गर्नु जस्ता विशेषता यसमा छन् । "लोकप्रियता टाढै जाओस् बुझेर पढिदिने मान्छे औंलोमा गन्न पाए काफी छ ।" भन्ने कथनमा कविको स्वीकृति देखिन्छ । कविको अभिमतअनुसार यो महाकाव्य पूर्ण नगरी भारी बिसाइएको प्रतीत हुन्छ । २ पंक्तिदेखि ६० पंक्तिसम्मका श्लोक रहनु, ३७१ पृष्ठको आयतनमा १९३५ श्लोक र १० हजार पंक्तिहरू विद्यमान छन् । महाकविले पूर्वीय सभ्यताको युग, समय र समाजको संवेदनालाई तपोवन सभ्यता, ऋषिमानव र मानवसमाजको विवेचना गरेका छन् । महाकाव्यमा प्रक्षेपित १५ प्रकारका चेतनाहरूलाई गम्भीरतापूर्वक विश्लेषण गर्ने कार्य भएको छ । ती चेतनाहरूमध्ये आर्षकालीन, ऐतिहासिक, सामाजिक, साँस्कृतिक, राजनैतिक, दार्शनिक, न्यायिक, नैतिक, राष्ट्रिय, आर्थिक, नारीवादी, प्रणय, प्रकृतिवादी रहस्यवादी, युगीन बिम्ब, विद्रोह र क्रान्तिचेतना, सौन्दर्यचेतना र निष्कर्ष गरी विविध चेतनाहरूको विश्लेषणात्मक विवेचनाको क्रममा यस ग्रन्थका १०३ देखि १५२ पृष्ठसम्म गरी ४९ पृष्ठहरू खर्चिएका छन् । प्रस्तुत महाकाव्यलाई कालजयी र जीवनवादी महाकाव्यका रूपमा लिइएको छ ।

## ७. परिच्छेद चार - सुलोचना महाकाव्य

यस परिच्छेदमा पनि फर्मुलाबद्ध सत्रवटा उपशीर्षकहरू छन् । विषय परिचय सूत्रात्मक भएको र महाकाव्यलाई कसरी विवेचना गरिएको छ भन्ने संकेत दिइएको छ । सुलोचना महाकाव्य शीर्षकमा यस कृतिको सिर्जन प्रकियामा देवकोटा ने.भा.प्र.स.को जागीरे र पुष्कर समशेरसँगको ओठे जवाफहरूमा आधारित संवाद, १० दिने महाकाव्य लेखिदिने संकल्प, शाकुन्तल महाकाव्यलाई नेपाली साहित्यमा दान दिएर मात्र नपुगी सुलोचनालाई दानप्रतिष्ठाको स्वरूप दिनु परेको नियति, व्यास र गणेशको शैली तथा महाभारतीय तरिका अपनाएर लेखिएको प्रसङ्ग उल्लेख छ । १५ सर्ग १०४५ श्लोक संख्या कवितात्मक नाटककार वा पद्यात्मक उपन्यासकार बन्नुपरेको आत्मस्वीकृति, कविताका पंक्तिहरू (हवाइजहाज) जुद्ध सडकको मोटर दैडिरहेको गतिमा व्यक्त भएका अभिव्यक्तिसँगै, पच्चीस वर्षको काव्यसाधना र कवितामा नै घण्टौं बहस गर्ने सक्ने चुनौतीसमेत दिइएको छ । सामाजिक चेतनाको सन्दर्भलाई विवेचना गर्दै आर्षकालीन चेतना, ऐतिहासिक चेतना, सामाजिक संरचनाभित्र क.ख.ग.घ. गरी वर्गका आधारमा उच्च, मध्यम, निम्न, उमेर वा पुस्ताका आधारमा पुरानो र नयाँ

पुस्ताको समाज, ईश्वरीय आस्थाको आधारमा आस्तिक र नास्तिक, सामाजिक चिन्तन र चेतनाको आधारमा परम्परागत सामन्ती समाज, नयाँ र सुधारवादी समाज भनेर वर्गीकरण गरिएको छ । यो सँगै साँस्कृतिक चेतना, राजनैतिक चेतना, दार्शनिक चेतना, न्यायिक चेतना, राजनैतिक चेतना, आर्थिक चेतना, नारी चेतना, प्रणय चेतना, प्रकृतवादी रहस्यवादी चेतना, युगीन बिम्ब, विद्रोह र क्रान्ति चेतना, सौन्दर्य चेतना र निष्कर्ष गरी यस महाकाव्यको विश्लेषणमा मात्र ४७ पृष्ठहरू खर्चिएका छन् । विद्वत्तापूर्ण र प्रखर अभिव्यक्ति, वस्तुवादी विश्लेषण यसको प्राप्ति हो ।

### ८. परिच्छेद पाँच - महाराणा प्रताप महाकाव्य

यस महाकाव्यको विश्लेषणमा १८ वटा उपशीर्षकहरू रहेका छन् । महाकाव्यको परिचयसँगै यसको कथावस्तु, इतिहास, संस्कृति, नीति, न्याय, राष्ट्रियता, युगसन्दर्भ र सौन्दर्यचिन्तनमा केन्द्रित रही सामाजिक चेतनाका १५ वटा उपशीर्षक र एउटा निष्कर्ष रहेको छ । महाराणा प्रताप महाकाव्य शीर्षकमा रचनाकालको उतार चढाव, नेपाली समाजको राप र तापसँग जोडिएको छ । भारतीय वीर महापुरुष १७ औं शताब्दीका मेवाड नरेशको राष्ट्रिय स्वतन्त्रता, स्वाधीनता हिन्दू धर्म र सँस्कृति, शूरता, वीरता, स्वराष्ट्रिय प्रेमको चेतनालाई यसमा विवेचना गरिएको छ । यसको प्रथम प्रकाशन २०२४ मा हुँदा १६ सर्ग वार्णिक र मात्रिक छन्दका ६९३ श्लोक संख्या भएको मध्यम स्तरको महाकाव्य भनिएको छ । महाराणा प्रतापको वीरगाथालाई कवि देवकोटाले नेपाली सामाजअनुरूप समकालीन युग, समय, समाज, राष्ट्रिय अन्तर्राष्ट्रिय सन्दर्भ र नेपाली जनक्रान्तिको पुनतार्जगीकरणका साथ राष्ट्रिय स्वतन्त्रता, स्वाभिमान र आत्मसम्मानले उच्च भावनालाई नेपाली जनतामा क्रान्ति र विद्रोहको चेतना सम्प्रेषण गर्नमा देवकोटा सफल छन् भन्ने कुरामा लेखको अभिमत छ । अकवर र महाराणा प्रतापको संघर्ष र युद्धहरूको गाथा कथालाई प्रतीकात्मक रूपबाट राणाशासन र नेपाली जनताको मर्मसँग जोडिएको छ । सामाजिक चेतनाको दृष्टिले अन्य महाकाव्यको जस्तै आर्षकालीन, ऐतिहासिक, साँस्कृतिक, सामाजिक संरचना, राजनैतिक, दार्शनिक, न्यायिक, नैतिक, राष्ट्रिय आर्थिक, नारी प्रणय, प्रकृतिवादी रहस्यकारी, युगीन बिम्ब विद्रोह र क्रान्तिसौन्दर्य आदि चेतनाका पक्षहरूको विश्लेषण गर्दै निष्कर्षमा देवकोटाको राष्ट्रबोधी, समाजबोधी चेतना र स्वतन्त्रताको आत्मसम्मानपूर्ण अस्तित्वको चेतनालाई उत्कर्षमा पुऱ्याउने कार्य यस महाकाव्यबाट भएको छ । महाकाव्यको विश्लेषणमा ४१ पृष्ठहरू उपयोग गरिएका छन् ।

### ९. परिच्छेद छ -वनकुसुम महाकाव्य

यस महाकाव्यलाई परम्परागत जस्तै शाकुन्तल र सुलोचनाको प्रकाशन कार्यमा देवकोटामा महाकाव्य लेखनको जुन ज्वारभाटा आयो त्यसैको उपजका रूपमा

यसलाई लिन सकिन्छ । २०२५ सालमा सा.झा.प्र.बाट प्रकाशित हुनु, मध्यमस्तरको १० सर्ग र ६९२ श्लोक संख्या वार्णिक र मात्रिक छन्द कायम गरिनु, लोककथाको आभास मिल्ने कथावस्तु लिनु, नायिका वनकुसुमको नामबाट नामकरण गर्नु, लावण्य नगरीका राजा महेन्द्र, युवराज नरेन्द्र, मन्त्री विकटाक्ष, छोरी प्रतिभाको विषय सामग्रीमा कथावस्तु रहनु, कविले युगजीवन, समाज, समय राजनैतिक वातावरण शक्ति र सत्ताको षडयन्त्रमा लाग्ने रणाकालीन परिवेश चित्रणको झलक दिनु इत्यादि सामग्री यसमा छन् । यो सँगै प्रकृति चित्रण, प्राकृतिक वातावरण, प्रकृतिसँगको कविको समर्पण भाव, प्राकृतिक सौन्दर्य र मानवीय सम्बद्धतालाई प्राथमिकता दिइएको छ । राष्ट्रिय स्तरमा प्रजातान्त्रिक वातावरणको सिर्जना गर्नु र अन्तर्राष्ट्रिय स्तरमा दुई विश्व महायुद्धबाट आक्रान्त संसारलाई शान्ति, सद्भाव र मानवताको सन्देश दिनुका साथै मानवतावादी, स्वच्छन्दतावादी चेतना व्यक्त गर्नुमा यो महाकाव्य सफल मानिएको छ । महाकाव्यको विश्लेषणका क्रममा १७ वटा उपशीर्षकहरू छन् । अन्य महाकाव्यहरू जस्तै विषय, परिचयसँगै वनकुसुम महाकाव्यलाई पनि विविध चेतनाका प्रकारहरूमा विवेचना गरिएको छ । जसमा आर्षकालीन, ऐतिहासिक, सामाजिक संरचना, साँस्कृतिक, राजनैतिक, न्यायिक, नैतिक, राष्ट्रिय, आर्थिक, नारी चेतना, प्रणय चेतना, प्रकृतिवादी रहस्यवादी, युगीन बिम्ब, विद्रोह र क्रान्ति सौन्दर्य, चेतनाहरूको विश्लेषणसँगै निष्कर्षमा प्रकृति चित्रण र दन्त्य कथाको आडबाट राणाकालीन दरबारिया क्रियाकलाप, नेपाली राष्ट्रिय राजनीतिका चित्रहरूको प्रतिबिम्बलाई समेत सामाजिक चेतनाको रूपमा विश्लेषण गरिएको छ । वनकुसुम महाकाव्यको विवेचनाका क्रममा यस ग्रन्थका ३६ पृष्ठहरूमा समीक्षात्मक अभिव्यक्ति कायम रहेको छ ।

### १०. परिच्छेद सात - पृथ्वीराज चौहान महाकाव्य

यस महाकाव्यलाई १८ वटा उपशीर्षकहरूमा विवेचना गरिएको छ । २००३ को आसपास रचिएको अनुमान गरिएको छ । २०४९ सालमा मात्र आएर प्रकाशित गरिएको देखिन्छ । मुनामदनकै झ्याउरे छन्द न्यूनतम २ पंक्तिदेखि अधिकतम ७८ पंक्तिसम्मका १८४ पृष्ठको मोटाइ २१ सर्गको बाह्यकलेवर देखिन्छ । यस महाकाव्यभित्र मध्यकालीन भारतीय इतिहासमा घटित घटना प्रबल हुनु, पृथ्वीराज चौहानसँग सम्बद्ध वीरता प्रेम र धर्मगाथाको रूपमा महाकाव्य प्रस्तुत हुनु, भारतीय राज्यहरूको क्षयोन्मुख प्रवृत्ति, आपसी कलह, अतीतको हिन्दू सभ्यता र सँस्कृतिलाई दयनीय अवस्थामा गुज्रँदै गएको घटनालाई चित्रण गर्नु, पृथ्वीराजको वीरता, पराक्रम, धैर्य, युद्ध कौशल, शस्त्रास्त्र परिचालनको सामर्थ्यका साथै सत्य, न्याय, धर्म तथा राष्ट्रियताप्रतिको आकर्षण र अस्तित्वलाई पनि महाकाव्यभित्र विवेचनाको वियष बनाइएको छ । भारतीय राजाहरू सुरा, सुन्दरीको आडमा विलासी जीवन व्यतीत गरी आपसी शत्रुतामा केन्द्रित भएको स्थितिका बीच

मुहम्मद गोरी र गजनीले थोरै सेनाको भरमा सोमनाथ आक्रमण गरेको सन्दर्भ केलाइएको छ । मुस्लिम र पृथ्वीराजको युद्धहरूमा आफ्नो टाउको काटिए पनि धर्मयुद्धमा भएको मृत्युलाई गौरवको बोध गरी महाकाव्यलाई पूर्णता दिएको छ । यसका साथै प्रतीकात्मक रूपबाट २००२-३ सालतिरको भारतीय स्वतन्त्रता संग्राम, नेपालीहरूको राणाकालबाट मुक्ति लिने प्रयासको सन्दर्भ, ऐतिहासिक वीरहरूको बलिदानीपूर्ण वीरगाथालाई महाकाव्यमा चित्रण गर्नु, सत्य, धर्म, राष्ट्रियता, स्वतन्त्रता, प्रेम, करूणा मानवता आदि चेतनालाई लोकलयका माध्यमबाट २१ सर्गको बीचमा नेपाली पन झल्काउनु, राष्ट्रिय चेतना र स्वतन्त्रतको भावनालाई उच्च प्राथमिकता दिनु, कवि देवकोटाले स्वच्छन्दता र सौन्दर्य चेतनाका स्वरहरूलाई प्रखर रूपमा समेटनु यस महाकाव्यको पहिचान हो । यसैगरी पूर्ववर्ती महाकाव्यहरूको विश्लेषण गरिए जस्तै यसको पनि आर्षकालीन, ऐतिहासिक, सामाजिक, साँस्कृतिक, राजनैतिक, दार्शनिक, न्यायिक, नैतिक, राष्ट्रिय, आर्थिक, नारी, प्रणय, प्रकृतिवादी र रहस्यवादी, युगीन बिम्ब विद्रोह र क्रान्ति, सौन्दर्य र निष्कर्ष गरी विविध शीर्षकमा यस महाकाव्यको विवेचना गरिएको छ । अगाडिको जस्तै पृथ्वीराज चौहान काव्यमा पनि प्रविधि अंगालिएको छ । महाकाव्यको विश्लेषण र मूल्याङ्कनमा २७८ देखि ३१३ जम्मा ३६ पृष्ठहरू खर्चिएका छन् ।

## ११. परिच्छेद आठ - प्रमिथस महाकाव्य

यस परिच्छेदमा विवेचनीय कृतिभित्र १८ वटा उपशीर्षहरू छन् भने विषय परिचयमा विषयलाई संकेत गरिएको छ । प्रमिथस महाकाव्ययात्राको उत्तरार्ध २०१० को आसपास रचना गरिएको हो भने २०२८सालमा आएर यसको प्रथम प्रकाशन हुन पुग्यो । ग्रीक पुराकथाको मानवतावादी यो संघर्षशील पात्रलाई मिथक बनाएर विश्व साहित्यमा धेरै पृष्ठहरू भरिएका छन् । यो महाकाव्य अन्य महाकाव्य झैं नभई लेखन, पुनर्लेखन, आंशिक लेखन, परिस्करण र पूर्ण अपूर्णका बीच अन्त्य भएको छ । महाकविले प्रशस्त मौलिकताका साथ ढालेर यसको रचना गरेका छन् । प्रमिथस शब्दको उच्चारणमा विविधता छ, ग्रीसेली दुःखान्त नाटककार एस्किलस, स्वच्छन्दतावादी अंग्रेजी कवि शेली र वाइरन, जर्मन कवि गेटे हुँदै विकसित भएको छ । सँस्कृतको अग्नि दण्ड शब्दसँग भाषावैज्ञानिक स्रष्टाहरूले सचेत र जागरूक, संघर्षशील, विद्रोही, जिज्ञासु, चिन्तनशील, स्वतन्त्रताप्रेमी, अग्रगामी चेतनाको संवाहक, नवीन मूल्यको खोजी आदि प्रतीकका रूपमा अर्थ्याइएको पाइन्छ । इन्द्रेणीकालीन परिष्कृत काव्य चेतना मुखरित हुनु, न्यूनतम ३ पंतिदेखि अधिकतम ३८ पंतिसम्मको अभिव्यतिमा कायम हुनु, १२५ पृष्ठ, ४३० श्लोक गुच्छक र ४०९२ पंति संख्या रहनु उत्तरार्धकालीन सामाजिक चेतनाको संक्रमणकालीन परिवेशभित्रबाटै मुक्ति स्वतन्त्रता, क्रान्ति, विद्रोह, मानवीय जीवन मूल्यका बीच देवकोटाले परिष्कृत विद्वत्तापूर्ण अभिव्यक्तिमा रचना

गरेको गद्यलयको यस कृतिले पूर्णता पाएको छ । प्रस्तुत महाकाव्यको नायक प्रमिथसका माध्यमबाट संसारको कुनै पनि देश र समाजसन्दर्भका विषयसामग्रीहरू यसमा आउने खालका छन् । विश्वजनीन र सार्वकालीन रूपमा बुझ्न र मनन गर्न सकिने हुँदा महाकवि देवकोटाले नेपाली राष्ट्रिय परिवेशका साथ विश्वव्यापी चेतना र मानवतावादी शाश्वत दार्शनिक दृष्टिकोण यसमा व्यक्त गरेका छन् । अगाडिका महाकाव्यको विश्लेषणीय पद्धति यसमा पनि अवलम्बन गरिएको छ । आर्षकालीन ऐतिहासिक, सामाजिक, साँस्कृतिक, राजनैतिक, दार्शनिक, न्यायिक, नैतिक, राष्ट्रिय, नारी, प्रणय, प्रकृतिवादी रहस्यवादी, युगीन, बिम्ब विद्रोह र क्रान्तिसौन्दर्य, चेतनाहरूको विश्लेषणपश्चात् निष्कर्षमा महाकवि आफै प्रमिथस बनेर देखापर्ने सौन्दर्यचेतना प्रखररूपमा व्यक्त भएको छ । महाकाव्यको विवेचनामा ४७ पृष्ठहरू खर्चिएका छन् ।

## १२. परिच्छेद नौं - उपसंहार तथा निष्कर्ष

यो परिच्छेद लगभग पाँच पृष्ठमा छ । देवकोटाका महाकाव्यमा सामाजिक चेतनाको प्राप्ति सम्पूर्ण महाकाव्यहरूका शक्ति र सीमा अर्थात् सबल र दुर्बल पक्षमाथिको विश्लेषण छ भने निष्कर्षमा पूर्वार्धको शाकुन्तल र उत्तरार्धको प्रमिथस भनिएको छ । सामाजिक चेतनाको सम्पूर्ण पक्षलाई केलाउँदा पूर्वीय आर्ष सभ्यताको जीवन्त र ज्वलन्त चित्रणका साथै कविताको बाढी र आँधीका रूपमा शाकुन्तल देखिनु, अभिव्यक्ति कलाको प्रखरता, मानववादको उच्चतम विद्रोह, क्रान्ति र संघर्षबाट प्राप्त उज्ज्वल मानवसभ्यताको दिशा निर्देशन गर्ने उत्तरार्धकालीन यात्राको चूडान्त सौद्धान्तिक पूर्वाधारका साथ ६ वटा महाकाव्यहरूमा ३६५ पृष्ठको आयतन रहेको छ । यो ग्रन्थ तयार गर्नका लागि १२८ वटा पुस्तक तथा पत्र-पत्रिकाको उपयोग गरिएको छ । जसमा नेपाली, हिन्दी, अंग्रेजी र सँस्कृत भाषाका पुस्तकहरू उपयोग गरेर पूर्ण अनुसन्धान पद्धतिका साथ यस समालोचना ग्रन्थलाई पूर्णता दिइएको छ । पुस्तक प्रकाशनमा महत्त्वपूर्ण योगदान पुऱ्याउने देवकोटा बन्धुका सहयोगी हातहरूको नाम, ठेगाना र चित्र १० प्रकारका छन् भने श्रेष्ठ, खनाल, वाग्ले र गौतम परिवारका चार गरी पुस्तकको अन्त्यमा १४ वटा रंगीन चित्रहरू, नाम र ठेगाना रहेका छन् । कृतिमा महाकवि देवकोटा, देवकोटा वंशका मात्र नभई सम्पूर्ण नेपालीहरूको राष्ट्रिय गौरव हुन् भन्ने सन्देश दिन खोजिएको छ । लेखक डा. धनेश्वर भट्टराईको विद्वत्ता र केशव तथा रामचन्द्र देवकोटासहित देवकोटा बन्धुसमाज चितवनले यो पुस्तक प्रकाशन गरी नेपाली साहित्यमा नयाँ इटा थप्ने काम गरेका छन् । योसँग सम्बन्धित सबै व्यक्तित्व धन्यवादका पात्र बनेका छन् । स्तरीय कागज, शुद्ध छपाइ, परिष्कृत अभिव्यक्ति, आकर्षक आवरणले कृतिको गरिमा बढाएको छ ।

ooo

# कवि पं. भीमकान्त पन्थी र उहाँको योगसाधना

✍ **डा . भेषराज अर्याल**
**नेपाल संस्कृत विश्वविद्यालय**
**वाल्मीकि विद्यापीठ**
**काठमाडौं**

पौराणिक विषयवस्तुमा आधारित जगदम्बिकावैभवम् र जगदीश्वरवैभवम् दुई महाकाव्यका लेखक स्वर्गीय कवि पं. भीमकान्त पन्थीको अभिजनभूमि (पुर्ख्यौली घर) गुल्मी जिल्लाको धुरकोट वाग्ला बडाचौर भन्ने गाउँमा छ । उक्त दुई महाकाव्यका अतिरिक्त उहाँको विविध विषयका कविताहरूको संग्रह 'विविधपद्यावलिः' नामक अर्को एउटा कृति पनि २०५७ सालमा प्रकाशित भएको छ । अहिले त्यही विविधपद्यावलिमा प्रकाशित उहाँका कविताहरूका आधारमा उहाँको 'योगसाधना 'कस्तो थियो भन्ने विषयलाई मात्र यो सानो लेखमा देखाउन खोजिएको छ ।

कवि पं. भीमकान्त पन्थी भक्तकवि र भद्रव्यक्ति हुनुहुन्थ्यो । उहाँलाई चिनाउनका लागि योभन्दा धेरै लेखिरहन पर्ला जस्तो लाग्दैन । उहाँका दुई महाकाव्यको विषयवस्तु नै देवीदेवताको भक्ति भएको हुनाले उहाँलाई भक्तकवि भन्न कुनै असजिलो मान्नुपर्ने छैन । 'विविधपद्यावलिः' भित्र पनि उहाँका धेरैजसो कविताहरू भक्ति विषयमा नै लेखिएका छन् भन्दा अत्युक्ति हुनेछैन ।' स्तवात्मिकापद्यावलि' भने प्रकरणअन्तर्गत -

१. मङ्गलाचरण,
२. ईश्वरप्रार्थना,
३. अनेकविधप्रार्थना,
४. शालग्रामशिलाष्टकम्,
५. सरस्वतीस्तोत्रम्,
६. वाग्वतीस्तोत्रम्,
७. लक्ष्मीप्रार्थना,
८. भक्तिविषयः,
९. भक्तिगरिमा

जस्ता शीर्षकहरूमा विभाजित सबै कविताहरूले मूलतः भक्तिलाई विषयवस्तु बनाएका छन् भन्ने सहजै बुझिन्छ ।

यीमध्ये पछिल्ला दुई शीर्षकहरू 'भक्तिविषयः' तथा 'भक्तिगरिमा ' भित्रका छुट्टाछुट्टै दुई श्लोकलाई यहाँ उद्धरण गर्नु प्रासङ्गिक देखिन्छ । जस्तै -

**"वेदं वेद न कर्म मे न सुकृतं मांसान्निवृत्तं न मां**
**मीमांसा श्रयते न तर्कपदवीं मन्दज्ञमानन्दयेत् ।**
**योगोऽप्यस्थिरमानसं न सहते दान्तं न वेदान्तवाक्**
**सांख्यं ख्यात्यगुणं न किन्तु सरसा भक्तिर्ममाऽऽस्तां हरौ ॥ "**

*(भक्तिविषय १२)*

**गोपी भक्तिमवर्णयच्छुतवतीष्वैतासु कृष्णान्तिके**
**भक्तित्वाभिमतिर्जगाम गलिता तासाञ्च पानीयताम् ।**
**तस्माद् गर्वकलां विहाय मनुजैर्भक्तिः परेशे हरौ**
**कर्तव्या तत एव निर्वृतिरलं योगादयो दुष्कराः ।।**

**(भक्तिगरिमा ९)**

यी दुई कविताअन्तर्गत पहिलो कविताको तेस्रो पाउको पूर्वार्धमा 'योगोऽ प्यस्थिरमानुसं न सहते' भन्ने वाक्य र दोस्रो कविताको चौथो पाउको उत्तरार्धमा 'योगादयो दुष्कराः' भन्ने वाक्य परेका छन् । यीमध्ये पहिलोमा उहाँले 'चित्तचञ्चल भएकोले मलाई योगले सहन्न' भन्ने अर्थ र दोस्रोमा 'योगहरू गर्न गाह्रो छ' भन्ने अर्थमा बताउनुभएको छ । योगाभ्यास क्रियाको प्रारम्भिक चरणमा उहाँले त्यसो भन्नु र योगाभ्यास गर्न गाह्रो लाग्नु अत्यन्त स्वाभाविक देखिन आउँछ । साथै योगाभ्यास क्रिया गर्नपट्टि लाग्नुभएको रहेछ भन्ने यथार्थ कुरा पनि उक्त दुई कवितामा उद्धृत वाक्यहरूबाट बुझ्न सकिन्छ । अब योग के हो ? भन्ने कुरातिर पनि थोरै विचार गर्नु राम्रो होला । 'युजिर् योगे' भन्ने धातुबाट बनेको योग शब्दका प्रसङ्गअनुसार अनेक अर्थहरू बुझिने भए पनि योगशास्त्रका योगसाधनाका प्रसङ्गमा भने जीवात्माको परमात्मासँग मिलन हुन्छ र साथै योगसाधना गर्दा गर्नु पर्ने योगाभ्यासक्रियाका आठै अंगहरू (आसन, प्राणायाम, मुद्राभ्यास, प्रत्याहार, षट्कर्म, ध्यान, धारणा, समाधि) लाई पनि 'योग' शब्दले बुझाउँछ । खास गरी उक्त क्रियाहरूको अभ्यासबाट चित्तका वृत्ति (व्यापार)हरूलाई नियन्त्रित गर्नसक्नु नै 'योगश्चित्तवृत्तिनिरोधः' भन्ने योगसूत्रको आशय रहेको देखिन्छ । यसै सन्दर्भमा नै कवि पं. भीमकान्त पन्थीले प्रयोग गर्नुभएको 'योगादयो दुष्कराः' भन्ने वाक्यको अर्थले मेल खाएको छ जस्तो लाग्दछ ।

यस संग्रहको 'आत्मकेन्द्रिता पद्यावलिः' प्रकरणअन्तर्गत कवि पं. भीमकान्त पन्थीद्वारा 'स्थानपरिचयः' भन्ने शीर्षकमा प्रौढ पाण्डित्यपूर्ण शैलीमा लेखिएका १० श्लोक कविताहरूले आफ्नै गाउँघरमा उहाँ रहँदाको यथार्थ वस्तुस्थितिलाई प्रस्तुत गरेका छन् । तीमध्ये नवौं कवितालाई विचार गर्दा -

**'उत्थायासून्नियम्याहरहरुषसि यो ब्रह्मचित्तां विधत्ते'**
**प्रातःसत्कर्मभिः स्वैरनुमतिविहितैर्व्येति यस्यैकयामः ।**
**मध्याह्ने शास्त्रचिन्ता जनकृतवचनप्रश्नशङ्कासमाधिः**
**सायं सन्ध्यादिचर्या तदनु च शयनं को न तादृक् सुखी स्यात् ॥९॥**

यस कविताको पहिलो पाउमा उल्लिखित वाक्यबाट उहाँले बिहानै उठेर स्थिरासनमा बसी प्राणायाम अभ्यासका साथै प्रणव मन्त्राक्षरात्मक ब्रह्मचिन्तन गर्नु हुन्थ्यो भन्ने स्वानुभव स्पष्टै देखिन्छ । त्यसका साथै बिहानको समय स्नान, जप, पितृतर्पण, देवपूजन, बलिवैश्वदेव एवं पाठ आदि सत्कर्म गर्दा बित्दथ्यो, दिउँसको समय शास्त्रचिन्तन एवं घरमा शास्त्रीय विषयमा सोध्न आएका मानिसहरूको शङ्का समाधानपूर्वक उत्तर दिंदा बित्दथ्यो र साँझको समय सन्ध्यादि कर्म गर्दा बित्दथ्यो । यसरी समय बिताउन पाएकोमा उहाँलाई सुखको अनुभव हुन्थ्यो भन्ने कुरा पनि उक्त कविताबाट स्पष्ट हुन्छ ।

त्यसैगरी यस प्रकारणभित्रको 'विधिसंक्षेपः' शीर्षकअन्तर्गत विद्वत्तापूर्ण शैलीमा लेखिएका १३ श्लोक कविताहरूको पाठकहरूलाई सदाचारनिष्ठ भै कर्तव्यपालनको निर्देश गरेका छन् । यस कवितालाई उहाँले जीवनको छायाँचित्र वा उहाँले छोराहरूलाई गर्नुभएको 'कर्तव्योपदेश' हो भन्दा अझ सुहाउँदो हुन्छ जस्तो लाग्दछ । यसै कविताको एघारौं श्लोकले उहाँको मन योगसाधनामा संलग्न थियो भन्ने कुरालाई छर्लङ्ग पारेको छ । जस्तै -

**"प्राणान् सूर्याचन्द्रयोःशोधयेथाः कञ्चित्कालं कुम्भके रोधयेथाः ।**
**नाडीं मूलात्तालुगां साधयेथा जीवन्मुक्तोऽतीत्य लोकं रमेथाः । "**

यस कविताबाट उहाँले प्राणयाम क्रियाको अभ्यास गर्नुभएको र सुषुम्णा नाडी साधन गरी कुण्डलिनी शक्तिलाई माथि उठाउनुभएको बोध हुन्छ ।

त्यस्तै यस कवितासंग्रहको '**दार्शनिकी पद्यावलिः**' प्रकरणअन्तर्गत '**चित्तचेतना**' शीर्षकमा पनि अत्यन्तै प्रौढ पाण्डित्यपूर्ण दार्शनिक शैलीमा लेखिएका १७ श्लोक कविताहरूद्वारा उहाँले जीवात्मासँग एकाकार नभई बाहिरी इन्द्रियका विषयरूप प्रपञ्चमा रमाउन खोज्ने आफ्नो चित्तलाई राम्ररी सचेत बनाउँदै हृदयभित्र रहेको जीवात्मासंग मिलेर शिवमय ब्रह्मतत्त्वमा मिल्दा अमृत खान पाउने कुरा संझाउनु भएको छ । जस्तै -

**रे ! मच्चित्त ! दशैन्द्रियैरपि धृतं कर्णाक्षिनासादिकं**
**तद्द्वारा बहिरिन्द्रियार्थविषयान् भुञ्जन्तु शब्दादिकान्**
**त्वं त्वन्तर्हृदि वर्तसेऽनवरतं कर्णाद्यभावाच्च किं**
**वेदैः प्रोक्तमचक्षुरित्यधिहृदं ब्रह्मामृतं नेच्छसि ?**

***(श्लोक ५ चित्तचेतना)***

यसरी उक्त कवितामा प्रस्तुत गरिएका कुराहरू र यथार्थ जीवनमा पनि उहाँको बाहिरी विषयका प्रपञ्चमा देखिएको असंलग्नता, निस्पृहता, निर्लोभ एवं शान्ति र सन्तोषबाट पनि यी आफ्नै अनुभवसिद्ध कुराहरू हुन् भने सहजै विश्वास गर्न

सकिन्छ । त्यस्तै यस शीर्षकभित्रको अर्को कविताबाट उहाँले चित्तलाई आफूभित्रै नियन्त्रण गरेर ठूलो आनन्दको सागरमा डुबाउने गर्नुहुन्थ्यो भन्ने थाहा पाउन सकिन्छ । जस्तै -

**'रे मच्चित्तचकोर ! दीप्तविषयाग्निज्वालमालान्तिके**
**ज्योत्स्नापानतृषा न याहि हिमगुभ्रान्त्याऽतिदन्दह्यसे ।**
**मर्यादामविलङ्घ्य ते स्थितिरिह स्वान्तः समुद्रे यदि**
**श्रुत्युक्तः शतधा न किं त्वयि भवेदानन्दचन्द्रोदयः ॥ '**
*(श्लोक १३ चित्तचेतना)*

यसरी उहाँ योगसाधनमा लाग्नुभएको र बाहिरी विषयरूप प्रपञ्चमा लाग्न चाहने चित्तलाई रोकेर भित्री अनन्दसागरमा डुबाई खुशी पार्नुभएको रहेछ भन्ने कुरा यस शीर्षकभित्रका अरूअरू कविताहरूबाट पनि पाठकहरूलाई बुझ्न सजिलो पर्दछ भन्ने ठान्दछु । त्यसका लागि सबै कविताहरूलाई यहाँ उद्धृत गर्नु पर्ला जस्तो लाग्दैन ।

त्यसैगरी यसै प्रकरणअन्तर्गत 'चिन्तााविषयः'भने शीर्षकमा लेखिएका आठ श्लोक कविताहरूले जीवनमा आइ पर्ने विभिन्न लौकिक एवं भौतिक चिन्ता गरे जस्तो देखाएका भए पनि ती सबै चिन्ताहरूलाई छाडेर 'आत्मचिन्ता' नै चिन्तन गर्न लायक विषय हो । अरू सबै चिन्ताहरू त व्यर्थमा गरिने हुन् । तिनको वास्तविक प्रयोजन छैन भन्ने देखाउनुभएको छ । जस्तै-

**पूर्व सत्सद्मचिन्ता युवतिपरिणयाशादिचिन्ता सुताप्ति-**
**चिन्ता सत्क्षेत्रचिन्ता प्रचुरधनिकतालब्धिचिन्ता दुरन्ता ।**
**पुत्रोन्मादादिचिन्ताऽगुणसगुणवधूद्वाहचिन्ताऽथ नप्तृ-**
**चिन्ता जाग्रत्यमूश्वेत् स्मृतिनिगमगता ह्यात्मचिन्ता तु चिन्त्या ॥२॥**

यस प्रकार 'विविधपद्यावलिः' नामक कवितासंग्रहभित्रका उपचर्चित कविताका शीर्षकहरूअन्तर्गत लेखिएका कविताहरूको राम्ररी परिशीलन गरेमा कवि पं. भीमकान्त पन्थी योगसाधनामा लाग्नुभएको कुरा बुझ्न सकिन्छ ।

अहिले मानिसहरूले कुनै प्रकारको शारीरिक रोग निवारणका लागि कहिले काहीं कुनै प्रकारको योगासन गर्न खोजे जस्तो सामान्य योगासन मात्र गर्ने कुरा नभएर कवि पं. भीमकान्त पन्थीले त वास्तविक रूपमा शब्द-स्पर्श-रूप-रस-गन्ध-नामक पाँच विषयहरूमा लाग्ने श्रोत्र-त्वक-चक्षु-जिह्वा-घ्राण नामक पाँच ज्ञानेन्द्रिय र वाक्-पाणि-पायु-पाद-उपस्थ नामक कर्मेन्द्रियका साथमा लागेर रमाएको सबै इन्द्रियको स्वामीसमेत योगसाधनाकै माध्यमबाट जित्नुभएको थियो र अरूहरूलाई पनि यसै गरी मनलाई जित्नुपर्छ भन्ने सल्लाह दिनुभएको छ । यसरी -

**रूपेणेन्द्रियमक्षि सूक्तिमधुभिः श्रोत्रं त्वचःश्लेषणै**
**घ्राणं निश्वसितै रसैश्च रसनां सर्वेन्द्रियाथैर्मनः ।**
**वागादीन्यपि पञ्च वाक्प्रभृतिभिः सम्मोहयन्ती प्रिया-**
**माश्रित्यापि जयेद् दुरिन्द्रियरिपून् राजेव दुर्गाश्रयः ॥**

***(इन्द्रिय विजयः १)***

उक्त कवितामा आफू र आफ्ना इन्द्रिय र इन्द्रियका विषयहरूद्वारा आफूलाई बाहिरी विषय वासनामा भुलाउन खोज्न प्रियतमा (जीवनसंगिनी) का साथमा रहेर पनि ती दुबैलाई अर्थात् मनलाई र मन चञ्चल गराउने जीवन संगिनीलाई समेत जित्नुपर्छ भन्ने आफ्नो अनुभव बताउँदै अरूलाई पनि त्यस्तै गर्ने सल्लाह दिनुभएको छ ।

त्यस्तै यसै प्रकरणअन्तर्गत रहेको वैराग्यम् शीर्षकअन्तर्गत लेखिएका सबै कविताहरूले उहाँको मन बाहिरी विषय प्रपञ्चमा रमाउन्नथ्यो । उल्टै वनिता र वनिताका विभिन्न अवयवहरूलाई उहाँले विरूप, विकृत, बीभत्स देख्नुहुन्थ्यो । अतएव त्यसबाट उहाँलाई वैराग्यबोध भएको थियो भन्ने देखाएका छन् । यस्तो वैराग्यबोध हुनु सामान्य कुरा होइन, त्यो अवश्य पनि योगसाधनामा संलग्नता भएरै हो भन्ने कुरा पाठकहरूले पनि बुझ्नलायक छ, बाहिरी विषयवस्तु एवं वासनात्मक प्रपञ्चलाई उहाँ कस्तो देख्नु हुथ्यो र अरूलाई पनि कसरी त्यसबाट विमुख हुनुपर्छ भन्ने सल्लाह दिनुहुन्थ्यो भन्ने कुरा उहाँकै एक कविताबाट छर्लङ्ग बुझिन्छ । जस्तै -

**भीतिं चेद् भव सागराद् वितनुषे कृष्णाङ्घ्रिपद्मं स्मर**
**मन्दत्वं कवितासु ते यदि मतेर्वाणीं समाराधय ।**
**कान्तां चिन्तयसे वृथानुदिवसे मायां हरेश्चिन्तया-**
**न्तःसारस्थितिशून्यतुच्छविषयेऽनास्थां सदैवाचर //**

***(वैराग्यम् श्लोक ६)***

यस कविताका चारै पाउका आद्याक्षरको संयोजनबाट उहाँको नामाक्षर पूर्ण देखिने भएकोले यो कुरा उहाँको मूल सिद्धान्त थियो भन्ने पनि सहजै अनुमान गर्न सकिन्छ ।

त्यसैगरी यसै प्रकरणअन्तर्गत रहेको 'ज्ञानम्' शीर्षकमा लेखिएका आठ श्लोक कविताहरूले अन्य साधरणा विषयको ज्ञान पनि योगसाधनबाटै भएको रहेछ भन्ने कुरा योगसाधनाको अर्थात् कुण्डलिनी जागरणको क्रम देखाएर त्यसबाट प्राप्त हुनसक्ने अमृतरसको उल्लेखसमेत गर्नुभएको तलको एउटै पद्यबाट जानकारी हुन्छ । जस्तै-

**आरभ्याधारमूलादुपरिगतमुपभ्रन्तरं चक्रचक्रं**
**पद्मिन्येकासहस्रच्छदकुसुमवती शोभतेऽधोमुखी च ।**
**विभ्राट् सच्चित्स्वरूपोऽमृतरस इव यद्देहगेनात्मनामा-**
**सूच्यग्रे कूपषट्कं तदुपरि नगरी तत्र गङ्गाप्रवाहः ।।**

***(ज्ञानम् श्लोक ५)***

यसप्रकार विविधपद्यावलिः २०५७ कवितासंग्रहभित्रका उपचर्चित कविताहरूबाट कवि पं. भीमकान्त पन्थीका कविताहरूमा विद्वत्ता, प्रौढता, कवित्व, गाम्भीर्य र उहाँको योगसाधनालाई समेत बुझ्न सकिन्छ ।

अन्ततः मर्त्यलोकमा जन्म लिने सबै प्राणीको जीवन नश्वर छ, मरणशील छ, यो विधि नियम नै भएकोले उहाँले पनि यस मर्त्यलोकलाई छोड्नुपर्‍यो र छोड्नुभयो । यसमा आश्चर्य मान्नुपर्ने र दुःख मान्नुपर्ने कुरा छैन । वर्तमान समयमा जीवित रहेकाहरूले पनि त्यसैगरी यो मर्त्यलोकलाई एक दिन छोड्नैपर्छ ।

किन्तु कवि पं. भीमकान्त पन्थी यस मर्त्यलोकमा रहेर बाँचुञ्जेल कसरी बाँच्नुभयो भन्ने कुरा चाहिं बाँचेकाहरूले बुझ्नलायक छ ।

अन्तमा कवि पं. भीमकान्त पन्थीको योगसाधनबाट प्राप्त ब्रह्मदृष्टि कस्तो थियो भन्ने एक कविताको उल्लेख गर्दै यो लेखनीलाई विश्रान्ति दिन्छु ।

**"नीलं खमुल्लसति यद्यपि रूपहीनं**
**कृष्णस्वरूपमपि निर्गुणमित्थमाहुः ।**
**चित्ते कदाप्यविरहात् खगुणं ममास्ति**
**किं ब्रह्म निर्गुणमवापमहं न मन्ये ।।"**

***(ज्ञानम्- श्लोक ८)***

उक्त श्लोकको नेपाली भाषामा छायानुवाद पनि कवि पं. भीमकान्त पन्थीकै शब्दमा यस्तो छः

**"देखिन्छ निर्गुण नभस्तल नील -रूप**
**श्रीकृष्ण-रूप उपमा दिन मिल्छ खूप ।**
**यो चित्तमा गुण त्यही छ र हुन्न दूर**
**के ब्रह्म निर्गुण म पाइन भन्दछु र ! ।।"**

***(फुटकर श्लोक पृ. १५०, विविधपद्यवालिः २०५७)***

ooo

# पुष्कर अथक रेग्मीको बालगेडी–सङ्ग्रह अक्षताको विश्लेषण

✍ **टंकप्रसाद पन्थ**
**तानसेन, पाल्पा**

### १.१. विषयप्रवेश

साहित्यकार पुष्कर अथक रेग्मी नेपाली साहित्यका क्षेत्रमा अथक रूपमा क्रियाशील प्रतिभा हुन् । यिनी पाल्पामा रहेर नेपाली वाङ्मय र साहित्यको सेवामा अटुट रूपमा लागी आफ्नो प्रतिभालाई क्रमशः फैलाउँदै अगाडि बढेका छन् । प्राध्यापन तथा प्रशासनिक कार्यमा संलग्न रेग्मी विभिन्न साहित्यिक तथा सामाजिक संघसंस्थाहरूसँग पनि आबद्ध रही आफ्नो क्रियाशील व्यक्तित्वलाई प्रदर्शन गरेका छन् । पाल्पा साहित्य समाज अनि साहित्य तथा स्वास्थ्य प्रतिष्ठान पाल्पाको अध्यक्षको भूमिकामा रहेका रेग्मी अथक साधकका रूपमा समर्पित देखिन्छन् । जसको परिणाम यिनका एक दर्जन कृतिहरू प्रकाशनमा आइसकेका छन् । सिर्जना, समालोचना तथा स्वतन्त्र लेखनमा कलम चलाउने रेग्मीको साधना प्रखर रूपमा अगाडि बढेको छ । कविता, कथा, उपन्यास, गजल, मुक्तक आदि विधाका अतिरिक्त नवनव सिर्जनातर्फ अभ्यास गर्नु पनि यिनको रुचि रहेको देखिन्छ । यस्तै भाषा, कला, साहित्य, संस्कृति, शिक्षा, खोज–अनुसन्धान, जीवनी, परिचय जस्ता विविध विधा र क्षेत्रमा पनि यिनको कलम अनवरत रूपमा चलेको पाइन्छ । सिर्जनाका क्षेत्रमा कुरा गर्दा नयाँ नयाँ प्रयोगतर्फ अभिमुख हुनु यिनको प्रवृत्ति नै मान्नुपर्दछ । साहित्यका गद्य र पद्य दुबै विधामा कलम चलाउने अथक पछिल्लो समयमा बालसाहित्यतर्फ आकृष्ट भएको पाइन्छ । बालकहरूको उमेर, रुचि, जिज्ञासा तथा उनीहरूकै भाषा र भावनालाई समातेर कृतिको रचना गर्नु चुनौतीपूर्ण कार्य हो । तर रेग्मीले बालगजल, बालकथा र बालकविताका कृतिहरू प्रकाशनमा ल्याउन सफल भएका छन् । बालसाहित्यका क्षेत्रमा रेग्मीको प्रभावलाई हेर्दा भविष्य र सम्भावना अनुकूल रहेको देखिन्छ । यस लेखमा २०७६ भाद्रमा प्रकाशित रेग्मीको अक्षता (सचित्र बालगेडी–सङ्ग्रह) माथि प्रकाश पार्ने उद्देश्य रहेको छ ।

### १.२. पुष्कर अथक रेग्मीको परिचय

पुष्कर अथक रेग्मीको जन्म पाल्पाको तानसेनमा भएको हो । गोरो वर्ण तथा सरदर नेपालीको कद भएका रेग्मीले स्नातकोत्तरसम्मको शिक्षा उत्तीर्ण गरेका छन् । लामो समय शिक्षण कार्यमा समर्पित यिनी पछिल्लो समयमा प्राध्यापन

तथा प्रशासनिक जिम्मेवारीमा रहेर कार्यसम्पादन गरेका छन् । सधैँ सक्रिय र प्रसन्न मुद्रामा देखिने रेग्मी प्रत्येक समय कुनै न कुनै काममा तल्लीन रहेका हुन्छन् । कर्मप्रतिको निष्ठा र इमान्दारिताका कारणले नै विभिन्न संस्थाहरूमा आबद्ध भई आफ्नो जिम्मेवारी पूरा गर्नु पनि यिनको अथक व्यक्तित्वको परिणाम हो । दिनमा सधैँ बाहिर क्रियाशील रहने रेग्मी रातको सुत्ने समयलाई कटौती गरी साहित्य सिर्जना गर्दछन् । यस्तो लाग्छ पुष्कर अथक रेग्मी निरन्तरको साधनाले उठेका साहित्यिक प्रतिभा हुन् ।

पुष्कर अथक रेग्मीका प्रकाशित कृतिहरूको सूचीलाई हेर्दा बाह्रवटा कृतिहरू यिनले पाठकसमक्ष ल्याएका छन् । अफसोच .(गीति उपन्यास) बाट थालिएको कृति प्रकाशनको लाममा बाह्रौँ कृतिका रूपमा अक्षता सचित्र बालगेडी-सङ्ग्रह रहेको छ । देवनागरी लिपिको पहिलो स्वरवर्ण 'अ' प्रति रेग्मीको अगाध आस्था रहेको देखिन्छ । जसले गर्दा सबैजसो कृतिको नामकरण यसै वर्णबाट गरिएको छ । यी बाह्रवटा कृतिमा पनि विधागत विविधताको स्वाद पाउन सकिन्छ । यसका अतिरिक्त रेग्मीका फुटकर लेखरचना, कविता, गजल तथा समालोचनात्मक लेखहरू पनि ठूलो सङ्ख्यामा प्रकाशित भएका छन् । अझ महत्त्वपूर्ण कृतिहरू प्रकाशनमा ल्याउने योजना बनाएका रेग्मी नवीन प्रयोग र प्रवृत्तिलाई रत्याउन बढी उत्सुक देखिन्छन् । पाल्पा क्षेत्रमा कृति प्रकाशनमा संख्यात्मक फड्को मार्न र संघसंस्थामा क्रियाशील भएर लाग्ने कुरामा यिनी अग्रणी मोर्चामा रहेका छन् । यिनको क्रियाशीलता र लगनशीलतालाई हेर्दा नेपाली साहित्य वाटिकामा यिनका धेरै कृतिहरू आउने अपेक्षा गर्न सकिन्छ ।

### १.३. अक्षता कृतिमाथि चर्चा

साहित्यले समाजका सबै उमेर, लिङ्ग, वर्ग, भूगोल र समुदायका मानिसका समस्याहरूलाई विषय बनाउँछ । साहित्यको आस्वादन पनि ती सबै तहका व्यक्तिले गर्दछन् । व्यक्तिका बालक, किशोर, युवा, वयस्क, वृद्ध उमेरअनुसारका रुचि र आग्रहहरू हुन्छन् । विभिन्न उमेर समूहका लागि भनेर कित्ताकाट गरी साहित्य लेख्ने अभ्यास नभए पनि बालजगत्लाई केन्द्रित गरी लेखिएका साहित्यिक कृतिहरू भने प्रशस्त पाइन्छन् । राष्ट्रिय रूपमा नेपाल प्रज्ञाप्रतिष्ठानले बालसाहित्य विभाग गठन गरी बालसाहित्यका क्षेत्रमा गोष्ठी, सेमिनार, अभिमुखीकरण जस्ता क्रियाकलापहरू पनि सञ्चालन गरेको पाइन्छ । यसै गरी भाषा शिक्षणमा बालबालिकाहरूलाई पठनप्रति रुचि जगाउन बालसाहित्यका सामग्रीमा विशेष जोड दिएको पाइन्छ । बालकको मस्तिष्कलाई तिखार्न, नैतिक शिक्षा प्रदान गर्न, असल बाटोमा हिँडाउन, भविष्यको लक्ष्य राखी अगाडि बढ्न, ठूलाप्रति आदर र सानाप्रति स्नेहभाव प्रकट गर्न, खराब बाटोमा नलागी भविष्य निर्माण गर्न, भाषा, कला, संस्कृति र राष्ट्रलाई माया गर्न, समाजमा मिलेर बस्न,

सकारात्मक सोंचको विकास गर्न बालसाहित्यले कडीको काम गर्दछ । यस्तो महत्त्व बोकेको क्षेत्रमा कलम चलाउनु अवसर र चुनौती दुबै हो । बालसंसारलाई केन्द्रित गरी रेग्मीले, अनुरोध, अलग बाटो र अक्षता जस्ता विविध विधाका कृतिहरू प्रकाशनमा ल्याई बालसाहित्यतर्फको आफ्नो साधना क्षमताको परिचय दिएका छन् । बालकको भावना, रुचि तथा मानसिक क्षमतालाई केन्द्रित गरी लेखिएका यिनका कृतिहरू बालकहरूका लागि खुराक साबित भएका छन् ।

### १.३.१. संरचना पक्ष

प्रस्तुत कृति सचित्र बालगेडी-सङ्ग्रहको रूपमा प्रकाशनमा ल्याइएको छ । गीतका गेडाहरूलाई बालबोलीमा ढाली गेडीका रूपमा यहाँ प्रस्तुत गरिएको अनुभव हुन्छ । आवरण पृष्ठबाहेक यो कृति जम्मा बत्तीस पृष्ठमा निर्मित छ । प्रकाशकको आफ्नो सीमा र प्रचलनले गर्दा बत्तीस पृष्ठमा सीमित हुन पुगेको सङ्केत पाउन सकिन्छ । कृतिभित्र प्रवेश गरी हेर्दा समर्पण, शुभकामना, भूमिका, प्रकाशकीय र विषयसूचीले नौ पृष्ठ समेटेको पाइन्छ । स्वर्गीय स्वजनहरू माता, पिता र दिदीप्रति कृति समर्पित रहेको छ । पृष्ठ दशदेखि एकतीससम्म एघारवटा बालगेडीको सचित्र प्रस्तुति रहेको छ । बत्तीसौँ पृष्ठमा सहयोगीहरूलाई कृतज्ञताभाव प्रकट गरिएको छ । शीर्षक अनुकूल आवरण पृष्ठमा अग्रजले बालबालिकालाई राता अक्षता लगाइदिएको तस्वीर अङ्कित छ । आवरण पृष्ठको पश्चभागमा स्रष्टाको तस्वीर, परिचय र कृतित्व उल्लेख भएको समीक्षात्मक टिप्पणी अनि रेग्मीद्वारा प्रकाशित बाह्रवटा कृतिलाई क्रमिक रूपमा विन्यास गरिएको छ । गोजीमा राख्न मिल्ने आकारगत ढाँचामा कृतिको निर्माण गरिएको छ । गौरी पब्लिकेसनको आग्रहमा बत्तीस पृष्ठको संरचनात्मक ढाँचामा यस कृतिको कलेवर निर्माण भएको पाइन्छ ।

यस कृतिको आन्तरिक संरचनालाई अध्ययन गर्दा विभिन्न शीर्षकमा एघारवटा गेडीहरू राखिएका छन् । विषयको झलक दिने गरी प्रत्येक गेडीमा चित्रहरू पनि अङ्कित गरिएका छन् । यस्ता चित्रहरूले विषयको मर्मलाई थप प्रकाश पार्ने काम गरेको देखिन्छ । बालकविताको अभिप्राय र संवेदनालाई ख्याल गरी चित्रहरूको संयोजन गरिएको छ । बालकहरूमा शब्दलाई पहिल्याउने ज्ञान र सुझको कमी भए पनि चित्र वा तस्वीरका माध्यमबाट भावको सम्प्रेषण हुने हुनाले यस्ता चित्र र झलकहरूको अहम् भूमिका रहेको पाइन्छ । कविताको संरचनागत ढाँचालाई दृष्टि दिंदा प्रत्येक शीर्षक वा गेडीमा तीनवटा श्लोक संरचना वा फाँकीको आयोजना गरिएको छ । पहिला दुई पंक्ति सरदर पाँचदेखि सात शब्दमा, तेस्रो पंक्ति एक शब्दमा र चौथो पंक्ति चाहीं तीनदेखि चार शब्दमा निर्मित भएको देखिन्छ । यसमा पनि 'साथी' शीर्षकको कविताको अन्तिम श्लोकको चौथो पंक्ति दुई शब्दमा निर्मित रहेको र 'जनावर' शीर्षकको पहिलो

श्लोकको अन्तिम पंक्ति पाँच शब्दमा निर्मित छ । बालसुलभ रूपमा गायन कला वा गेयात्मक रूपमा ढाली साङ्गीतिक छटा प्रदान गर्ने कुरा पनि विशिष्ट प्रकृतिको देखिन्छ । अनुप्रासीय विधानको संयोजनलाई हेर्दा माथिल्ला दुई पंक्तिमा अन्त्यानुप्रास आयोजना गरी तेस्रो पंक्तिको एउटा शब्दका आधारमा चौथो पंक्तिको अन्तिम शब्दको अनुप्रास मिलाई गेयगुण सम्पन्न बनाइएको छ । कविताको आन्तरिक संरचना मिलाउनमा पनि कवि सचेत देखिन्छन् । यद्यपि कुनैकुनै पंक्तिको गायनमा सहजता र स्वाभाविकता आउन सकेको देखिँदैन । यस्तै केही शब्द प्रयोगको अवस्थालाई हेर्दा बालमस्तिष्कमा कठिन हुने प्रकृतिको देखिन्छ । लय, भाव र शब्दविन्यासको तहबाट केही कुरालाई छाडेर बालसुलभ चेतनालाई जगाउने कुरामा स्रष्टा रेग्मी सचेत रहेका छन् । ससाना बालबालिकाहरू लयको तरङ्गमा तैरिएर खेल्दै गाउने र कवित्व प्रवाहमा रमाउने गरी संयोजन गराउन सक्नु रेग्मीको कुशलता नै मान्नुपर्दछ । प्रौढ स्रष्टा बाल संसारमा प्रवेश गरी आफूलाई त्यही रूपमा ढालेर प्रस्तुत गर्नु साधारण कुरा होइन । यस कुरामा पुष्कर रेग्मी सचेत र सफल रहेको पाइन्छ ।

### १.३.२ विषयवस्तुगत भाव

प्रस्तुत कृतिमा कवि रेग्मीले एघारवटा गेडीभित्र विविध विषय र भावलाई सम्प्रेषण गर्न सफल भएका छन् । यहाँ पहिलो पटक विद्यालय प्रवेश गर्दै गरेको बालमनस्थितिलाई स्वाभाविक रूपमा अवतरण गराइएको छ । पुस्तकले बालमस्तिष्कमा पार्ने सकारात्मक प्रभाव, बालदौँतरी र साथीत्वको भावना, खेल अनि खेलाडीप्रतिको आस्था, ठाउँठाउँको भ्रमणले जन्माएको कुतुहलता, वीर नेपालीहरूप्रति आस्था जगाउने प्रयास, नेपाली भूगोल र माटोप्रतिको प्रेम, अग्रजहरूप्रतिको आदर सम्मानको भावना अनि विभिन्न जनावर र तरकारीहरूका नाम र काम सिकाउने कुरामा पनि विषयवस्तु समेटिएको देखिन्छ । बाहिरबाट हेर्दा एघारवटा शीर्षकमा एघारवटा विषयवस्तुगत भावको आयोजना गरिएको अनुमान गर्न सकिन्छ तर गेडीका भित्र पस्दा बालसुलभ चेतनाका साथमा विविध मर्म र भावनाको अभिव्यक्ति भएको पाइन्छ । बालबालिकामा हुने डर, जिज्ञासा, उत्सुकता, संवेग, असल आचरण, मान्यजनप्रतिको आशा, साथी, समाज अनि राष्ट्रप्रतिको आस्था जस्ता विषयहरू यहाँ समेटिएर आएका छन् ।

विद्यालय समाजको प्रतिबिम्बि हो । गुरुबा र गुरुआमाको मायाले गर्ने आकर्षण, पुस्तकमा प्राप्त हुने ज्ञानगुनाका कुरा, साझा भावनाको विकास, साथीसाथीबीचको सद्भाव र रमाइलो वातावरण, संसारमा हुने निश्छल अनि समानताको भावना, बालसुलभ जिज्ञासा र प्रतिस्पर्धाको भावना पनि यहाँ सान्दर्भिक रूपमा प्रस्तुत भएको पाइन्छ । विभिन्न प्रकारका खेलबाट हुने शारीरिक अनि मानसिक विकासको पक्षलाई पनि स्वाभाविक तरिकाले यहाँ झल्काइएको छ । विभिन्न

ठाउँहरूको यात्राको पृष्ठभूमिबाट पर्यटकीय गन्तव्यका ठाउँहरूको उल्लेख गरी बालबालिकाहरूमा पर्यटन प्रवर्धनको चेतना जगाउने काम पनि यहाँ भएको पाइन्छ । टनकपुर र कोसीमा हाम्रो राष्ट्रको अस्तित्व झुकेको सङ्केतद्वारा बालकमा राष्ट्रवादी भावनाको सम्प्रेषण गराइएको पाइन्छ । भीमसेन थापा, अमरसिंह थापा, बलभद्र कुँवर, भक्ति थापा, र उजिरसिंह थापाका गाथाद्वारा बालबालिकाहरूमा राष्ट्रिय स्वाभिमान जगाउने उद्देश्य राखिएको देख्न सकिन्छ । 'नेपाल' शीर्षकमा साझा भावना र राष्ट्रिय एकताका साथमा समृद्धिको यात्रामा लाग्ने उत्प्रेरणा पनि जगाइएको छ । दशैंको सांस्कृतिक महिमा अनि ठूलाबडाका शुभेच्छा र आशीर्वादलाई कर्मपथमा अगाडि बढ्ने उत्साहका रूपमा लिइएको पाइन्छ । जनावरका स्वभाव, एकअर्काको डर तथा तिनीहरूको संसारलाई पनि यहाँ उपस्थित गराइएको छ । विभिन्न तरकारीका नाम उल्ललेख गरी तिनको भोजनले पार्ने सकारात्मक प्रभावका साथमा स्वीकृति र प्रतिबद्धताका भावहरू पनि अभिव्यक्त भएको पाइन्छ । यस्ता विषय र सन्दर्भको उठानका साथमा बालमस्तिष्कमा सकारात्मक विचार र सन्देश प्रवाहित गराउने प्रयास गरेको देखिन्छ ।

यसरी बालचेतनालाई उजागर गराई तिनीहरूकै सेरोफेरोबाट विषयको उठान गर्नुका साथै बालबालिकाहरूलाई सामाजिक आदर्शको पाठ पढाउने उद्देश्य राखिएको पाइन्छ । साना नानीहरूमा साझा भावना र राष्ट्रवादी चेतना अङ्कुरण गराउने गरी विषयवस्तुगत भावभूमि मुखरित भएको पाइन्छ ।

### १.३.३. उद्देश्य

बालसाहित्यको उद्देश्य भन्नु नै बालसंवेदनालाई जगाई उनीहरूको कलिलो मस्तिष्कमा असल विचार र आचरण अङ्कित गराउनु हो । यसका लागि भाषा, शैली र भावभूमिबाट बालजगत्लाई केन्द्रित गर्नु आवश्यक हुन्छ । शब्द, लय र संवेदना बालकका चेतनानुकूल भएमा त्यस्तो साहित्यले बाल प्रतिभालाई मुखरित गराउन सक्छ र उनीहरूमा उत्प्रेरणा जाग्नुका साथै असल आचरण देखाउन पनि लालायित हुन्छन् । यहाँ पुष्कर रेग्मीको अक्षता शीर्षकको सचित्र बालगेडी सङ्ग्रहलाई अवलोकन गर्दा शब्द र चित्रका साथमा विषयको मर्मलाई प्रस्तुत गरिएको पाइन्छ । खेल्दै, गाउँदै, नाच्दै भावबोध गरी सिकाइका यात्रामा अगाडि बढ्नलाई उत्प्रेरित गराउने उद्देश्यमा पनि प्रस्तुत कृतिले महत्त्वपूर्ण प्रभाव पार्न सक्छ । बालकहरूमा साझा भावना जगाई घर-परिवार, विद्यालय र समाजमा मिलेर बस्न अनि ठूलो-सानोको भेदभाव नगरी समान व्यवहार गर्नुका साथै नैतिक आदर्शको पाठ पढाउने उद्देश्यमा यी रचनाहरू केन्द्रित रहेका छन् । नेपालका विभिन्न पर्यटकीय ठाउँहरू, तरकारी र जनावरका नामहरूको ज्ञान गराउने कुरामा पनि लेखक सचेत रहेको देखिन्छ । नेपाली वीरताप्रतिको आस्था

र सम्मान जगाउनुका साथै हिमाल, पहाड र तराईको भूगोलका नेपालीहरू मिलेर बस्नुपर्ने सहिष्णुताको भाव सञ्चार गराउने उद्देश्यमा पनि कविताहरू केन्द्रित रहेको देखिन्छ । बालबालिकाका भावना, चेतना र अनुभूतिलाई समाती उनीहरूकै सेरोफेरोमा केन्द्रित हुने कुरामा पनि रेग्मी सचेत नै रहेको पाइन्छ । बालकहरूमा कविताप्रति रुचि जगाईकन असल भावनाको विकास गराई कर्मप्रति आस्थावान् बनाउनु पनि कृतिकारको उद्देश्य रहेको पाउन सकिन्छ ।

### १.३.४. भाषाशैली

बालसाहित्यको सिर्जनामा महत्त्वपूर्ण प्रभाव पार्ने कुरा भाषाशैली पनि हो । बालकको कलिलो मस्तिष्कमा प्रौढहरूले प्रयोग गर्ने शब्दावली र वाक्यहरू सहज प्रवेश हुँदैनन् । त्यसैले उनीहरूको आफ्नै शब्दभण्डार, वाक्यगठन र प्रस्तुतिको ढङ्ग रहेको हुन्छ । कविता, कथा, निबन्ध, जीवनी आदिको सिर्जनाका समयमा साहित्यकार यसतर्फ सचेत र संवेदनशील बन्नु आवश्यक हुन्छ । पुष्कर अथक रेग्मीको यस सङ्ग्रहलाई दृष्टि दिंदा बालसुलभ भाषाशैली र संवेदनालाई ख्याल गरी लेखिएको पाइन्छ । लय, भाषा, चित्र अनि भावनालाई बालबालिकाकै तहबाट टिप्न खोजिएको छ तर पनि चक्रव्युह, आयाम, स्वावलम्बी जस्ता केही शब्दहरू बाल उच्चारण र अर्थबोधमा कठिन हुने खालका देखिन्छन् । यसबाहेक शब्द, लय, चित्रबिम्ब आदिको प्रयोग बालकको चेतना अनुकूल नै रहेको मान्न सकिन्छ । बच्चाबच्चीहरू खेल्दै गाउँदै गर्ने हिसाबले गेयता प्रदान गरिएको छ । एघारवटै गेडीको लयात्मक ढाँचा लगभग एकै प्रकृतिको रहेको पाइन्छ । एउटा कविताको लय सिकेपछि सोही ताल र ढङ्गमा अरू पनि गाउन सकिने गरी लयको संयोजन गरिएकाले बालबालिकाहरू आरम्भदेखि अन्त्यसम्म गायन र नृत्यका साथमा रमाउने अवस्था देखिन्छ । शैली सरल, सरस र प्रभावकारी हुनुले बालसंवेदना जगाउन अनुकूल रहेको पाइन्छ । बालबोली, बालक्रीडा, बालसंवेदना र जिज्ञासाका पृष्ठभूमिमा शब्द, वाक्य, अभिव्यक्तिकला अनि लयात्मक ढाँचालाई विन्यास गर्नमा पनि रेग्मी सचेत रहेका छन् ।

## १.४. निष्कर्ष

साहित्यकार पुष्कर अथक रेग्मी साहित्यका विभिन्न विधामा अनवरत रूपमा कलम चलाउने प्रतिभा हुन् । कथा, उपन्यास, कविता, गजल, जीवनी, समीक्षा, समालोचना, अनुसन्धान आदि क्षेत्रमा कलम चलाएका रेग्मीको बालसाहित्यका क्षेत्रमा पनि सशक्त रूपमा कलम चलेको छ । बालबालिकाको रुचि र भावनालाई पक्रेर साहित्यको रचना गर्नु चुनौतीको पाटो हो । तर पनि रेग्मीले यस कुरालाई ध्यानमा राखी बालजगत्‌लाई गीत, गजल र कथामा अवतरण गराउन सफल भएका छन् । सरलता, रोचकता, सचित्र प्रस्तुति, बालसुलभ भाषाशैलीको प्रयोग,

बालबालिकाहरूमा उत्प्रेरणा जगाई असल भावनाको विकास गराउने कला, जस्ता कुरालाई रेग्मीले आफ्ना रचनामा प्रयोग गरेका छन् । साना साना नानीहरूलाई साझा भावना, सहअस्तित्व, आज्ञाकारिता, बाबाआमा र गुरुप्रतिको सम्मान, राष्ट्र र राष्ट्रियताप्रतिको आस्था जगाउने कुरामा रेग्मीको यस कृतिले सकारात्मक प्रभाव पार्ने देखिन्छ । साना बालबालिकाहरूलाई केन्द्रित गरी लेखिएका यस्ता सामग्रीले उनीहरूमा पठन, गायनका साथमा बोध तथा अभिनय कलाको समेत विकास हुने देखिन्छ । बालसाहित्य र सिकाइप्रति केन्द्रित गरी प्रकाशनमा आएको यो सामग्री उपयोगी र मीठो खुराक साबित हुनेछ भन्ने कुरामा विश्वास लिन सकिन्छ । यस्ता हितकारी र बालोपयोगी सामग्रीहरू रचना गर्ने कुरामा स्रष्टा पुष्कर अथक रेग्मीको कलम अझ सशक्त बनोस् भन्ने शुभेच्छासहित बाह्रवटा कृतिहरू प्रकाशनमा ल्याउन सफल भएकोमा हार्दिक बधाइ तथा शुभकामना ।

ooo

# गीत

✍ **मनबहादुर खत्री**
**इस्मा गाउँपालिका-१, हस्तिचौर, मैनडाँडा, गुल्मी**

बनाई दरबार दिलमा, नबस तिम्रो राख्दछु ।
मेची र काली, गण्डकीझैं, म तिम्रै लागि बग्दछु ॥

जहाँ र जता जान्छु र हेर्छु, आकृति तिम्रो देख्दछु ।
खोलेर पाना मुटुमा, म नाम तिम्रो लेख्दछु ।

पोल्दा यो छाती पलपलमा, म छायाँ तिम्रो भेट्दछु ।
हेरेर तस्वीर सिसामा, अस्याट तिम्रो मेट्दछु ।

लाएर टुङ्गो सबैथोक, म तिम्रो बस्ती सर्दैछु ।
निरस गगन-धर्तीमा, म रङ्ग तिम्रो भर्दैछु ।

गरेर बिन्ती ईशमा, म तिम्रो आयु माग्दछु ।
सिञ्चन तिम्रो भूमि त्यो, वर्षात जस्तै माग्दछु ॥

राखेर बीज मायाको, बगैंचा गोड्मेल् गर्दैछु
अनुपम फूल फुलाउँदै, भकारी मनको भर्दैछु ॥

ooo

# मान्छे कसरी सर्वश्रेष्ठमा दरियो ?

✍ **पन्थी रामप्रसाद**
**तम्घास, गुल्मी**

रहस्यमय छ संसार । रहस्यमयी छिन् प्रकृति । बुझिनसक्नु छन् धेरै कुरा । बुझाउन नसकिने पनि छन् धेरै कुरा । त्यसैले लीलामय छ यो दुनिया । लाग्छ- लीलोद्यान हो प्रकृति आफैमा लीलोद्यानका पात्र प्रतिनिधि मान्छे आफैमा ।

स्वघोषित सर्वश्रेष्ठ प्राणी हो मान्छे । आफैलाई सर्वश्रेष्ठको श्रीपेच लगाएको छ । होइन भने कुनचाहीं प्राणी सम्मेलन वा सभाबाट घोषित भयो मान्छे सर्वश्रेष्ठ ? के कारण र आधार छ मान्छे सर्वश्रेष्ठ हुनुमा ? आखिर कुन पुरुषार्थ गरेको छ हँ मान्छेले ? कुनचाहिँ नयाँ आविष्कार गऱ्यो मान्छेले, प्रकृतिविना? कुन धरातलमा अडिन्छ, प्रकृतिविना ? कुन तत्त्वले बनेको छ मान्छे, प्रकृतिविना ? कुन तत्त्वमा लीन हुन्छ, प्रकृतिविना ?

प्रकृतिविना पलभरको अस्तित्व नभएको मान्छे बढो फूर्ती लगाउँछ सर्वश्रेष्ठ प्राणी भनेर । मलाई ताजुब यसैमा लाग्छ । पृथ्वी, जल, तेज, वायु र प्रकाश यी पञ्चतत्त्वको अंश होइन र मान्छे ? पञ्चतत्त्वको अभावमा स्थापित गर्न सक्छ मान्छेले आफूलाई ? असम्भव । अकल्पनीय जब असम्भव छ भने किन हठी छ मान्छे ? किन छोड्दैन शठता ? आखिर किन सिल्ली हँ मान्छे ? के हठी र सिल्ली हुनु सर्वश्रेष्ठता हो ? होइन भने किन क्षतविक्षत पार्दैछ आफ्नै प्रकृतिलाई आफ्नै धरालाई । आफ्नै जननीलाई । आमालाई ।

के मिथ्या हो - "जननी जन्मभूमिश्च स्वर्गादपि गरीयसी ।" के मिथ्या हुन् - वेद, पुराण र कुरानहरू ? किन पुजिन्छन्, राम, कृष्ण, जिसस, पैगम्बर र बुद्धहरू ? किन ढोगिन्छन्, अल्लाह र परमेश्वरहरू ? किन पवित्र हँ ! मन्दिर, मस्जिद, चर्च र गुम्बाहरू ? किन बनाइन्छन्, अस्पतालहरूमा मन्दिरहरू ? किन टाँसिन्छन् भित्ता भित्तामा, आस्था र विश्वासका प्रतिविम्बहरू ?

आश्चर्य लाग्छ, अनि सोध्छु आफैसित । अनि सोंच्छु आफैभित्र । कसले अडाएको छ खगोललाई ? कसले चलाएको छ भूगोललाई ? तोरीका दानामा तेल भर्ने को हो ? काठ, दाउरामा अग्नि प्रवेश गराउने को हो ? बादलमा जल भराउने को हो ? आखिर किन देखिदैन वायु ? किन अजरामर छैन आयु ?

सुन्छु, चन्द्रमामा घडेरी खरिद बिक्री भइरहेछ । मंगलमा महल ठड्याउँदै छ । कुनै अनौठो लाग्दैन मलाई । मान्छेले चाहे सागरमा बस्ती बसाओस् या सगरमा सहर रचाओस् । प्रकृतिका सामु लिलिपुट नै छ मान्छे । जतिसुकै बुर्कुसी मारोस् आजको मान्छेले । जहाँको त्यहीं छ भ्यागुतोझैं बुरुक्क उफ्रिन्छ आकाश छुन्छु

भनेर । थेचारिन्छ भुईंको भुईंमै । विमान उडाएर ठूलो हुने भए प्राचीन वैदिक कालमै उडेका थिए पुष्पक विमानहरू । स्वर्ग, मर्त्य र पाताल तीनै लोक चाहार्थे ऋषि र देवगणहरू । आगोको आविष्कार मान्छेले गर्‍यो कि ईश्वरले ? अग्निदेव, जलदेव र वायुदेव किन पुजित भए ? महर्षिहरू किन वर्णित छन् पुराणहरूमा ?

वेद र पुराणहरूलाई दन्त्यकथा भन्नेहरूले किन लेख्न सकेनन् विशिष्ट र विराट आयामका दन्त्य कथाहरू । किन दिन सक्दैनन् गीता दर्शन ? किन सक्दैनन् पृथक् गर्न देह र आत्मालाई ? किन सक्दैनन् कालदेवलाई वशीभूत गर्न । किन टेक्छ घुँडा अदृश्य शक्तिसँग मान्छे ? किन मर्छ संसारसामु लम्पसार भएर मान्छे ?

जतिसुकै उन्नति र प्रगति गरोस् आजको मान्छेले मलाई त लाग्छ, ती सब जुरेली चरीले नुगाएका बाँसका टुप्पा जस्तै हुन् । बाँसको टुप्पोलाई कसले नुगायो ? प्रकृतिले कि जुरेली चरीले ? चरी बिचरी भन्छे - मैले नुगाएँ । मेरो पुरुषार्थले । मान्छेले भन्छ, मैले प्रकृतिमाथि विजय प्राप्त गरें । ग्रह, उपग्रह चाहर्ने भएँ । सगरमाथाको उचाइ र गहिराइ पत्ता लगाएँ, सूर्य र पृथ्वीको दूरी मेरो नापोमा परिसके । मानव शरीर जिउँदै काटेर अङ्ग, प्रत्यारोपण गर्न सक्छु । भेन्टिलेटरमा राखेर प्राण भर्न सक्छु । सियो डुब्ने सागरमा जहाज भ्रमण गराउन सक्छु । अन्तरिक्षमा मर्निङ्गवाक गराउन सक्छु । संसारलाई सानो गाउँ गराउन सक्छु । संसारका कुनै पनि कुनाका मान्छेहरूसँग आमनेसामने कुरा गराउन सक्छु । बार्सिलोनाको बिल बाग्लुङ्गमा भराउन सक्छु ।

साउदीका भेंडा सैपालमा चराउन सक्छु । वासिङ्टनको डेरा वालिङमा सराउन सक्छु । कसैले नगरेका काम गरेर विश्वकीर्तिमान गराउन सक्छु । गिनिज बुकमा सुन्दर/सुन्दरीलाई आफ्नो गराउन सक्छु । यी र यस्ता तमाम पुरुषार्थहरू छाट्न सक्छु भनेर आँट्न सक्छ मान्छेले । तर ढाँट्न सक्दैन, आफैभित्रको आत्मालाई । छल्न सक्दैन परमात्मालाई । निरीह छ मान्छे अदृश्य शक्तिसामु । जो अजेय छ । अजर छ । अमर छ । अविनाशी छ ।

मान्छे सर्वशक्तिमान् हुन्थ्योभने, किन रोक्न सक्दैन समुद्री ज्वारभाटाहरू । किन छेक्न सक्दैन बाढी र पहिरो ? प्रकृतिले शरीर हल्लाउँदा किन हल्लिन्छ मान्छेको मन ? किन ढल्छन् गर्ल्याम-गुर्लुम, गगनचुम्बी महलहरू । आफैले ठड्याएको महल आफ्नै मृत्युको कारण किन बन्छ मान्छेका लागि ? किन असमर्थ छन् गोताखोरहरू नदी वा समुद्रको गहिराइमा गाडिएका बडे बडे जहाजहरू बटुल्न ? ज्वालामुखीको लप्को र हप्को सहन गर्न सक्छ र मान्छेले ? कि निभाउन सक्छ मान्छेको दमकलले ? सक्दैन भने केको फूर्ती ? केको घमण्ड ? केको अहम् ? केको सर्वश्रेष्ठ ?

शल्याक्रियाका कुरा गर्ने हो भने, अङ्ग प्रत्यारोपणका कुरा गर्ने हो भने, त्यो त अहिले होइन उहिल्यै गरिसकेका थिए ऋषि, महर्षिहरूले, । मान्छेका मात्र होइन पशुका अंगहरू पनि मान्छेमा प्रत्यारोपण गर्न सक्ने दक्षको शरीरमा बोकाको टाउको र गणेशको शरीरमा हात्तीको टाउको यसको प्रमाण होइन र ? उहिले बाण हानेर फुटालिदिन्थे पानीका मूलहरू ।

त्यसैले म भन्छु, मान्छे निरीह छ जगत्मा । केही लछार्न सक्दैन मान्छेले । खानु र उत्सर्जन गर्नु मात्र बाँच्नु होइन । त्यो त सबैले गरेका छन् जीवले र वनस्पतिले । पोशाकले सजाए पनि पाउडर घसाए पनि, धोए पनि भित्र फोहोर डङ्गुर छ मान्छेमा । स्वार्थको ईष्याको क्रोधको लोभको । अहङ्कारको वासनाको अनेकौं फोहरमैलामा रुमल्लिएको छ मान्छे । काम, क्रोध, लोभ, मोह, मद, मात्सर्यको अन्धकारले जालो लगाएको छ आँखामा । विषय र वासनाका सारथीहरूले कुँदाएका छन् मान्छेका इन्द्रियहरू । र त हत्या गर्छ आफ्नै कुटुम्बहरुलाई । बलत्कार गर्छ आफ्नै आमा, दिदी, बहिनी, छोरी र भाञ्जीहरूलाई । जिउँदै जलाउँछ बुहारीलाई । कति हिंस्रक छ मान्छे । मान्छेसितै तर्सिन्छ र आत्तिन्छ मान्छे । मान्छेले किन सक्दैन आफैलाई रताउन ? अनि किन तम्सिन्छ अरूलाई सताउन ? आखिर केका लागि ?

कहिलेकाहीं शंका लाग्छ, आफैप्रति/म किन मान्छे भएँ? के म विवेकशील छु ? के साँच्चै सर्वश्रेष्ठ भन्नलायक छन् मेरा विचार र कर्महरू ? के न्याय गर्न सकेको छु मैले जीवन र जगत्लाई ? ओजोन तह कसका कारणले पातलियो ? जलवायु परिवर्तनमा जिम्मेवार को हो ? किन बढ्दछ उष्णता ? किन सुक्दैछन् पानीका मुहानहरू ? किन हाहाकार छन् मानव जगत्मा । मानव जीवनमा किन गर्दैन कसैले कसैको विश्वास ? किन पड्किन्छन् बम र बन्दुकहरू ? किन बनाइन्छन् जेल र नेलहरू ? कि कहिल्यै पड्क्यायो भालुले बन्दुक ? कि सल्काउँदै हिंड्छ हात्तीले जंगलमा डढेलो ? चराहरूले उडाएका हुन् त धुलो र धुँवा ? कि माछाहरूले लगाइदिएका हुन् भल मान्छेका बस्तीतिर ? बँदेलले उँधिनेर पहाडहरू पैह्रो गाएको पो हो कि ? रातारातमा प्वाल पार्दै हिडेका हुन् कि भैंसीहरू आहाल खेल्न पक्की सडकमा ? आखिर दोष कसको ? जिम्मेवारी कसको प्रकृतिलाई क्षतविक्षत पार्नुमा ? आखिर किन सजाउँछ चिता आफ्नै लागि ? के भन्दा हुन् पशुहरू मान्छेलाई ? कस्ता ठान्दा हुन् जलचरहरू ? वानरबाट विकसित भएको रे नर ! डार्विन यसै भन्छन्, के फरक छ हँ नर र वानरमा ? अँ साँच्ची, मान्छे बाँदर हो कि ? बाँदर मान्छे ? लौन छुट्याइदिनु पर्‍यो । बिलखबन्दमा परियो । आखिर किन र कसरी मान्छे सर्वश्रेष्ठमा दरियो ?

ooo

# डायस्पोराको आँखिझ्यालबाट चियाउँदा देखिएको झिल्को 'मुगलान'

✍ डा. शंकरप्रसाद गैरे
त्रिभुवन बहुमुखी क्याम्पस, पाल्पा

**लेखसार**

डायस्पोरा विश्वसाहित्यमा देखिएको नवीनतम अवधारणा हो । भूमण्डलीकरणसँगै मान्छेको भौगोलिक सीमा फराकिलो हुन जान्छ र ऊ समाज र राष्ट्रियताको सीमा नाघेर बाहिरिन्छ । उसको दिनचर्या, मनोभाव आदिमा देखिने प्रभावसँग यसको सम्बन्ध रहन्छ । उत्तरआधुनिक बहुलवादी दृष्टिकोणमध्ये डायस्पोरा एक हो । नेपाली साहित्यमा उत्तरआधुनिकताका प्रमुख अभियन्ता मानिने गोविन्दराज भट्टराई समालोचकका साथै सर्जक पनि हुन् । सिर्जनामा कविता, उपन्यास, निबन्ध जस्ता विधामा उनको विशिष्ट पहिचान छ । उनले २०३२ सालमा 'मुगलान' बाट उपन्यासको क्षेत्रमा प्रवेश गरेका हुन् । पछिल्लो समयमा उनका औपन्यासिक कृतिहरू 'सुकरातका पाइला' र 'सुकरातको डायरी' नवीन प्रयोगका नमुना बनेर देखापरेका छन् । 'मुगलान' सिर्जना हुँदा विश्वसाहित्यमै डायस्पोराको अवधारणा विकसित भैसकेको थिएन र यो उपन्यास नेपाली साहित्यमा यथार्थवादी उपन्यासको कित्तामा उभिन पुग्यो । तर पनि आजको परिप्रेक्ष्यमा डायस्पोराको अवधारणासँग यसको मितेरी घनिष्टतम देखिन आउँछ । यहाँ डायस्पोराकै दृष्टिकोण अँगाली मुगलानको विश्लेषण गरिएको छ ।

## डायस्पोराको सैद्धान्तिक दृष्टिकोण

उत्तरआधुनिक बहुलवादी अवधारणाहरूमध्येको डायस्पोरा एक हो । अंग्रेजी शब्द डायस्पोराको पर्यायवाची शब्दका रूपमा आप्रवासी, परादेशीय, देशपारीय, देशपरीय, विकीर्णन, विस्थापन, निर्वासन, प्रवास, गैरआवासीय (पौड्याल, २०७० : १०८) जस्ता शब्द प्रचलनमा छन् तर नेपाली साहित्यले 'डायस्पोरा'लाई नै अत्यधिक प्रयोगमा ल्याएको देखिन्छ । डायस्पोरा अंग्रेजी शब्द हो । यसको मूल स्रोत ग्रिसेली 'डायस्पेयर' हो ।

एउटा देश, भाषा, जाति, संस्कार संस्कृति समाज, परिवेश आदिमा आबद्ध मान्छे कुनै भिन्नै मुलुकको भाषा, जाति, संस्कार, संस्कृति, समाज, परिवेश, आदिमा गएर मिसिन पुगेपछि त्यो मान्छे आप्रवासी हुन्छ । त्यस्ता आप्रवासीहरूको लेखनलाई डायस्पोरिक लेखन भनिन्छ (गौतम, २०६६ : १२६) डायस्पोरा शब्दको प्रयोगपरम्परा लामो छ । यसको प्रयोग इसापूर्वदेखि नै हुँदै आएको हो, तर

वर्तमानमा यस शब्दले निकै अर्थविस्तार पाएको छ र कुनै निश्चित यहुदी जातिबाट विस्तारित भएर विश्वका हरेक कुनामा गएर बसेका सबै व्यक्तिलाई बुझाउँछ जसले खुसी र सुखका निम्ति आफ्नो थातथलो छोडेका हुन्छन् । आजको डायस्पोराले प्यालेस्टाइनका यहुदीहरूको काविलोनियामा भएको निर्वासनलाई मात्र नबुझाई जाति, भाषा, संस्कृति आदि भिन्न भएका स्थानमा स्थायी वा अस्थायी बसाइसराइ गर्नु भन्ने जनाउँछ । (पौड्याल, २०७० : १०९) युद्ध, आतङ्क, भोकमरी, गरिबी, यौनदुराचार, लाञ्छना, हेलत्व, जातिगत पतन, बदमासी, सम्पन्नताको चाहना, नवीनतम सम्भावनाको खोजीजस्ता कारणले मान्छे बाध्य भई वा स्वैच्छिक रूपमा बसाइ सर्छ (गौतम, २०६४ : २८१) । डायस्पोरालाई आन्तरिक र बाह्य भनी विभाजन गरेको पाइन्छ । एक समाजबाट अर्को समाज तथा देशबाट अर्को देशमा सर्ने अवस्था देखिन्छ तापनि डायस्पोराभित्र पात्रको जुन मनोभावनाको प्रस्तुति देखिन्छ त्यसले गर्दा निकटभन्दा टाढाको बसाइमा नै डायस्पोराका लक्षणहरू अधिक देखिन्छन् । निकटभन्दा दूर देशमा सरेको होस्, जहाँबाट चाहेको समयमा सहज रूपमा आफ्नो स्थान वा देशमा आउन सम्भव नहोस् (गौतम, २०६४ : २८०) ।

साहित्यमा आप्रवासीय मनोभावना र तिनका समस्यालाई प्रस्तुत गर्ने परम्परा लामो छ, तर सचेततापूर्वक डायस्पोराको दृष्टिकोण प्रस्तुत गर्ने परम्परा भने लामो होइन । गोविन्दराज भट्टराई नेपाली साहित्यमा 'यमपुरीको महल' (२०६४) बाट डायस्पोरिक लेखनको औपचारिक थालनी भएको मान्दछन् (भट्टराई, २०६४ : १६३) ।

## मुगलानको डायस्पोरिक विश्लेषण

गोविन्दराज भट्टराईलाई उपन्यासकारको रूपमा परिचित गराउने उपन्यास 'मुगलान' २०३२ सालमा प्रकाशित भएको हो । हालसम्म चारवटा उपन्यास लेखेका भट्टराईलाई 'मुगलान' र 'मणिपुरको चिठी' (२०३४) ले यथार्थवादी कित्ताका उपन्यासकारको परिचय दिएका छन् । भट्टराईले 'मुगलान' उपन्यासमा प्रस्तुत गरेको यथार्थ पछिल्लो समयमा डायस्पोरा अर्थात् आप्रवासी समस्याका रूपमा चिनिने साहित्यलेखनसँग अत्यधिक निकट रहेकोले यहाँ डायस्पोरिक सन्दर्भबाट नै उपन्यासको विश्लेषण गरिएको छ ।

'मुगलान' उपन्यासमा आर्थिक अभावका कारण काम र मामको खोजीमा मुगलानिएका नेपालीहरूले त्यहाँ भोग्नुपरेको पीडा र सकसलाई संवेदनशील ढङ्गबाट प्रस्तुत गरिएको छ । देशभित्र अनेक समस्या र अभावसँग लड्दालड्दै हार खाएर सुखको सपना बोकी विदेश जाने र विदेशमा अझबढी दुर्दशाहरूसँग जुध्नुपर्ने समस्यालाई उपन्यासले उठाएको देखिन्छ (लुइटेल : १९८) ।

तत्कालीन समयमा सुखको सपना बोकी नेपालीहरू भारत जाने प्रचलन थियो । घ्यु बेचेर नुन किन्न जाने, अथवा घरबाट पैसा चोरी हिड्ने परिपाटीलाई उपन्यासको उठान बनाइएको छ । गाउँलेहरूसँग च्याङ्थापुको कालीडाँडाबाट नुन, तेल र बर्खे सामान किन्न हिँडेका ठूले र कान्छो सुतार त्यतैबाट सिलगढी जाने ट्रकमा चढेर हिँड्छन् । दार्जीलिङ हिँडिरहेको ट्रकमा चढेका ठूले र सुतारसँग कुनै गन्तव्य हुँदैन, तर सुखको सपना साथमा हुन्छ । तीनधारेमा पुगेर खलासीले भाडा माग्छ । उनीहरूको कुनै निश्चित गन्तव्य नभएकोले खलासीको 'कहाँ जाने ?' भन्ने प्रश्नको उत्तरमा "जाने टुङ्गो त छैन, मुगलान जान भनेर हिँडेका" (पृ.२) भन्छन् । सिलगढीको न्यु मार्केटमा पुगेर ट्रकले उनीहरूलाई त्यही ठाउँमा ओरालिदिन्छ ।

यसरी पहिलोपटक प्रवास छिरेका नेपालीलाई रिक्सावालले समेत कतिसम्म सताउँछन् र ठग्छन्, आफ्नै बनेर कसरी बेचिदिन्छिन् भन्ने कुराको मार्मिक र चित्रात्मक प्रस्तुति सिलगढीमा देखिन्छ । रिक्सावालाले तानातान गरेर ठूलेको झोला च्यातिदिन्छन् । सुतारले हिर्काएपछि रिक्सावाल पाखा लाग्छन् । कहाँ जाने ? भनी अलपत्र परिरहेका ठूले र सुतारलाई एउटा नेपाली रिक्सावालाले आत्मीयता देखाउँदै न्यु मार्केटको तीन फन्को मारेर स्टेसन पुऱ्याउँछ ।

रिक्सावालाले उनीहरूलाई सुझाव दिँदै चोर लाग्नेहुँदा सचेत रहन भन्छ । प्लेटफर्ममा पालैपालो सुत्ने भने पनि थाकेकाले दुबैजना निदाउँछन् । उनीहरूको पैसा चोरी हुन्छ । आफन्तहरू आसामतिर रहेकोले आसम जान रेल चढेका ठूले र कान्छो सुतारलाई टिकट काट्नुपर्छ भन्नेसम्म ज्ञान हुँदैन । अरूले टिकट काटेको देखेर पैसा निकाल्न खोज्दा पैसा चोरी भएको थाहा पाउँछन् । उनीहरूलाई नियालिरहेको रिक्सावालाले आत्मीयता प्रकट गरेर सिक्किमको बाटो खन्न मान्छे सप्लाई गर्ने मान्छे (रनुदाइ) लाई बीस रूपियाँमा बेचिदिन्छ । यसरी एउटै व्यक्ति रिक्सावालले पटकपटक ठग्दा पनि पत्याउने यी दुई पात्र अत्यधिक सोझा देखिन्छन् । रनुदाइले उनीहरूलाई जीपमा हालेर टिस्टा पुऱ्याउँछ । जहाँसुकै जाँदा पनि ती दुई सोझा नेपाली भर्तीकै सपना देख्छन् । टिस्टाबाट हिँडाउँदै जङ्गलको बाटो लाँदा पनि उनीहरू सोँच्छन् "भर्ती लाग्ने ठाउँ यही जङ्गलमा हुनुपर्छ" (पृ. २१) । एक राइनीका होटलमा पुग्दा त्यहाँ अरू केटाहरू पनि जम्मा पारिएका हुन्छन् । ती केटाहरू पनि भर्ती हुने सपना बुनेर बसेका हुन्छन् । तिनैमध्येको एउटाले भन्छ "अब हामीलाई लगेर एक वर्ष जति टेडिङ गराउँछ । तेसमा पास भएर उत्रेपछि बन्दुक भिरेर पठाउँछ । बीचमा दुईवर्षे छुट्टी मिल्छ । खान, लाउन, बस्न केही पैसा पर्दैन–सब सरकारी मिल्छ" (पृ.२४) । राइनीकहाँ जम्मा पारिएकामध्येको एउटा केटो यस्तो योजना बुन्छ "दुई वर्ष नभै घर फिर्दिैन आफू त । पल्टने भएपछि अलिकति सम्पत्ति नकमाई के फिर्नु ? एकपल्टलाई साहूका हातमा परेको पाखोरेखो उकास्न पाए पनि बाउ–आमाको

भारा काटिन्थ्यो कि ?" (पृ. २५) ऊ तीनचारजना भरियालाई पछि लगाएर घर फिर्ने योजना बुन्छ । ठूलेले भर्ती हुनेबारे संशय व्यक्त गर्दा गल्लावालाले ठहराएको र पाँचदिनदेखि सरकारी रासन खुवाएको ठहर गरेरै हो भन्छ ।

रनुदाइले प्रत्येक व्यक्तिलाई चालीसको दरले बेचिदिँदा पनि उनीहरू आफू बेचिएको थाहा पाउँदैनन् । ठेकेदारले गाडीमा हालेर टिस्टामाथिबाट हिँडाउँदा बाटोमा फौजीको क्याम्प देखेर आफू पुग्ने ठाउँ आएको सम्झेर रमाउँछन् । बजारमा ट्रक रोकिँदा पनि ती केटाहरू भर्ती हुने ठाउँ आयो भन्ने सम्झन्छन् । बानरहाट हुँदै फुन्चेलिङ पुगेर रात बिताउँछन् । लामो यात्रापछि ट्रकभित्रै पालमा सुतेको कार्कीले भन्छ "टुङ्गोमा पुग्ने पत्तै छैन । मलाया छाउनीमै पुऱ्याउँछ कि कसो ?" (३७) हरेक अवस्थामा आशान्वित हुने प्रवृत्ति यहाँ कार्कीको देखिन्छ । सुतार पनि कार्कीजस्तै निश्चिन्त देखिन्छ । ऊ भन्छ "जहाँ पुऱ्याए पनि के छ र ? जिम्मा भैगयो खान पाएकै छौं" (पृ.३७) ।

बिहान उठेपछि भोटे केटाले "ठेकेदार साहेब तपाईंका कुल्लीहरूलाई पनि खाना बनाउनुपर्छ अहिले ?" (पृ.३७) भन्दा पनि उनीहरूमा चेतना आउँदैन । तर मोत्तान नाम गरेको केटो भने त्यो बुझेर भाग्छ । त्रिवेणीबाट कच्ची बाटो हुँदै गैंटी बेल्चा बोकेका कुल्लीहरूलाई देख्दा पनि उनीहरूमा त्यस ठाउँलाई पल्टन लाग्ने ठाउँ नै सम्झन्छन् ।

जिम्दारले कामको जिम्मा लगाएपछि बल्ल उनीहरूले कुल्ली हुन आएको चाल पाउँछन् । सुतारले भन्छ "पल्टनमा लगाउँछ भनेर भर परिएको त यस्तामा ल्याएर जाक्यो नि दाइ !" तर पनि ठूले निश्चिन्त हुँदै भन्छ "भैगो यस्तो रोडको काम पनि जान्नै पर्ने हो । ...आधा खाएर आधा बचाए पनि अर्को साल घर हजार लिएर जान पाइन्छ । लुगा र जुत्ता अब उसैले दिने भो चित्त बुझाउनै पऱ्यो" (पृ. ४७) ।

अनेक दुःख कष्ट सहँदा पनि महिनाको अन्त्यमा तलब बुझ्न पाइन्छ भन्ने सुनौला सपना देखिरहेका ती सोझा नेपालीहरूको सपना त्यतिबेला भङ्ग हुन्छ जतिबेला तलब थाप्ने दिन आउँछ । सिलगढीदेखि टिस्टासम्मको भाडा, टिस्टामा बास बस्दाको खर्च, यात्रा खर्च हिसाब गर्दा उल्टै आफ्नो नाममा ऋण परेपछि उनीहरूको होस उड्छ । कार्कीको अवस्थालाई उपन्यासमा यसरी चित्रण गरिएको छ "कार्कीले अचानक मूर्च्छा खायो । ऊ एकैचोटि छाँगाबाट खस्यो । त्यसरी सिलगढीदेखिको हिसाब होला भनेर उसले चिताएको थिएन । एकै पैसा हातमा पर्नुको साटो उल्टो ऋण ?" (पृ. ५३) ।

भर्ती हुने सुनौला सपना बोकेर घर छोडी हिँडेका ठूले, सुतार र कार्कीहरूको दिनप्रतिदिन बढ्दै गएको कष्टकर दिनचर्याको चित्रण उपन्यासमा यसरी गरिएको छ "रासनको लागि लाइनमा बस्नु, नाङ्गो डाँडामा आगो बालेर भात पकाई खानु

र साँगुरा चिसा भुँइमा सुत्नु" (पृ. ५४) । एकदिन पुरानो एक कुल्लीले उनीहरूलाई भन्छ "खाउँला लाउँला भन्ने ज्यान लिएर आएछौ तर यिनीहरूले तिमेरको हाड घोटेर मार्छन्" (पृ. ५४) । यसरी नुन र माल सामान बोक्न गएकोमा मुगलानको रङ्गीचङ्गी सपनाबाट आकृष्ट भएर मुगलानतिर हानिएका यी सोझा नेपालीहरू बधुवा नेपालीका रूपमा सडक खन्ने काम गर्छन् । त्यहाँ दुःसाध्य श्रम र अनमोल पसिनाको अर्थ छैन भन्ने थाहा पाउँछन् (कोइराला र लाकोजू, २०७२ : १७४ ।

बारूद पड्काउँदा घाइते भएर लामो बिरामी परेर उठेको कार्कीले निराश हुँदै घर सम्झन्छ । उसको त्यस अवस्थालाई उपन्यासमा यसरी प्रस्तुत गरिएको छ "आमाबाबुको एक्लो छोरो ऊ घरै बसे पनि जीवन यति साह्रै कष्टसाध्य हुन्थेन हो । उसले अझै सम्झिदै गयो –बिहे गरेकी स्वास्नी माइतमै थिई, एक्ला बाबु–आमालाई बिर्सेर बाटा लागेको पनि आज पूरै छ महिना पुगेछ ।...पलपलमा घर, छरछिमेक, वन-पाखा र आजीवन उफ्रेका कुदेका पखेरा सम्झी ऊ विह्वल भयो" (पृ. ५८) । यस उपन्यासमा कार्कीको यो अवस्था विभिन्न कारण देशबाहिर बसेका र मातृदेशको ममता र सम्झना भइरहे पनि विभिन्न कारणले स्वदेश फर्किन नसक्ने अवस्थालाई बुझाउँछ (पौडेल, क, २०७० : १४४) भन्ने डायस्पोरिक सन्दर्भसँग मेल खान्छ ।

सबैका मनमा निराशा छाउँदै जान्छ । परदेशको कामभन्दा घरको काम उनीहरूलाई सजिलो लाग्न थाल्छ । कार्कीले भाग्ने कुरा गर्छ । ठूलेले हिँउद लागेपछि सँगै भाग्ने विचार सुनाउँछ । चरम शोषणमा परेका ती कुल्ली कामदारहरू विरोधको आवाजसम्म निकाल्न सक्दैनन् । काम गर्दा हराएको, भाँचिएको हतियारको नोक्सानी पनि आफूले बेहोर्नुपर्ने हुँदा हराएको छिनो खोज्न गएको ठूले फर्कँदैन । ऊ भाग्यो भन्ने शंका हुन्छ तर उसको कपडा र पैसा ठाउँमै भेटिन्छ । अरू भागेका चारजना केटाहरूलाई समातेर ल्याई सजायस्वरूप दुई महिनाको तलब काटिन्छ । उनीहरूलाई फेरि भागे ज्यान मार्ने धम्की सुनाइन्छ । यी विभिन्न सन्दर्भले ठूले छिनो खोज्ने क्रममै हराएको वा मरेको भन्ने बुझिन्छ ।

एकदिन कामबाट नफर्केको लाले सुब्बा बिहान हिँउमा पुरिएको अवस्थामा भेटिन्छ । जिम्दारले उसको लास भिरबाट धकेल्न लगाउँछ । राइकान्छो बिस्तारै बिरामी पर्दै सुन्निदै जान्छ र एकदिन मर्छ । उसको उपचारको कुनै प्रयत्न हुँदैन । आफ्ना साथीहरू एकएक गर्दै मर्दै गएकोले दुईवर्षपछि तीनसय तलब बुझेका सुतार र कार्की राति उठेर भाग्छन् । सातौँ दिन कार्की बाटोमै मर्छ । तीनसय पैसासँगै साथीलाई गुफामा जलाएर अघि बढेको तीन दिनदेखिको भोको सुतारले जामुन खान्छ । रूखका हाँगा काटिएको देखेर मानव बस्तीको अनुमान लगाउँछ ।

भागेको दश दिनका दिन उसले एउटा गोठ र गोठालो पाखे साइलोलाई भेट्छ । त्यस गाउँमा बाटोमा काम गर्नेलाई डिपाइटे भन्ने र भागी आएका डिपाइटेलाई कम्पनीमा बुझाइदिने चलन भए पनि मानवताको प्रतिमूर्ति पाखे साइलोले सुतारलाई सहयोग गर्छ । घर जान्छु भनेको सुतारलाई सम्झाएर त्यहीँ राख्छ । सुतारको अन्य गोठालाहरूसँग पनि परिचय बढ्छ । पाखेले सुतारको सच्चाइ लुकाएर काम गर्न ल्याएको बताउँछ । सुतारले निकै लगनका साथ पाखेका बस्तुभाउको हेरचाह गर्छ । उसले आफ्नै सम्झेर काम गर्छ । पाखेलाई खेती गर्न पठाएर गोठको काम सम्हाल्छ । पाखे बिरामी पर्दा खेती गरिदिन्छ । सुन्तला लिएर साम्चीबजार जान्छ । सबै गाउँलेको मन जित्छ । पाखेको परिवारको सदस्य बनेको सुतारलाई पाखेले परिवारसँग सल्लाह गरेर १४ वर्षकी जेठी छोरी ठूलीको बिहे गरिदिन्छ ।

ठूलेसँग लाहुरे बन्ने सपना बोकेर घरबाट भागेको सुतार अनेक हन्डर खाँदै पाखेको ज्वाइँ बन्न पुग्छ, तर पाखेको शत्रु सालबोटेले पुलिस ल्याएर पाखेले डिपाइटे लुकाएको भनी जेल पुऱ्याउँछ र उसको घरमा आगो लगाइदिन्छ । त्यहाँबाट भागेको सुतार चेङमारी चियाकमान पुग्छ । केही समय दुःख पाउँछ । पछि मोत्तानको सहयोगमा चियाकमानमा काम पाउँछ । चियाकमानमा काम गर्ने, नैनीतालमा अदुवा खरिद गरेर बानरहाटमा बेच्ने गर्छ । पाँचवर्ष परिश्रम गरेर तीन हजार जम्मा पारेको सुतार घर फिर्ने सौँच बनाउँछ । बानरहाटमा पाखेको छोरो हङ्सेसँग भेट भएपछि ठूलीले आफूलाई पर्खिबसेको थाहा पाउँछ । चियाकमान फर्कँदा मोत्तानले सारा पैसा बोकेर भागेको थाहा पाउँछ ।

ठूलीसँग भेटेपछि पुनः दुबैले काम गर्न थाल्छन् । मेसिनको फिताले लागेर ऊ काम गर्न नसक्ने हुन्छ । उसको छोरो जन्मन्छ । जीवनमा अनेक दुर्घटना ब्यहोरेको सुतार विक्षिप्त हुँदै जान्छ । व्यापारको हिसाब बिर्सन थाल्छ । उसको आर्थिक अवस्था बिग्रँदै जान्छ ।

एकदिन व्यापार गर्न जाँदा सुतारको भेट उसको बाबुसँग हुन्छ । बाबुले १३ वर्षकी छोरी उसलाई जिम्मा लगाउँछ । छोरी तीन वर्षकी हुँदा बुहारी पोइला गएको र सुतारकी आमा एकवर्ष पहिला बितेकोले नातिनीलाई लिएर कामाक्षा हिँडेको बाबु सुतारलाई छोरी जिम्मा दिन्छ । त्यसपछि सुतारको घर फिर्ने धोको समाप्त हुन्छ ।

आमा र छोरीले बगानमा काम गर्छन् । बच्चो बढ्दै गएकोले दुबैले काम गर्न मिल्दैन । एकदिन काममा गएकी छोरी डेरा खाली गर्ने पर्ची लिएर फर्कन्छे । भोकै सुतेको सुतारले ढुङ्गाले च्यापेर मरेको सपना देख्छ । विक्षिप्त सुतार छोरीलाई झम्टन्छ । ठूलीले अगुल्टोले हानेपछि आत्तिएर घरबाहिर निस्किएको सुतार "मेरो ठूल्दाजू ! मेरो कार्की" भन्दै जङ्गल हुँदै डायना खोलातिर लाग्छ ।

ऊ फेरि घर फर्किँदैन । यसरी कारूणिक घटनामा पुगेर उपन्यास समाप्त हुन्छ ।

लाहुरे बन्ने, धन कमाएर घर फर्किने, साहूको रिन तिर्ने सुनौला सपना बोकेर बाबु, आमा, स्वास्नी गाउँ र देश छोडी हिँडेका कार्की, ठूले, सुतार र उनीहरूजस्तै थुप्रै नेपालीहरूले प्रदेशमा भोग्नुपरेको यातना र आफ्नो घर परिवार सम्झिएको सन्दर्भले उपन्यासलाई डायस्पोरिक तुल्याएको छ । ठूले, लाले बुब्बा, राई कान्छो अकालमा मर्नु, गाउँ सम्झेर भाग्नेहरूले यातना पाउनु, सुतारसँगै भागेको कार्की बाटैमा मर्नु नेपालीका डायस्पोरिक कारूणिक सन्दर्भ हुन् ।

जङ्गलको बाटो मान्छे र पशु दुबैसँग डराउँदै भागेको सुतार कान्छो मानवबस्तीमा पाखे साइलोको समीपमा पुग्छ । केही स्वस्थ भएपछि घर फिर्ने इच्छा गर्छ तर पाखेले "त्यो गति लिएर के घर फिर्ने ? तै तै एकवर्ष यतै बसौँ । खर्क छ, गोठ छ, घर छ । खेती कमाइ गर्नु परेमा भएको फाँडौँला । त्यसपछि घर फिर्नु, अलिकति जेथो पनि हातमा पर्नेछ" (पृ.९९) भनेपछि पाखेकै सहयोगी बनेर बस्छ । इमानदार सुतारले गाउँलेहरूको मन जित्छ । पाखेले छोरी पनि दिन्छ तर पाखेको शत्रु सालबोटेका कारण पुनः त्यहाँबाट भाग्न विवस हुन्छ । भागेर चेङमारी पुगेको सुतारले पाँचवर्ष कमाएको पैसा लिएर घर फर्कने तयारी गर्दैगर्दा आफ्नै साथी मोक्तानले पैसा चोरेपछि विचल्ली हुन्छ ।

स्वास्नी पोइला गएपछि र आमा मरेपछि नातिनी बोकेर बाबु रेलस्टेसनमा भेटिएपछि घर फिर्ने सपना सदाका लागि समाप्त हुन्छ । जीवनमा धेरेपटक हन्डर खाएर अचेत बनेको सुतारको जीवनकथा डायस्पोरिक देखिन्छ ।

## निष्कर्ष

नेपाली साहित्यका समालोचना तथा सिर्जना विधामा विशिष्ट पहिचान बनाएका गोविन्दराज भट्टराईको पहिलो उपन्यास 'मुगलान' प्रवासी नेपालीहरूको दुःसाध्य र सङ्घर्षपूर्ण प्रवासी जीवन भोगाइको कथा हो । सुनौला सपना बोकेर मुगलान छिर्ने तर अनेक कारण असन्तुष्टि, अतृप्ति, निराशा र कष्ट भोग्नेहरूको प्रस्तुतिलाई वर्तमान साहित्यले डायस्पोरिक वा आप्रवासीय साहित्य भन्दछ । मुगलानको विषयवस्तु यस दृष्टिकोणले डायस्पोरिक लाग्दछ ।

गाउँबाट नुन किन्न शहर हिँडेका ठूले र सुतार भर्ती हुने, लाहुरे बनेर घर फर्कने सुनौला सपना बोकी त्यतैबाट भाग्छन् । टिस्टामा कार्कीलगायत अन्य नेपाली युवाहरू भेटिन्छन् जो सुतार र ठूलेले जस्तै सपना सजाएर घर छोडेका हुन्छन् । परन्तु मानव तस्करी गर्ने ठेकेदारले उनीहरूलाई सिक्किम पुऱ्याएर बाटो खन्ने कुल्लीका रूपमा बेचिदिन्छ । ती कुल्लीहरूलाई डिपाइटे भनिन्छ जो त्यहाँबाट भाग्न पनि सक्दैनन् । श्रमको चरम शोषण र ज्यानको अत्यधिक

जोखिम भएको त्यस काममा ठूले, लाले सुब्बा, राई कान्छो गर्दै साथीहरू मर्दै गएपछि त्यस ठाउँबाट सुतार र कार्की भाग्दछन् तर यात्राकै क्रममा कार्कीको पनि निधन भएपछि सुतार एक्लिन्छ । 'हाः' बाट भागेको दश दिनमा मानव बस्तीमा पुगेको सुतार पुनः केही कमाएर घर फिर्ने सपना देख्दै पाखेकोमा काम गर्छ । पाखेको शत्रु सालबोटेका कारण त्यहाँबाट भागेर चेङमारी पुग्छ । त्यहाँ पाँचवर्ष मिहिनेत गरेर कमाएको पैसा साथी मोत्तानले चोरिदिन्छ । स्वास्नी पोइल गएको, आमा मरेको र बाबु तीर्थ गर्न हिँडेको थाहा पाएपछि पैसा कमाएर लाहुरे बनी घर फर्कने सुतारको सपनाको अन्त्य हुन्छ । आफ्नो विगत सम्झेर विक्षिप्त सुतारको प्रवासमै निधन हुन्छ ।

यसरी सुनौला सपना बोकेर देश छोडेका नेपालीले देश फर्कन नसक्ने र प्रवासमा पनि सुखी र खुसी रहन नसक्ने, चिन्ता र पीडामा जीवन समाप्त गर्नुपर्ने अवस्थाको कथा प्रस्तुत गरेको 'मुगलान' उपन्यास आप्रवासीय अर्थात् डायस्पोरिक सन्दर्भको एक शक्तिशाली उपन्यासका रूपमा देखापरेको छ ।

## सन्दर्भसामग्री


- कोइराला, कुमारप्रसाद र लाकोजू, सूर्यप्रसाद, (सम्पा.), (२०७२), **साहित्यकार गोविन्दराज भट्टराई**, काभ्रे : अक्षरमार्ग ।
- गौतम, कृष्ण, (२०६४), **उत्तरआधुनिक जिज्ञासा**, काठमाडौं : भृकुटी एकेडेमिक पब्लिकेसन्स ।
- गौतम, लक्ष्मणप्रसाद, (२०६६), **नेपाली साहित्यमा उत्तरआधुनिक समालोचना**, काठमाडौं : ओरिएन्टल पब्लिकेसन ।
- पौड्याल, एकनारायण, क, (२०७०), **आधुनिक नेपाली समालोचनाको इतिहास**, चितवन : विमर्श नेपाल ।
- ............, (२०७०), **समालोचनाको स्वरूप र पद्धति**, चितवन : विमर्श नेपाल ।
- भट्टराई, गोविन्दराज, (२०६४), **उत्तरआधुनिक विमर्श**, काठमाडौं : मोडर्न बुक ।
- ............, (२०७४), **मुगलान**, छैटौं संस्करण, काठमाडौं : ओरिएन्टल पब्लिकेसन ।
- लुइटेल, खगेन्द्रप्रसाद, (२०६९), **नेपाली उपन्यासको इतिहास**, काठमाडौं : नेपाल प्रज्ञाप्रतिष्ठान ।


ooo

# शिव पौड्यालको अमर फल चाख्दा

✍ **डा. श्यामप्रसाद न्यौपाने**
**सुनवल १२, नवलपरासी**

## १. आरम्भ

नेपाली लोकसाहित्यको अध्ययनअनुसन्धानमा सक्रिय व्यक्तित्वको नाउँ हो, शिवप्रसाद पौड्याल । विशेषतः नेपाली उखानटुक्काको अध्ययन र अनुसन्धानमा आफूलाई समर्पित गरेका शिव पौड्याल सिर्जनाको क्षेत्रमा पनि कलम चलाउँदै आएका छन् । प्रस्तुत लेख सुशीला पौड्यालद्वारा वि.सं. २०७२ मा प्रकाशित शिव पौड्यालको अमर फल कथाको सेरोफेरोमा रहेको छ ।

## २. स्रष्टा परिचय

गुल्मी जिल्लाको हर्दिनेटा ४ रूम्जाकोटमा वि.सं. २०२३ मा जन्मिएका शिवप्रसाद पौड्यालले मूल विषय नेपाली लिई त्रिभुवन विश्वविद्यालयबाट स्नातकोत्तर एवं उक्त विश्वविद्यालयबाटै नेपाली लोकसाहित्यअन्तर्गत नेपाली उखानको अध्ययन शीर्षकमा विद्यावारिधि उपाधि प्राप्त गरेका छन् । लोकसाहित्यतर्फको यिनको आकर्षण स्नातकोत्तर तहमा अध्ययन गरेदेखि नै भएको कुरा स्नातकोत्तर तह दोस्रो वर्षमा लुम्बिनी क्षेत्रमा प्रचलित नेपाली उखानको अध्ययन शीर्षकीय अनुसन्धानबाट स्पष्ट हुन्छ । जीवनयापनको क्रममा गुल्मीबाट नवलपरासी हुँदै रूपन्देहीको तिलोत्तमा ५ शङ्करनगरमा बसोबास गर्न पुगेका पौड्याल लामो समयदेखि लोकसाहित्यको अध्ययन र अनुसन्धानमा जुटेका छन् । स्थानीय एवं राष्ट्रिय पत्रपत्रिकामा विविध विषयसँग सम्बन्धित लेखरचना प्रकाशित गराउँदै आएका पौड्यालको अमर फल (कथासङ्ग्रह) २०७२ को गाताबन्दीको पछिल्लो पृष्ठमा उल्लेख भएअनुसार यिनका हालसम्म प्रकाशित पुस्तकाकार कृति यस प्रकार छन् -

१. नेपाली उखानको विषयात्मक अध्ययन (२०६०)

२. नेपाली बाल विश्वकोश (२०६०), सहलेखन

३. नेपाली गाउँखाने कथा (२०६१)

४. नेपाली टुक्काहरूको सर्वेक्षण र विश्लेषण (२०६१)

६. नेपाली उखानका रचना सन्दर्भ (२०६८)

७. लोककथा सन्दर्भका नेपाली उखान (२०६८)

८. नेपाली उखान सङ्ग्रह (२०६९)

९. कवि लेखनाथ झवालीका कविता कृतिको अध्ययन (२०७०)

१०. सामाजिक सांस्कृतिक सन्दर्भका नेपाली उखान (२०७१)

११. अमर फल (कथासङ्ग्रह) २०७२

पौड्यालले नेपाली लोकसाहित्यको अध्ययनअनुसन्धानमा पुऱ्याएको योगदानको कदर गर्दै विभिन्न संस्था एवं प्रतिष्ठानहरूले पुरस्कृति एवं सम्मान गरेका छन् । नेपाल विद्याभूषण क (२०६५) पदकबाट विभूषित पौडेल साझा प्रकाशन (२०६०), राष्ट्रिय शिक्षा पुरस्कार (२०६९), गुल्मेली सम्पर्क समाज, रूपन्देही (२०६९), कवि लेखनाथ झवाली स्मृति प्रतिष्ठान, रूपन्देही (२०७०, सिद्धार्थ साहित्य परिषद् (२०७१), दधिस्मृति साहित्य समाज, कपिलवस्तु (२०७२) जस्ता संस्थाबाट सम्मानित भइसकेका छन् । हाल भिजिटिङ प्रोफेसरको रूपमा काशी हिन्दू विश्वविद्यालय, वाराणसीमा कार्यरत यिनी लोकसाहित्यको अध्ययन र अनुसन्धानमा जुटिरहेका छन् ।

## ३. अमर फल कथाको विश्लेषण

### ३.१. संरचना

जम्माजम्मी १६+११६ गरी १३२ पृष्ठमा संरचित अमर फल कथासङ्ग्रह मझौला आकारका ३३ वटा कथा समावेश गरिएको मझौला आकारको कृति हो । ३३ वटा कथा ११६ पृष्ठमा राखिएका छन् भने बाँकी १६ पृष्ठ गाताबन्दी, विषयसूची, लेखकीय मन्तव्य र डा. नेत्रप्रसाद न्यौपानेको अमर फल कथासङ्ग्रह : एक विहङ्गम दृष्टि शीर्षकीय विश्लेषणात्मक लेखले ओगटेको पाइन्छ । कथा एक बसाइमा पढिसकिने विधा विशेष हो भन्ने मान्यतालाई यसमा समाविष्ट सम्पूर्ण कथाले आत्मसात् गरेको पाइन्छ । यसमा समाविष्ट भुते गुफा कथाबाहेक अन्य कथा न त्यति छोटा छन्, न त्यति लामा नै । प्रायः सम्पूर्ण कथा विवरणात्मक रहेका छन् ।

### ३.२. भाव विधान

कुनै पनि साहित्यिक कृतिले अभिव्यक्त गर्न खोजेको मूल चुरो नै भाव हो । स्रष्टाले आफ्नो कृतिमा कुनै न कुनै भाव सम्प्रेषण गरेको हुन्छ नै । भाव विनाको कृति हुँदैन । यस कथासङ्ग्रहका विभिन्न कथामा कथाकारले विभिन्न विषयवस्तु अवलम्बन गरी विविध भाव अभिव्यक्त गर्ने प्रयार गरेको पाइन्छ । विवेच्य कृतिको **कलिको मान : चिया र पान** शीर्षकीय कथामा रामरावणको युद्धको प्रसङ्ग कोट्याउँदै मानिसले मृत्युबोध गरी हरेक काम समयमै सम्पन्न गर्नुपर्ने अन्यथा आफैँले सम्पन्न गर्न सकिने काम पनि अधुरै रहने विचार व्यक्त

गरेका छन् । नेपालको हिमाली क्षेत्रमा अमूल्य जडीबुटी रहेकोतर्फ सङ्केत गर्दै रामरावणको युद्धमा इन्द्रजितको ब्रह्मास्त्रले बेहोस भएका लक्ष्मणलाई हिमाली जडीबुटीले ठीक बनाएको र जडीबुटीको रसपान गरेपछि फालिएका छोक्राहरू नै कलियुगमा चिया र पानको रूपमा प्रकट भएको किंवदन्त्यात्मक अभिव्यक्ति प्रकट गरिएको छ । समग्रमा मानिसले समय छँदै सामर्थ्यअनुसारको काम गर्न पछि पर्न नहुने र हरेक वस्तुले यथा समयमा सम्मान प्राप्त गर्ने भाव यस कथामा पाइन्छ । **अमर फल** कथामा राजा भर्तृहरिको कथाप्रसङ्ग कोट्याउँदै मांसलप्रेमले प्रश्रय पाएको र त्यसबाट मानिसले कहिल्यै सुख नपाउने, स्वार्थी संसारमा कुनै पनि व्यक्ति विश्वासयोग्य नभएकोले सांसारिक मोह परित्याग गरी परमार्थ चिन्तन गर्नु नै श्रेयस्कर हुने भाव व्यक्त गरिएको छ । **खाँटी दूधमा पानी हालेर** कथामा आजको मानिसलाई सही र सत्य कुरा नपच्ने (विश्वास नगर्ने), नक्कली र असत्य कुरालाई नै सही र सत्य मान्ने प्रवृत्ति रहेको भाव व्यक्त गर्दै आजका हाकिमहरू नै आफूभन्दा तल्ला कर्मचारीलाई व्यभिचार, भ्रष्टाचार गर्न प्रेरित गर्छन् भन्नेतर्फ पनि यस कथाले सङकेत गरेको छ । **क्रान्ति जन्मने छ** कथामा वि.सं. २०५२ देखि आरम्भ भएको माओवादी द्वन्द्वमा सविनाजस्ता होनहार युवतीहरूले युद्धताका भोग्नुपरेका दुःख, पीडा र यातनाको उद्घाटन गर्दै युद्धकारीलाई यातना दिएर क्रान्ति साम्य पार्न खोज्नु अर्को क्रान्तिलाई जन्मदिनु हो, अन्य क्रान्तिकारी जन्माउनु हो, यसैले यातना दिएर कुनै पनि युद्ध जित्न सकिंदैन भन्दै लोकतान्त्रिक आन्दोलनमा महिलाहरूको अहम् भूमिका थियो भन्ने विचार व्यक्त गरिएको छ । **सम्पदा र उसको बिरालो** शीर्षकीय कथामा बाल मनोविज्ञान प्रयोग भएको छ । यस कथामा बालबालिकाहरू आफूलाई मन परेको वस्तु पाएनन् भने अत्यन्त निराश हुन्छन् । उनीहरूमा निश्छल प्रेम हुन्छ भन्ने भाव व्यक्त गर्दै सम्पदाको बिरालोप्रतिको प्रेमभाव व्यक्त भएको छ । साथै पृथ्वी सम्पूर्ण प्राणीको साझा घर भएकोले सबैप्रति सद्भाव राख्नु मानवीय दायित्व हो भन्नेतर्फ पनि यस कथाले सङ्केत गरेको छ । **उल्टा हुन्छ** कथा २०४६ को परिवर्तनपश्चात्को संक्रमणकालीन समयलाई समेटर लेखिएको कथा हो । संविधान निर्माणको सन्दर्भलाई लिएर लेखिएको प्रस्तुत कथामा तत्कालीन प्रधानमन्त्री कृष्णप्रसाद भट्टराईको ठट्यौली पारालाई हास्यको पुट दिइएको छ । जस्तोसुकै गहन विषयलाई पनि भट्टराईले सजिलो र सहजरूपमा लिने गरेको यथार्थको उद्घाटन यस कथामा गरिएको छ । साथै परिवर्तन लगत्तै जनता राजा र राजदरबारप्रति अत्यन्त सशङ्कित थिए भन्नेतर्फ पनि यस कथाले सङ्केत गरेको पाइन्छ । **यहीं आनन्द छ** कथामा आनन्द भौतिक वस्तुमा नभई आत्मिक वस्तु, हृदयजन्य वस्तु भएकोले जहाँ मन रमाउँछ, त्यहीं आनन्दानुभूति गर्न सकिन्छ भन्ने भाव व्यक्त गरिएको छ । कतिपय मानिसहरू आनन्द प्राप्तिको लागि भौतिक सम्पत्ति जोहो गर्नमै लाग्छन् र आनन्दको अनुभूति नगरी जिन्दगी समाप्त पार्छन् तर आनन्द लिने उपाय र सामर्थ्य हुनेहरू पहाडपाखामा घाँस

काट्दै गर्दा, उकालोओरालोमा पसिना निकाल्दै भारी बोक्दै गर्दा, गाईवस्तु चराउँदै गर्दा पनि आनन्दको अनुभूति गर्दछन् भन्दै आनन्द हार्दिक वस्तु भएकोले भौतिक वस्तुमा होइन, आफैंमा खोज्नुपर्ने सन्देश दिन खोजिएको छ । **कालभैरवको हाँसो** कथामा काठमाडौंमा प्रचलित किंवदन्तीलाई विषयवस्तु बनाएर स्त्रीया चरित्रं पुरुषस्य भाग्यम् देवो न जानाति कुतो मनुष्यः भन्ने संस्कृति उक्ति चरितार्थ पारिएको छ । साथै स्त्रीवर्गको चतुऱ्याइँको उद्घाटन गरिएको छ । **निष्ठुरी आमा** कथामा नारीको अतृप्त कामवासनाले सुन्दर परिवार पनि भताभुङ्ग र लथालिङ्ग हुने विचार व्यक्त गर्दै सम्पूर्ण कुरा पुगीसरी आए पनि अतृप्त कामवासनाबाट पीडित नारीहरू मृत्युको मुखमा परी जन्माएका कल्कलाउँदा सन्तति र मायालु पतिलाई पनि परित्याग गर्न किञ्चित् मान्दैनन् भन्ने भाव व्यक्त गरिएको छ । **जिउँदो मान्छे** कथामा सदासर्वदा मरेका मानिसहरूका साथ व्यवहार गरेका यमराजले जिउँदो मान्छेको व्यवहार देखेर भयभीत भएको, ठूलो पदमा पुगे पनि रीतिथिति वा नियमकानुन मिचेर काम गर्न नहुने भाव व्यक्त भएको छ । नियमकानुन मिचेर वा अधिकारक्षेत्रभन्दा बाहिर गएर काम गर्नाले यातनाको भागिदार बन्नुपर्दछ भन्ने भावसमेत यहाँ व्यक्त भएको पाइन्छ । **लोभः पापस्य कारणम्** शीर्षकीय कथामा सुधनपुत्र सुयोधन र नगरबधूको प्रसङ्ग उल्लेख गर्दै पढेलेखेको व्यक्तिलाई कतिपय व्यावहारिक कुराको जानकारी नहुने एवं लोभ नै पापको कारण हो भन्ने भाव व्यक्त भएको छ । **भाग्यमा नभएपछि** शीर्षकीय कथामा भगवान् आशुतोषको भक्त अभागी दीननाथको प्रसङ्ग कोट्याउँदै भाग्यमै नभएको कुरा भगवान्ले प्रदान गर्न खोजे पनि प्राप्त हुँदैन भन्दै प्रकारान्तरले भाग्य भनेकै कर्म हो भन्ने भाव व्यक्त गरिएको छ । सधैं हिंड्ने बाटोको पुलनेर भगवान्ले सुनको डल्लो राखिदिएका दिन हरेक दिन बाटो हेरेर हिंड्ने दीननाथले आँखा चिम्लेर हिंड्नाले (कर्म छोड्नाले) सुनको डल्लो प्राप्त गर्न सकेन भन्दै मानिसले हरेक दिन सचेत एवं सावधानीपूर्वक कर्म गर्नुपर्दछ भन्ने भावतर्फ सङ्केत गरिएको पाइन्छ । **निष्फल विद्या** कथामा पढीलेखी संस्कारयुक्त एवं ज्ञानी बन्नुपर्नेमा आधुनिक युवाहरू संस्कार र दायित्वहीन बन्दै गएको, आडम्बरयुक्त जीवनशैली अवलम्बन गर्न उद्यत रहेको यथार्थको अभिव्यक्ति दिंदै आजको शिक्षाले मानिसलाई कर्तव्यबोध नगराएको भाव व्यक्त भएको छ । पढेलेखे पनि जुन व्यक्तिमा संस्कार र कर्तव्यबोध हुँदैन त्यसको विद्या निष्फल हुन्छ भन्ने सन्देश यस कथाको माध्यमबाट कथाकारले व्यक्त गर्न खोजेका छन् । **सुखको खोजी** कथामा सुखको अनुभूतिको लागि धनसम्पत्ति आवश्यक नपर्ने मानसिक सन्तुष्टि नै सुखको मुहान हो, तृष्णारहित हुनु नै सुखी हुनु हो भन्ने भाव व्यक्त गरिएको छ । भौतिक सुख कथामा हरेक व्यक्ति आफू जन्मेहुर्केको आफ्नै वातावरणमा सुखी हुन्छ, भौतिक सुख क्षणिकमात्र हो, आत्मीय सुख नै वास्तविक सुख हो भन्ने भाव दीनपतिको माध्यमबाट व्यक्त भएको छ । **पुण्य मान्छे** कथामा एउटै बाबुआमाका सन्ततिमा पनि भिन्न भिन्न

चरित्र हुन्छ भन्दै मानिसले शारीरिक सामर्थ्य हुँदा जस्तोसुकै खराब कर्म गर्न पनि पछि नपर्ने तर शारीरिक सामर्थ्य दुर्बल भएपछि स्वर्गनर्कको भय लिई पुण्य कर्मतर्फ लागिरहने भाव व्यक्त भएको छ । निश्चित समयमा फूल, प्रसाद र भगवान्‌को आराधना गर्दैमा पुण्य आर्जन हुँदैन, आफ्ना दैनिक कर्मका साथसाथै भोका, नाङ्गा, अपाङ्ग, अनाथ, बेसहारा, वृद्धवृद्धाको सेवा गरे पुण्य प्राप्त गर्न सकिन्छ भन्ने विचार व्यक्त भएको छ । **लसुन र प्याज** कथामा किंवदन्तीलाई कोट्याउँदै गाईको मासुका टुक्राबाट लसुन र प्याज बनेकोले हिन्दू धर्मावलम्बीहरूको भान्सामा लसुन र प्याज वर्जित भएको कुरा उल्लेख गरिएको छ । साथै जनतालाई सुख, शान्ति र अमनचैन दिनको लागि प्राचीन राजाहरू कति चिन्तनशील रहन्थे भन्ने भावसमेत यहाँ पाइन्छ । **लक्ष्मीको बास** कथामा राजस्थानबाट रित्तो हात नेपाल छिरेका आशाराम र उनकी पत्नी शान्तिदेवीको क्रियाकलाप उल्लेख गर्दै उद्योग, कलकारखाना सञ्चालन गरेर आशाराम धनी बनेकोले उद्योगीकहाँ नै लक्ष्मीको बास हुने वास्तविकता प्रकट गरिएको छ । आशारामजस्ता व्यक्तिहरू त्यति टाढाबाट आएर उद्यम गरी मनग्ये सम्पत्ति आर्जन गरेका छन् । हामी नेपालीहरू भने अहोरात्र गफमै व्यस्त रही आर्जनहीन बन्दै गएका छौं भन्दै सम्पूर्ण मानिस उद्यमशील बनी आयआर्जन गर्नुपर्ने भाव व्यक्त गरिएको छ । **कस्तो न्याय ?** शीर्षकीय कथामा दीनदयाल र बलबहादुरको प्रसङ्ग कोट्याउँदै प्रजातन्त्र / लोकतन्त्र प्राप्तिपश्चात् पनि समाजमा तथाकथित ठूला मानिसहरूकै हैकम चलेको, दीनदयालजस्ता सर्वसाधारणले न्याय पाउन नसकेको, राज्यसमेत ठूलाबडाकै आड लाग्ने गरेकोले समाजमा समान किसिमले न्याय वितरण नभएको भाव व्यक्त भएको छ । **तिहुन त चर्कै छ** कथामा पत्नीपीडित पतिको निरीह अवस्था व्यक्त गर्दै अति भएपछि सोझो मानिसमा पनि क्रोध उत्पन्न हुन्छ भन्ने भाव व्यक्त भएको छ । घरपरिवार सुखी हुनको लागि पतिपत्नी दुबैले एकअर्कालाई सम्मानको दृष्टिले हेर्नुपर्दछ भन्ने सन्देश कथाकारले व्यक्त गर्न खोजेका छन् । **जँड्याहाको रेडियो** कथामा मानिस धतङ्गो भएपछि उसका कुरामात्र होइन, उसले प्रयोग गर्ने सामग्रीलाई पनि मानिसहरू मन पराउँदैनन्, विश्वास पनि गर्दैनन् भन्दै हरेक मानिस शिष्ट, सुशील एवम् विनम्र हुनुपर्दछ भन्ने सन्देश व्यक्त गर्न खोजेका छन् । **देखेको भूत** कथामा सामाजिक विश्वासले नै मानिस भयभीत हुने गरेको भाव विचार प्रकट गर्दै समाजका सचेत वर्गले यथासक्य अन्धविश्वास, कुरीतिलाई परित्याग गर्दै भूतसम्बन्धी कथालाई भूत बनाउनुपर्ने भाव व्यक्त गरिएको छ । **आमा हराउनु भो** कथामा गुल्मी, स्याङ्जा, पाल्पाको सङ्गममा रहेको रिडीको धार्मिक एवं सांस्कृतिक महिमा व्यक्त गर्दै हरेक मेलाजात्रामा मानिसहरू भीडमै हराउन सक्ने भएकोले मेला भर्न जाँदा सावधानी अपनाउनुपर्ने सन्देश व्यक्त भएको छ । **बाघले गर्छ** कथामा जङ्गलको बाटो हिंड्दा हिंस्रक जन्तुको भय हुन्छ भन्दै सचेतता अपनाउनुपर्ने विचार प्रकट गरिएको छ । छिमेकीको पूजा कथामा हरेक मानिसले समाजका सामाजिक

परिवेश बुझी व्यवहार गर्नुपर्ने, छिमेकी भनेको ज्यूँदाका जन्ती र मर्दाको मलामी भएकोले हरहमेशा छिमेकीलाई आवश्यक सरसहयोग गर्नुपर्ने विचार व्यक्त गर्दै सानो कुराले पनि समाजमा हलचल उत्पन्न हुनसक्ने सम्भावनातर्फ सङ्केत गरिएको छ । **योग्य अयोग्य** कथामा कुनै काममा असफल भइयो भन्दैमा निराश र हतास हुनहुँदैन । आफ्नो क्षमता र योग्यताले समेट्ने काम अवलम्बन गरी अगाडि बढ्ने हो भने सफलता प्राप्त गर्न सकिन्छ भन्ने विचार व्यक्त गरिएको छ । **बेबारिसे लास** कथामा माओवादी द्वन्द्वताका चन्द्रकान्तजस्ता निर्दोष जनताले शङ्कैशङ्काले कसरी ज्यान गुमाउनु परेको थियो भन्ने विचार व्यक्त गर्दै तत्कालीन समयमा सरकारी तथा विद्रोही दुबैतर्फका सेनाबाट जनता प्रताडित हुनपरेको वास्तविकताको उद्घाटन गरिएको छ । **विधुर** कथामा छोराछोरीले विधुर बाबुको पीडा बुझिदिने हो भने वृद्ध विधुरहरूको जीवनमा पनि खुसियाली आउने विचार प्रकट गरिएको छ । **भूते गुफा** कथामा भूतले सोझा मानिसहरूलाई सताए पनि जन्ड मानिससँग भूत पनि भयभीत हुने भएकोले भूत वा भूते गुफा भएका स्थानमा निडर भई हिंड्नुपर्ने सन्देश व्यक्त गरिएको छ । **कालो अक्षर भैंसी बराबर** कथामा कर्मअनुसारको फल प्राप्त हुने भएकोले सुकर्म गर्नुपर्ने सन्देश दिन खोजिएको छ । इत्ति नबिराए कथामा युवतीहरूसँग ख्यालठट्टा गरे पनि खराब कर्मतिर लाग्नु हुँदैन भन्ने भाव व्यक्त भएको छ । **त्यही केटी चाहिन्छ** कथामा एउटै नाम गरेका दुई युवतीमध्ये भ्रमवश आफूले चाहेकीभन्दा भिन्न अनुहारकी युवतीसँग कौशलको विवाह भएकोले युवतीको नाम होइन, नाम, ठेगाना बुझी वैवाहिक सम्बन्ध कायम गर्नुपर्दछ भन्ने भाव व्यक्त भएको छ । **पहिले सोंच विचार गर्नुपर्छ** कथामा जुनसुकै काम गर्दा अकस्मात् नगरी विवेक पुर्‍याउनुपर्दछ भन्ने सन्देश व्यक्त भएको छ ।

विवेच्य कृतिभित्रका हरेक कथामा कथाकारले मानवीय समाजमा देखिने विविध समस्या उद्घाटन गर्दै शान्त, सुन्दर, न्यायिक, समतामूलक एवं आदर्शमय समाजको स्थापनामा जोड दिएका छन् ।

### ३.३. भाषाशैली

विवेच्य कृति अमर फल सरल एवं सरस भाषाशैलीमा रचना भएको कथासङ्ग्रह हो । कतिपय तत्सम शब्द प्रयोग भए पनि यहाँ तद्भव र झर्रा शब्दको आधिक्यता रहेको देखिन्छ । कतिपय कथामा हिन्दी भाषाका वाक्य पनि समावेश गरिएको छ तर पनि ती दुरूह भने छैनन् । यथास्थानमा नेपाली लोकगीतका टुक्रा पनि यहाँ पाइन्छन् । उखान, टुक्काको प्रयोगले अभिव्यक्तिलाई अझ बढी विश्वासिलो र चोपिलो बनाएको छ । सरल भाषा र वर्णनात्मक शैली अवलम्बन गरिएकोले आलङ्कारिकताको झन्झटबाट यो कृति पूर्णतः मुक्त रहेको देखिन्छ । प्रथम र तृतीय पुरुष दृष्टिविन्दुमा रचना गरिएका यी कथामा कहीं कहीं संवाद

शैली पनि नपाइने होइन तर संवाद शैली अत्यल्प प्रयोग गरिएको छ । रैखिक ढाँचामा संरचित यस सङ्ग्रहका कथाको भाषाशैलीले कथाको उद्देश्य पहिलाउन सफल रहेको पाइन्छ ।

## ४. निष्कर्ष

आधुनिक नेपाली कथायात्रामा अमर फल कृतिको माध्यमबाट कथाकार व्यक्तित्वको रूपमा दरिन पुगेका शिवप्रसाद पौड्यालको विवेच्य कृति अमर फलमा नेपाली समाजका विविध पक्षको साथै यौन मनोविज्ञान र बाल मनोविज्ञानसँग सम्बन्धित कथाहरू पनि समावेश गरिएको पाइन्छ । सामाजिक एवं मनोवैज्ञानिक विषयवस्तुलाई सरल भाषा र वर्णनात्मक शैलीमा अभिव्यक्त गरी कथाकारले शान्त, समुन्नत, न्यायिक, समतामूलक र सुन्दर मानवसंसार निर्माणमा जोड दिएका छन् । यहाँ किंवदन्तीको पुष्ट्याइँ, प्राचीन कथाप्रसङ्गको उद्घाटन, भ्रष्टाचार, माओवादी युद्ध, बालबालिकामा जनावरप्रेम, महिलाको चतुऱ्याइँ, अतृप्त कामवासना, जिउँदो मानिसका जन्ड स्वाभाव, अव्यावहारिक शिक्षा, उद्यमको परिणति, न्याय वितरणमा असमान पद्धति, भूतप्रेत, छरछिमेक आदि विषयवस्तुले स्थान पाएका छन् । हाम्रै गाउँघरमा घट्ने र घट्न सक्ने विविध विषयवस्तुलाई कथाकारले कथाको रूपमा प्रस्तुत गरेका छन् । कथाकारको मूलतः अधिकांश कथाहरू मैले आफ्नै जीवन र परिवेशमा अनुभूति गरेका घटनालाई आधार बनाई कथाको रचना गरेको छु भन्ने अभिव्यक्तिबाट पनि यी कथा हाम्रै गाउँघर, छरछिमेका घटना हुन् भन्ने स्पष्ट हुन्छ । निष्ठुरी आमा कथामा यौन मनोविज्ञानको प्रयोग पाइन्छ भने सम्पदा र उसको बिरालो कथामा बाल मनोविज्ञान पाइन्छ ।

यस कृतिभित्रका कथामध्ये भूते गुफा सबैभन्दा लामो कथा हो । अन्य कथा मझौला आयामका छन् । छोटो समयमै पढिसकिने र सरल भाषाशैलीमा रचना भएका हुनाले यी कथा सम्प्रेषणीय रहेका देखिन्छन् । यी कथाको अध्ययन गर्दै जाँदा लोकसाहित्यको झल्को पाइन्छ । लोकसाहित्यकै पुटमा यी कथा सिर्जना भएको प्रत्यक्ष दृष्टिगोचर हुन्छ । स्रष्टा लामो समयदेखि लोकसाहित्यको अध्ययन र अनुसन्धानमा लागेकोले त्यसको प्रभाव यी कथामा मनग्ये परेको देखिन्छ । कुनै कथा उखानमा निहित कथालाई पुष्टि गर्ने प्रयास त कुनैमा किंवदन्ती प्रष्ट्याउन खोजेझैं प्रतीत हुन्छ । तर पनि प्रत्येक कथाले सुन्दर संसार निर्माणको सन्देश दिन चुकेको देखिंदैन । लामो समयदेखि लोकसाहित्यमा लागेको भए पनि सिर्जनातर्फको यो उनको पहिलो प्रयास हो । लेखकको कलम अद्यापि चलिरहेकोले सबल र रससिक्त कृति पाउने सम्भावनालाई नकार्न सकिंदैन ।

ooo

# नेपाली भाषामा सार्वभौमिकताको प्रश्न

✍ **नेत्रनारायण शर्मा**
**सुनवल-२, वर्गदेही, नवलपरासी**

समयक्रमसँगै भाषामा परिवर्तन देखिनु स्वाभाविक हो । भाषाको यस गुणका कारण पनि यसको अस्तित्व जीवन्त रहन गएको हो । भाषामा कहिले काहीँ अस्तित्वको सङ्कट देखा पर्छ । मूलतः ठूलो जनसङ्ख्याले प्रयोग गर्ने भाषाको असर सानो जनसङ्ख्या समूहमा स्वतः पर्न जान्छ । फलतः सानो जनसङ्ख्याको भाषा प्रयोगमा अपनत्व गुमाउदै जाँदा अन्ततः भाषिक मृत्यु हुन पुग्छ । यसरी भाषाको आफ्नो सार्वभौमिकता गुमाई अस्तित्व नै लोप भएका भाषाहरूको सङ्ख्या पनि संसारमा कम छैन । नेपालमा खस भाषाको प्रयोगभन्दा अगाडि गडवाली, कुमाउनी, आसामी, गुजराती, सिक्किमी भाषाको स्वरूपसँग मिल्दोजुल्दो भाषा प्रयोग थियो भन्ने तथ्याङ्कले देखाउँछ । तर ती भाषाहरूको अस्तित्व हाल कहीं कतै भेटिदैन । हाल नेपाली भाषाको प्रयोगको क्षेत्र भने अत्यन्त फराकिलो बन्दै गएको छ । यसो हुनुमा सिर्जनशीलता पनि हो । तर यसको प्रभावमा कतिपय भाषा द्वैतताको स्थिति देखा पर्दा पिजिनको अस्तित्व देखा परेको छ ।

मूलतः यस प्रकारका भाषा सङ्केतका स्थिति नेपालको तराई क्षेत्र तथा काठमाडौं उपत्यकामा देखा परिसकेका छन् । यो कुनै भाषाको सार्वभौमिकता माथिको हस्तक्षेप हो । यस प्रकारको परिवर्तित रूप पहिलो त मानिसको बढ्दो बसाइसराइका कारण दोस्रो व्यापारिक स्थितिका कारण पनि देखा पर्ने गर्दछ । मध्यकालमा नेपालको व्यापारिक सम्बन्ध तिब्बतसँग भएका कारण तथा नेपाल अङ्ग्रेज युद्धताका भाषामा नेपाली भाषाको प्रशस्त विचलन देखा परेको कुरा विभिन्न अभिलेखबाट ज्ञात हुन्छ । त्यसो त राणाकालीन अवस्थामा पनि बढ्दो मात्रामा अङ्ग्रेजी प्रभावका कारण नेपाली भाषाको उच्चारणमा समेत प्रशस्त विभेदहरू देखिएका थिए । नेपाली भाषामा यस प्रकारको सङ्केत मिल्नासाथ भाषाको अस्तित्व जोगाउन समय समयमा भाषिक आन्दोलनहरू पनि भएका छन् । झर्रोवादी नेपाली भाषिक आन्दोलन यसरी नै सुरूभएको आन्दोलन हो । भाषामा परिवर्तन देखिनु स्वाभाविक हो । यो भाषाको गुण हो । यस प्रकारको परिवर्तन अस्तित्व नै मेटाउने गरी देखा पर्नु चाहिँ अस्वाभाविक हो । संसारमा हाल छ हजारभन्दा बढी भाषाको अस्तित्व रहेको छ । नेपालमै पनि १२५ भाषाहरूको अस्तित्व रहेको कुरा विभिन्न तथ्यांकहरूले देखाउँछन् । यीमध्ये थोरै मात्र जनसंख्याले प्रयोग गर्ने गरेको सधनी, कुसुण्डा, हायु, लेप्चा, जस्ता भाषाहरूको अस्तित्व लोप हुने अवस्था छ । यस्ता भाषाहरू लोप हुने केही कारणहरू देखा पर्दछन् । नं. १ प्रयोगको क्षेत्र अत्यन्त साँगुरो हुनु २.लिखित र

बोलचालमा स्वयम् भाषी वक्तासमेत उदासीन देखिनु ३.जीवन शैलीमा आएको परिवर्तन ४.अधिक जनसंख्याले बोल्ने भाषाको दबदबा ५.देशको भाषिक नीति स्पष्ट नहुनु आदि ।

भाषामा परिवर्तन कसरी देखा पर्छ ? समय परिवर्तनशील छ । समयसँगै संसारका सबै वस्तुहरू परिवर्तन हुँदै जान्छन् । समयलाई छोड्न नसक्नु मानिस मात्रले होइन, संसारका कुनै पनि वस्तुले सकेका छैनन् । त्यसैले भाषामा पनि स्वाभाविक परिवर्तनको स्थिति देखा पर्छ । भाषाको यो विशेषतालाई ध्यानमा राखेर भाषाको अध्ययन गर्ने विधिशास्त्रहरूको विकास भइसकेको छ । मूलतः भाषाको ऐतिहासिक भाषाविज्ञानले यस प्रकारको खोजी गर्छ । संसारका भाषामा पाइने विशेषताका आधारमा भाषाको पारिवारिक वर्गीकरण गर्ने कार्य पनि ऐतिहासिक भाषाविज्ञानले नै गरेको हो । यो भाषाविज्ञानको उदय १९ औँ शताब्दीमा भएको हो । यसले हाल संसारमा चौधभन्दा बढी भाषा परिवारका भाषाहरू बोलिन्छ भन्ने देखाएको छ ।[१]

मूलतः भाषामा के कस्ता कारणहरूले गर्दा परिवर्तन देखा पर्छ ? भन्ने प्रश्न छ यसमा विभिन्न कारणहरू हुन सक्छन् । भाषाका विभिन्न भेदहरूको सम्पर्क, सामाजिक साँस्कृतिक अवस्था, पुस्तान्तरणको अवस्था, समभाषिक सम्पर्कमा न्यूनता, बढ्दो सामाजिक तथा आर्थिक सम्पर्क, शिक्षाको प्रभाव आदिका कारण भाषामा परिवर्तन हुने गर्छ । पृथ्वीनारायणकालीन नेपाली भाषा प्रयोग आजको सन्दर्भमा गरिदैन । यसको प्रमुख कारण नै पुस्तान्तरण हो । हाम्रो घरपरिवारमा पनि हजुरबुबाले प्रयोग गर्ने भाषिक स्वरूप नातिले गरेको पाइँदैन । उसको शैली नै फरक हुन्छ । त्यसैगरी हरेक भाषाका आ-आफ्ना स्वरूप र परिवार हुन्छन् । हामी नेपाली भाषा र हिन्दी भाषाका स्वरूपगत भिन्नता त्यति देख्दैनौँ जति नेपाली भाषा र गुरुङ्ग भाषामा देख्छौँ । त्यसैगरी तराई क्षेत्रमा प्रयोग गरिने मैथिली, भोजपुरी तथा अवधी भाषामा भाषिक स्वरूपगत एकता देखा पर्छ भने नेवारी, शेर्पा तथा तामाङ् भाषाका बीच त्यस्तो स्वरूपगत एकता पाइँदैन । मैथिलीभाषी वक्ताले जति छिटो नेपाली भाषा सिक्न सक्छ त्यति नै प्रयास र समयमा उसले अङ्ग्रेजी भाषा सिक्न सक्दैन । भाषाको पारिवारिक विभिन्नताका कारण यस्तो स्थिति देखा परेको हो ।[२] एउटै परिवारभित्रका भाषाहरू वक्ताले छिटो कम अभ्यासमै सिक्न सक्छ किनभने उसलाई उस्तै र उही किसिमका भाषिक स्वरूपहरूको बारम्बार अभ्यास भइसकेको हुन्छ । त्यसैगरी फरक पारिवारिक भाषिक वक्ता भएको अवस्थामा भने भाषा सिकाइ कठिन पर्न जान्छ । जहाँसम्म भाषिक परिवर्तनको कुरा छ त्यो विषम पारिवारिक भाषा भए तापनि अधिक सम्पर्क र प्रभावका कारण परस्पर भाषिक स्वरूपमा परिवर्तन देखा पर्छ । यसलाई हामी कहीं कतै भाषिका भनेको पाउँछौँ । यस प्रकार पारिवारिक सम्पर्कको कारण मात्र होइन सामाजिक, आर्थिक, राजनैतिक, साँस्कृतिक कारणबाट पनि भाषाको स्वरूपगत भिन्नता देखा पर्ने कुरा माथि नै उल्लेख

भइसकेको छ । त्यसैले हामीले यहाँ पृथ्वीनारायण शाहकालीन भाषिक स्वरूपको एउटा कवितांशलाई लिऊँ ।

**आफू ती नेवार्या जाती वोल्छता ललितपारि**
**आफूता गजमुकुटु तंरो ता वलियो मुटु**
**नाम रह्या गजानि धरम तपरे तरा भरले ते**
**वगर छुट्यो तांति ककनि को लायो सांधि**
**नुगामा सन्ताप सह्या जिवको येकलो भया**
**धनको दुवलो भञा भोककं भोर्जन नाहि**
**काम करूं दाहि नाहि वतयेको कर्म नाहिं**
**ठंण्डिसं वस्त्र नाहि राजैभक्ति कृति जानि**
**लाउन्या सुवानन्ददास है :३**

यस प्रकारको भाषिक स्वरूपलाई आजको सन्दर्भमा हेर्दा :

**आफू त नेवार जाति बस्दछु ललितपारि**
**आफू गजमुकुट तिम्रो त बलियो मुटु**
**नाम रह्यो गजानी धर्म त परैँ तेरो भरले**
**बगरबाट अर्थात् किनारबाट ताँती**
**अर्थात लहरले ककनीलाई साँध बनायो**
**नुगा भन्ने ठाउँमा सन्ताप अर्थात् पीडा सहेर बसेको एक्लो जीव भएँ**
**त्यस्तै धनको दुब्लो अर्थात् निर्धन भएँ भोकका लागि भोजन छैन**
**काम गरुँ भने दाहि अर्थात् देह (शरीर)ले सक्दैन तैपनि काम नै छैन**
**ठण्डी छ तर वस्त्र अर्थात् कपडा छैन राजाको भक्ति नै मुख्य काम जानेर**
**ल्याउने म उही सुवानन्द हुँ ।**

माथि चर्चा गरिएको पृथ्वीनारायण शाहाकालीन नेपाली भाषा र हालको सन्दर्भमा प्रयोग हुने भाषाका बीच निकै ठूलो अन्तर देखा पर्दछ । भाषा जटिलबाट सरलताको बाटो रोज्छ । अझ भनौँ आजका किशोरहरूको भाषा प्रयोग त भिन्न छ । यस प्रकार भाषाको अस्तित्व जीवन्त राख्नु हामी सबैको दायित्व हो ।

## पादटिप्पणी


१. प्रा.डा.टङ्कप्रसाद न्यौपाने र अन्य, **सामान्य भाषाविज्ञान,** (काठमाण्डौँः सनलाइट पब्लिकेसन, २०६७)

२. प्रा.डा.टङ्कप्रसाद न्यौपाने, **भाषाविज्ञानको रूपरेखा,** दो.सं (धरानः एनएमवी प्रकाशन, २०६१)

३. घटराज भट्टराई र शरद्चन्द्र भट्टराई, **प्राचीन नेपाली पद्य**, (ललितपुर : साझा प्रकाशन, २०४५)


ooo

# काटेको घाउमा

✍ **रमेश गौतम 'पाल्पाली'**
**पाल्पा**
**हाल -सिड्नी, अष्ट्रेलिया**

नेपाली पढाउने सुधा मिस कक्षा कोठामा आएपछि सबै विद्यार्थी उठेर मिसलाई नमस्कार गरे । मिसले चक र डस्टर लिएर कालो पाटी नजिक गएर भन्नुभयो– "नानी बाबू हो ! आज कुन पाठ पढ्ने होला, तिमीहरूलाई थाहा छ ?"

मिसको प्रश्नको जबाफ दिनुभन्दा पहिले राधाले उठेर भनिन्– "मिस ! आज बालाजू घुम्न जाने होइन र ? घुम्न जाने भनेर हामीले खाजा पनि ल्याएका छौँ ।"

"ए, मैले त भुसुक्कै बिर्सेकी । राधा गएर ड्राइभर अङ्कललाई गाडी झिक्न भन । हामी पनि आउँछौँ ।"

"अब बालाजु घुम्न जाने ।" भन्दै सबै विद्यार्थी गएर गाडीमा बसे । मिस पनि अगाडिको सिटमा बस्नुभयो, गाडी हिँड्यो । बालाजु गेटमा पुगेपछि मिसले श्यामलाई सोध्नुभयो–"भन त श्याम ! हामी कतिजना छौँ ।"

श्यामले एक, दुई गरेर गन्दै जाँदा एक्काईस पुर्‍याए । मिसले फेरि गन्न पठाउनुभयो । फेरि पनि एक्काईस नै गराए । त्यसपछि राधालाई गन्न पठाउनुभयो । राधाले बाइस पुर्‍याइन् ।

"स्याबास्, राधाले ठीक भनिन् । श्यामले कसरी एक्काईस भनेको होला ?" भनेर मिसले सोध्नुभयो । "श्यामले आफूलाई गनेन होला मिस ।" हरिले भने ।

"तिमीले आफूलाई बिर्सेको हो श्याम ?" मिसले सोध्नुभयो ।

"हो मिस, मैले आफूलाई त गन्नै बिर्सँछु ।"

"श्याम ! आज तिमी हुस्सू बन्यौ । पहिले आफूबाट गन्न थालेको भए तिम्रो हिसाब बिग्रने थिएन । हेर विद्यालयमा बसेर किताब पढेकोमात्र पढाइ होइन । मान्छेले हरेक कुरामा ज्ञान आर्जन गर्नुपर्छ । आज हामी बालाजु घुमेर यहाँ के के छन्, कसरी बनाइएका छन् भन्ने बारेमा सबै कुरा जान्नुपर्छ । तिमीहरूलाई भोलि सोध्नेछु सबै कुरा याद गरे । लौ, अब भित्र गएर हेर्ने ।" मिसले भन्नुभएपछि सबै विद्यार्थी पार्कभित्र गए ।

सबै विद्यार्थीको ध्यान धारा, पोखरी, माछा, बगैँचाजस्ता चीजमा गएको थियो । हिँड्दा हिँड्दै कृष्ण लोटेर घँडाबाट रगत आयो । त्यो देखेर सीताले माटो हालिदे न रगत रोकिन्छ भनिन् ।

त्यही बेला मिस आएर भन्नुभयो–"यस्तो काटेको घाउमा माटो हाल्नुहुन्न । सबै ठाउँको माटो सुरक्षित नहुनसक्छ । यदि टिटानसको किटाणु मिसिएको रहेछ भने त बित्यासै पर्छ । बरू कृष्ण अलि पर गएर घाउमा पिसाब गर । यहाँ कतै लजौटे, बोकेझार वा गाजेझार केही छ कि मैले हेर्छु ।" भनेर मिस झार खोज्न जानुभयो । तर नजिकै दुबो देखेर दुबाका मन्टा टिपेर ल्याउनुभयो ।

राधाले सोधिन्– "मिस घाउमा किन पिसाब गर्न भनेको ?"

"हामी घरमा भएको भए काटेको घाउमा डिटोल लाउने थियौँ । यहाँ डिटोल छैन, पिसाबले धोएपछि टिटानसका किटाणु सर्न पाउन्नन् र दुखाइ पनि कम हुन्छ ।"

"अनि लजौटेझार, गाजेझार र बोकेझार खोज्छु भन्नुहुन्थ्यो । दुबो ल्याउनुभयो । ती झारहरू कस्ता हुन्छन् र तिनले के गर्छन् नि ?"

"लजौटेलाई कसैले लज्जावती पनि भन्छन् । यसलाई छुँदा झुम्रूक्क परेर खुम्चिन्छ । गाजेझार भनेको सानो झार हो । मिच्दा गाज आउँछ । बोकेझारलाई कसैले गनाउनेझार पनि भन्छन् । ती झारका पात मिचेर रस लाइदियो भने रगत थामिन्छ । अझ दुबो थिचेर लाएपछि त घाउ पनि पाक्दैन ।" मिसले भन्नुभयो ।

"मान्छेको पिसाब त औषधि पो रहेछ ।" सबैले आश्चर्य मानेर भने ।

"हो, कहिले काहीँ हिँड्दा डुल्दा सर्पले टोक्यो भने टोकेको घाउ पिसाबले धुने र घाउभन्दा माथि डोरी, लहरो, कपडा आदि केहीले बेस्सरी कसेर बाँध्यो भने सर्पको विष झट्ट फैलिन पाउन्न । अझ बिरामीलाई एक गिलास पिसाब ख्वाउने हो भने त धेरै काम गर्छ । कमसे कम बिरामीलाई अस्पताल पुऱ्याउन सकिन्छ ।" मिसको कुरा सुनेर विद्यार्थीहरू दङ्ग परे ।

"ल कृष्ण रगत थामियो । साँझ दुख्यो भने मह लाइदिनु दुख्न कम हुन्छ घाउ पनि निको हुन्छ । अब हामीले यहाँका सबै कुरा हेर्ने" भन्दै मिस अँघि लाग्नुभयो विद्यार्थी पछि पछि गए ।

ooo

# बारी बाँझै छ !

✍ **हरिप्रसाद पन्थी**
**रेसुङ्गा न.पा.-१, तम्घास, गुल्मी**
**हाल : भगवती मा.वि., रे.न.पा.-१०, सिमीचौर**

गैरी खेत फलेन धान अहिले बाँझै छ बारी पनि
खुच्चिङ् लौ मनुवा भनी खुस हुँदै बग्दै रहिन् गण्डकी
थाप्लोमा दनदन्ती बल्छ बडवानल् पो ठूलो जोशमा
ठोक्दै बग्छ उतालिंदो भेल तलै फर्किन्छ के होशमा ।

भत्की जा पहरा सीमा सहनुको नाघ्यो जमिन् भासिदे
गुण्डा यौन पिपासु जोगिन पुगे जन्ता स्वयम् फाँसी दे ।
सिङ्गो यो सरकार रक्षक बन्यौ हामी लुटियौं किन ?
राष्ट्र लुट्ने लठैतको गुट हो वा सर्कार खै चिन्दिन ।

आमा रोइरहेकी पुछ्न नसकी आँसु स्वयम् अल्पियौ,
बाँधा बस्नु हुँदैन भो बरू भनी ज्यानै सहज् अर्पियौ,
व्यर्थै भो बलिदान हे शहीद हो के मूल्य तिम्रो यहाँ ?
हत्याराहरूकै छ चक्चकी यहाँ छ मूल्य तिम्रो कहाँ ?

जाईजुही निमोठिए मखमली सुगन्ध खै काँ छ र ?
आला घाऊ फुटे गले फतफती सर्वत्र दुर्गन्ध छ ।
फक्रन्नन् अब कोपिला रूख सुके बाँकी बुटुनाहरू
उफ्रन्छन् ढेंढुवा मदारी बिन कै काला थुतुनाहरू ।

बाँकी छैन कुनै स्वतन्त्र जनता रैती बनेका छन
आफ्नै चल्छ मुटु अझै धुकधुकी कैदी बनेका झन
फाँडो हुन्छ मिठो खोले अझ मिठो मार्सी कहाँ पाउनु ?
न्यायैमूर्ति बिके अदालत यहाँ व्यर्थै किन धाउनु ?

आउला खै गतिलो डकार यसरी डाङ्ग्रो चपाएपछि
राख्छौ इज्जत के धुजा परिसक्यो भाङ्ग्रो लगाएपछि ?
समृद्धि कसरी हुने गरीबको बासै उठाएपछि ?
भाग्ला के मदमत्त हात्ति कसरी नाङ्लो ठटाएपछि ?

रेल्ले झेल गर्‍यो अझै तेल पनि गर्दैछ जाल्झेल रे
निल्ने यान सुलुक्क वाइड बडी मिल्दैछ ताल्मेल रे
बुङ्गाले अब देख्नु छैन सपना बन्ने कुनै डाक्टर
नाङ्गाको दुनियाँ बपौती बनी गो नाचून् उनै ताण्डव ।

आँठो तल्तिरको सधैं उँभउँभो सार्दै छ रे मुन्तिर
बाटो थुन्दछ लौ ढुकेर कहिले चित्कार के सुन्छ र ?
कैले पूर्व दुख्यो र पश्चिम दुख्यो दुख्दैछ सुस्ता पनि
सम्झौता अब मान्य छैन बुझ लौ च्यात्छौं सुगौली पनि ।

जन्ता भोक र प्यासले मरिसके देख्दैन सर्कारले
ऐले छैन चुनाव यो बखतमा पर्दैन दर्कार रे ।
त्राही त्राही भएछ विश्व अहिले कोभिदको त्रासमा
कात्रोमा कमिशन् नखाऊ अहिले ढुङ्गा पर्‍यो गासमा ।

ooo

# फैलिँदै छ 'हुटिट्याउँको मन'को महक

✍ **छवि ज्ञवाली**
**भैरहवा, रूपन्देही**

राजधानी (काठमाडौँ) बाहिर बसेर प्राज्ञिक कर्म गर्दै नेपाली भाषा-साहित्यको उन्नयनका निम्ति क्रियाशील थुप्रै स्रष्टामध्ये एक हुन् दीन पन्थी । दीन पन्थी (वि.सं. २०१५, वैशाख, गुल्मी) मूलतः गद्यविधाका सिद्धहस्त लेखक हुन् । छोटा आयामका, मार्मिक र सन्देशमूलक निबन्ध लेख्नु पन्थीको खास वैशिष्ट्य मानिन्छ । यसअघि उनका सिलाङ (भारत)बाट 'परिचयात्मक नेपाली व्याकरण' तथा नेपाल प्रज्ञा-प्रतिष्ठानबाट 'पाल्पा-गुल्मी उपभाषिका' नामक ज्यादै उपयोगी कृतिहरू प्रकाशित भई जिज्ञासु पाठकमाझ पुगेका छन् । साथै अनेकानेक विषय प्रसङ्गका निबन्ध-आलेखहरू फुटकर रूपमै पनि विभिन्न पुस्तक पत्रपत्रिकामार्फत पाठकवर्गले पढ्न पाएका छन् । यसै मेसोमा यसै वर्ष गुल्मीको तम्घासस्थित किरण पुस्तकालयले साहित्यकार दीन पन्थीको निबन्धसङ्ग्रह 'हुटिट्याउँको मन' प्रकाशनमा ल्याएको छ ।

यत्रतत्र प्रायः सबैले देखे-सुने-भोगेका मसिना विषयका, लघु आयामका तर यथार्थता, व्यङ्ग्यधर्मी र प्रभावकारिता अभिव्यक्त भएका उनका सबै निबन्ध पढूँपढूँ लाग्दा छन् । प्रस्तुत निबन्ध कृतिमा जम्मा तीसओटा निबन्ध अटाएका छन् । लेखकीय, प्रकाशकीय र केही शुभेच्छुकका गद्य-पद्य शुभकामनाका शब्दहरूबाहेक ८४ पृष्ठमा यी निबन्ध समेटिएका छन् । 'सुखानुभूति' निबन्धले यस कृतिको दैलो उघारेको छ भने 'एकान्तवासका प्रलाप' ले कृतिको बिट मारेको देखिन्छ ।

सामान्य पढे-सुने-जानेकै कुरालाई कलात्मक गजुर प्रदान गरी निष्कर्षात्मक अभिव्यक्ति दिएको पाइन्छ ।

कृतिको पहिलो निबन्ध 'सुखानुभूति' मा बुनिएको लोभलाग्दो काव्यात्मक शैलीले जोकसैलाई पनि तान्न सक्छ- 'संसार विचित्र छ । सुखकै खोजमा एउटा रागी हुन्छ, अर्को वैरागी हुन्छ । एउटाले पाउडर घस्छ, अर्कोले खरानी घस्छ । सुखकै खोजीमा एउटा सहर पस्छ, एउटा वन पस्छ । सुख वनमा छ कि सहरमा ?' यो जीवनका केस्राकेस्रा औँल्याएर सुख भन्नु मनबाट उठेको अनुभूति हो भन्ने निचोड पेस गरेका छन् निबन्धकारले ।

त्यस्तै 'मान्छे, समाज र सद्भाव' शीर्षकमा नेपाली समाजमा मानवीय मूल्यको ह्रास हुँदै गएको चित्र खिच्दै मान्छे भन्नु र मान्छे बन्नु नितान्त फरक विषय हो भन्ने लेखकीय मान्यता देखिन्छ । प्रस्तुत निबन्ध नैतिक पाठ र आध्यात्मिक सन्देश दुबै एकैसाथ प्रवाह गर्ने सुन्दर माध्यम पनि बन्न पुगेको छ ।

अर्को 'पृथ्वी र मान्छे' निबन्धमा जल, वायु र आकाशलाई दूषित पार्ने काम बन्द गर्न आग्रह गर्दै धर्ती सबैको हो भन्दै पृथ्वीविना हामी सार्थक हुन नसक्ने टिप्पणी गरेका छन् । 'धर्म' मा निबन्धकार पन्थी महाकवि देवकोटाकै यात्री कविताकै मूल भाव वरपरकै झङ्कार गराउन सफल देखिन्छन् । उता देवकोटा आफ्नो कवितामा भन्छन्-

**फर्क फर्क हे ! जाऊ समाऊ,**
**मानिसहरूको पाउ !**
**मलम लगाऊ आर्तहरूको**
**चहराइरहेको घाउ ।**

यता निबन्धकार दीन पन्थीको हार्दिक-कलमले आह्वान गरेको छ- 'हाम्रो धर्मले जनसेवालाई नै जनार्दनसेवा मान्छ ।' स्वर्ग र नरकबारे थप प्रस्ट पार्दै उनी भन्छन्-'स्वर्ग त्यही हो जहाँ शान्ति र प्रेम छ । नर्क त्यही हो जहाँ हिंसा, वैमनस्य र घृणाको बास छ ।' हाम्रै सेरोफेरोमा भएका देवतालाई स्वागत गर्न र हामीभित्रैको दैत्यलाई लखेट्न निबन्धकारको विशेष आग्रह पाइन्छ । निबन्धकारको कलम भन्छ-'पूजा के हो ? केवल सेवा, केवल श्रद्धा । अक्षता चढाऊ भोकाहरू अघाउँछन् । धजा चढाऊ नाङ्गाहरूको आङ ढाकिन्छ । पाद्य चढाऊ प्यासीको प्यास मेटिन्छ । अर्घ चढाऊ नातागतले तागत पाउँछ । फूल च्यातेर जग्गेमा फाल्दैमा स्वर्ग फल्दैन । मूर्तिमा पुर्पुरो ठोक्दैमा भगवान्को दर्शन मिल्दैन । जग्गेमा असत् आर्जनको चन्दा धकेलेर अहङ्कार गर्दैमा धार्मिक भइन्न । आडम्बरी, ढोँगी, धनाभिमानी, भ्रष्टाचारी र दम्भीहरूलाई सुख स्वर्गको द्वार खुल्दैन ।'

प्रस्तुत कृतिको अर्को निबन्ध हो- 'प्रश्नहरू' । यस निबन्धमा भर्खर बोली फुटेर दिनमा सयौँ प्रश्न मात्र गरीगरी हैरान पार्ने जिज्ञासु बालकको स्वभावजस्तै प्रश्नका अनेकानेक पेटाराहरू तेर्साइएका छन् । फूलहरू किन फुल्छन् ?, बानरले रक्सी बनाएर किन पिउन्नन् ?, किन मान्छेले मात्र पढ्छ पुस्तक ?, उँखुमा गुलियो भर्ने को हो ?, हामीहरू यस धरतीमा किन आयौँ ?, हात्ती ठूलो र भुसुनो सानो किन भयो ?, किन चमेरो रूखमा उल्टो झुन्डिन्छ ?...आदि लगभग सयौँ अचम्माचम्म लाग्ने प्रश्नहरू गरिएका छन् । निबन्धकै शीर्षक सार्थक हुने गरी विनाउत्तरै निबन्ध टुङ्ग्याइएको छ ।

'नव वर्ष' मा प्राकृतिक छटालाई ज्यादै कलात्मक पाराले कलम-मसीले रङ्ग्याएका छन् निबन्धकारले-'वसन्त आयो फेरि । पृथ्वीले अर्को एक फन्को मारिन् । हेमन्तले नङ्ग्याएका बोटहरूले पालुवाको हरियो खास्टो ओढे । शिशिरले भुत्ल्याएका पाखाहरूले फेरि हरियो चोली लगाए । पर्वतहरूले कोरीबाटी गरे । सिउँदोमा गुराँस फुलाएर पर्वतहरू सौभाग्यवती बने । आरूबखडाका बोटहरूमा

हिउँझैँ शुभ्र फूलहरू लागे । माहुरीहरू डुल्न थाले फूलमा, स्वार्थी प्रेमीझैँ । चौरहरू हरिया भए । धरती रङ्गीन बनिन् थरीथरीका फूलले, पालुवाले ।' प्रस्तुत निबन्ध पढ्दा प्रसिद्ध कवि भूपि शेरचनको 'नयाँ वर्ष' शीर्षकको कविताका यी हरफ सम्झना भइहाल्छ :

**फेरि एकचोटि**
**भयानक बमहरू बोकेर, उडिरहेका हवाइजहाज**
**र रकेटहरूमुनि बसेर**
**लेख्नु छ प्रियजनहरूको नाममा**
**सफलता, शान्ति र दीर्घायुको शुभकामना-पत्र ।**

निबन्धकार पनि थप्छन्- 'आकाशमा चन्द्रमा हाँस्छन् तर मन अँध्यारो छ मान्छेको । बम र बारूदका त्रासको धरापमुनि चाँपिएर हामीले नववर्षको शुभकामना बाँड्यौँ यसपालि । सुखद वसन्तबीच पनि हामी उन्मुक्त हाँसो हाँस्न पाएनौँ यसपालि । प्रेतहरू डुल्छन् बस्तीमा मृत्युको सन्देश बोकेर । रूख पलाए, मन पलाएन मान्छेको । फूलहरू फुले तर फुलेनन् मान्छेका अनुहारहरू । भाइले दाइलाई माऱ्यो । भान्जाले मामालाई माऱ्यो । भतिजाले काकाको टाउको काट्यो । नेपालीले नेपालीलाई माऱ्यो यसपालि ।' लेखनको सन्दर्भ उल्लेख नगरिए पनि यो निबन्ध हाम्रो देशले भोगेको सशस्त्र युद्ध र शान्ति स्थापनार्थ आयोजित पट्यारलाग्दा वार्ता-गोष्ठीहरूमध्येको कुनै एक नयाँ वर्षको विद्रूप शब्दचित्र हो भन्न सकिन्छ ।

अर्को निबन्ध 'सफलता' मा निबन्धकारले कसरी बडो कुशलतापूर्वक मानवजीवनको परिवर्तनको चित्र खिचेका छन्, त्यो जान्न सफलताभित्रको यो अंश पढ्नै पर्छ-'मन बेचेर धन जोर्दाजोर्दै बूढौली फुल्यो । इमान बेचेर मान खोज्दा अपमान मिल्यो । म तोरी थिएँ, उम्रिन सक्थेँ, फुल्न-फल्न सक्थेँ बारीभरि । संसारको कोलमा पेलिएर म तेल भएँ । अब म उम्रिन सक्दिनँ, फल्न सक्दिनँ । उफ् ! जीवन नफर्किने यात्रा रहेछ ।' वास्तवमा भौतिक सम्पत्ति मात्र जोडेर बन्धनमा फस्तै जानु, टाट्नामा घाँस खाने बँधुवा वस्तुहरूजस्तै बन्नु र आत्मा-स्पन्दनहीन खेतबारीका बुख्याचाजस्तै बनेर नयाँ कोट-टोपी ढल्क्याउनु मात्र सफलता होइन भन्ने निष्कर्ष यहाँ दिइएको छ ।

अर्को निबन्ध 'स्रष्टा र सृष्टि' मा मान्छे पनि स्रष्टाको सृष्टि भएकाले मान्छेले मैले यस्तो गरेँ, उस्तो गरेँ भन्नुको तुक छैन । यो त स्रष्टाको भावको भ्रम हो भन्दै म स्रष्टा हुँ भन्ने भ्रम उत्पन्न भएपछि मान्छे आफै पृथ्वीमा डाइनोसर लोप भएझैँ सकिने दावी लेखकको छ ।

त्यस्तै 'बानर र मान्छे' मा उनान्सयको चक्कर (सायद यो धन थुपार्ने मान्छेको लालसा कहिल्यै पूर्ण हुँदैन भन्ने सन्देश बोकेको एउटा प्रसिद्ध नेपाली लोककथा हो ।) मा फसेको सभ्य भनिने तर उदास र चिन्तित नरलाई ज्यादै लोभी पापी बन्यो, यो पृथ्वी र यसका सारा उत्पादन मेरै हो भन्यो भनेर घर पनि नबनाउने, कूटनीति, राजनीति, प्रवञ्चना र भेदभाव-उचनीचको सङ्कीर्ण पर्खालमा फस्न नरुचाउने स्वतन्त्र वनवासी बानरले व्यङ्ग्य-घोचपेच गरेको छ ।

'फगत् एक्लै' मा मान्छेभन्दा कुटिल, निर्दयी, स्वार्थी र जाली प्राणी अर्को छैन जगत्मा भन्ने निबन्धकारको ठम्याइ छ । मार्मिक पाराले निबन्धांश भन्छ-'हामी एकजना मर्छौं, सकिन्छौं, दिवंगत आत्मा बन्छौं । यसरी नै सकिँदै जान्छन् सबै सबै । नमर्ने कोही छैन यस मर्त्यमा । जो उत्पन्न हुन्छ त्यो नष्ट हुन्छ । ज्यूँदाहरू तत्काल आफू नमरेकोमा ढुक्क र मख्ख छन् । हरेक मलामी यसरी नै लास बन्दै जन्छ । नयाँ थपिन्छन्, पुराना सकिन्छन् । पुराना पात झर्छन्, नयाँ पात पलाउँछन् ।' यसै निबन्धमा मान्छेको स्वार्थको जालोलाई यसरी स्पष्ट पारिएको छ-'संसार रङ्गीचङ्गी छ । रङ्गीन छन् समाजका व्यवहारहरू । गोजी छामेर नखरा पार्छे प्रेमिका । बैंस देखेर पछि लाग्छ प्रेमी । काम देखेर फुरूङ्ग पर्छ मालिक । धन सकिएपछि कर्के आँखाले हेर्दिन प्रेमिका । बैंस निथ्रिएपछि तर्केर हिड्छ प्रेमी । बल सकिएपछि वास्ता गर्दैन मालिक । फूल वैलाएपछि भमराहरू बस्दैनन् फूलको बोटमा ।'

त्यस्तै अर्को निबन्ध हो 'लेखाइ' । यसमा लेखकको स्वाभिमानको चर्चा गर्दै उसको यशोगान गरिएको छ । 'सत्यान्वयी लेखकहरू हावाको गतिमा ढल्किन्नन् । उनीहरू युग बदल्नको लागि तत्कालीन सत्ता र शक्तिको विरूद्ध लेख्छन् । आफ्ना ओजस्वी लेखाइबाट बरू दण्डित हुन्छन् तर भाट वा स्तुतिगायक बन्दैनन्' भन्ने निबन्धकारले उल्लेख गरेका छन् । यस निबन्धको अन्तिम वाक्य 'लेखक जति दण्डित हुन्छन् त्यति ओजस्वी हुन्छन्, जति पुरस्कृत हुन्छन् त्यति फिका हुन्छन् ।' प्रति भने सबैको मतैक्य हुन्छ भन्नेचाहिँ भन्न सकिन्न ।

'त्यान्द्रहरू' यो अर्को निबन्ध हो यस कृतिको । यसमा विचित्र संसार र मान्छेका ढोँगी, देखावटी व्यवहार उजागर गरिएको छ । मान्छेका आदर्श, दया, धर्म, परोपकारका बहस व्यर्थ बकबास हुन्, प्रलाप मात्र हुन्, स्वाङ हुन् । लेखकीय मत छ-'एउटाको विजय अर्काको पराजय बन्छ । सबैको जय हुने खेल खेल्न बाँकी छ । मुसाको घरमा रूवाबासी चल्दा बिरालाको घरमा भोजभतेर हुन्छ । मान्छेका घरमा मासुको भोज चल्दा बाख्राको खोरमा कुटुम्बवियोगको शोक बन्छ ।' यो निबन्धका अन्य प्रसङ्ग पढिरहँदा कवि लेखनाथको प्रसिद्ध कविता 'नैतिक दृष्टान्त'को सम्झना स्वाभाविक रूपमा भइहाल्छ :

**उपकारी गुणी व्यक्ति निहुरन्छ निरन्तर**
**फलेको वृक्षको हाँगो नभुकेको कहाँ छ र ?**

'विद्या र विद्यार्थी' मा किताबका कुरा सबै कण्ठ गरे पनि तत्त्व बुझिएन भने विद्वान् भइन्न भन्ने दृष्टिकोण अघि सारिएको छ । मूर्खहरू आफ्नो अत्यल्प जानकारीलाई पूर्ण ठानी मख्ख पर्छन् भन्दै जोसँग सरलता छैन, अहङ्कारी छ, सङ्कीर्ण छ त्यो विद्वान् होइन भनिएको छ ।

'माटो' अर्को निबन्ध हो । प्रस्तुत निबन्धमा मान्छेको ज्यानभन्दा निर्जीव माटो नै अमर र अमूल्य भएको तर्क दिइएको छ । सुवर्णमय लङ्का छाडेर राम आफ्नो माटोले तानिएर नै अयोध्या फर्केको प्रसङ्ग अघि सार्दै लेखक भन्छन्- 'माटाका लागि पुर्खाले तन दिए, हामीले मन दिन सकेनौँ । पुर्खा माटाका लागि लडे, हामी भातका लागि लडिरहेँछौँ ।' र, अन्त्यमा दह्रो प्रश्न गरेका छन्- 'मातृभूमिको माटो उठाएर मुठीमा खोई हामीले सङ्कल्प गरेको ?' प्रस्तुत निबन्धको भावमा एकाग्र हुन खोज्दा प्रसिद्ध गजलकार बूँद रानाको गजल 'हीरा जुहारभन्दा माटो मलाई प्यारो...' गुन्गुनाउन पुग्छ यो मन त ।

'कालसूत्र' मा सुखमा नआत्तिन र दुःखमा नमात्तिन सुझाइएको छ । शान्ति, करूणा, आविष्कार, कला र आध्यात्मिक क्षेत्रका प्रबुद्धहरू विश्वभर बाँचिरहेका तर क्षणिक सत्ता उन्माद, सैन्य उन्माद र अहङ्कारले ग्रसितहरूले अन्त्यमा धन-जन-मन केही पनि जित्न नसकेको पुष्टि गरेका छन् । निष्कर्ष यस्तो पाइन्छ यस निबन्धबाट- 'नफुर्क कोही सुखमा, नथर्क कोही दुःखमा ।'

'हुटिट्याउँको मन' यो प्रस्तुत कृतिको शीर्षक हो । बालचन्द्र शर्माद्वारा सम्पादित नेपाली शब्दकोशमा- लामालामा खुट्टा, छोटो पुच्छर, कालो चुच्चो र खैरो पिठिउँ हुने, जलाशयका नजिक रहने एक जातको चरो भनी 'हुटिट्याउँ' लाई चिनाइएको छ । पृथ्वीका मान्छेका अनेकानेक कुकर्मले आकाश पूरै जर्जर र जीर्णशीर्ण बनिरहेको छ । तैपनि मान्छेहरू ढुक्कसाथ हाँस्ने, खेल्ने, खाने र निर्धक्क सुत्ने गरेका भन्दै कृतिको आवरणमा चित्र कोरिएझैँ आफ्ना दुबै खुट्टा तनक्क तन्काएर आकाश खस्यो भने तिनै आफ्ना खुट्टाले थाम्नेछु भन्ठानेको छ र अठोट गरेको छ यो चराले । दुबै खुट्टा आकाशतर्फ फर्काएको छ, आफ्नो शरीर पट्यार लाग्ने गरी उत्तानो पारेर । वास्तवमा यो तीव्र व्यङ्ग्य-बाण हो । यसमार्फत पृथ्वीको बिग्रँदो पर्यावरणीय पक्षमाथि, आफ्नै स्वार्थ मौलाएर पत्तासाफ हुने गरेका मानवका कुकृत्यमाथि व्यङ्ग्य प्रहार गरिएको छ । आकाश खसेर एक दिन पृथ्वीका सारा मान्छे मर्ने र आफ्नो (हुटिट्याउँको) राज्य चल्ने मनको लड्डू घिउसँग खाएको पनि सन्दर्भ उल्लेख गरिएको छ । जे होस्, सबैले सत्कर्म गरी पृथ्वी-आकाश प्रदूषणमुक्त पार्नुपर्ने सन्देश परोक्ष रूपमा यसमार्फत प्रवाह गर्न खोजेको प्रतीत हुन्छ ।

'ठूलो मान्छे' निबन्धमा निबन्धकार भन्छन्-'दुःखसित डराउँछन् मान्छेहरू । दुःखले मान्छेलाई महान् बनाउँछ । दुःखका निरन्तर प्रहारले मान्छेलाई इस्पात बनाउँछ ।' यी विचार पढिरहँदा अर्का प्रसिद्ध साहित्यकार रुद्र ज्ञवालीको गजलअंश याद आउँछ-

**इस्पात बन्छ सेतो घोटे फलामलाई**
**केही हुन्न दानभेटी अर्पेर रामलाई ।**

लेखक पन्थी भन्छन्-'मान्छे जसले सुख पायो त्यो ठूलो होइन, परोपकारको लागि जो अघि सर्छ त्यही ठूलो हो । आफू सिँगारिने ठूलो होइन, अरूलाई सिँगार्ने ठूलो हो । उदरपूर्ति चरामुसाले पनि गर्छन् । आफ्नो सुख चाहने मान्छेको प्रवृत्तिमा सबै चल्छन् । आफूले दुःख पाएर पनि जो अर्काको सुखको निमित्त काम गर्छन् तिनै ठूला मान्छे हुन् ।'

'पानी' यो अर्को शीर्षकको निबन्ध हो । पानीलाई यो संसारको ऊर्जावान् पदार्थका रूपमा सर्सरी बयान गरिएको छ । पानीका अनेकानेक रूप रङले पृथ्वी पुष्पित, पल्लवित बनेको, रङ्गीन बनेको, हृष्टपुष्ट बनेको र कहिलेकाहीँ आँधीहुरी र झञ्झावात आउने गरेको भन्दै पानीलाई आगाकी जननीका रूपमा चित्रण गरिएको छ । पानीमा अपरिमेय ऊर्जा रहेको प्रकाश पारिएको छ ।

'दृश्य/अदृश्य' मा मानव शरीरलाई आत्माको अस्थायी घरका रूपमा परिचय गराइएको छ । लेखक भन्छन्- 'विद्युत्को तार देखिन्छ तर ऊर्जा देखिन्न । मान्छेको आत्मा त्यस्तै ऊर्जा त हो नि ।...क्रोध अदृश्य भएर जगत् जलाउँछ । प्रेम अदृश्य भएर जगत् भिजाउँछ ।' र, लेखकको यो पनि प्रस्टीकरण छ- 'शरीरले चलेको देख्छौँ आँखाले । यथार्थमा मान्छे शरीरले चल्दैन । मृत शरीर किन चल्दैन ? मृत शरीरलाई किन दुख्दैन ? मान्छे प्राणबाट चल्छ, मनबाट चल्छ । प्राण ऊर्जा हो शरीरको । मन भोक्ता हो सुखदुःखको ।'

'नूतन/पुरातन' शीर्षकमा यो अर्को निबन्ध रचिएको छ । उहिलेका कुरा खुइलिए भन्नेहरूलाई गम्भीर प्रश्न तेर्साएका छन् यस निबन्धमा । निबन्धकार भन्छन्- 'यी खोलानाला र सागरहरू मान्छेले खनेका हुन् र ? यी चन्द्र, सूर्य, ताराहरू आज बनेका हुन् र ? यी सब पुरातन हुन् । नूतन केही छैनन् । जुन धर्तीमा हामी बामे सर्‍यौँ यो हामी नजन्मदै थियो । जुन आकाशमा हामीले सास फेर्‍यौँ, त्यो हामी नजन्मदै थियो । मान्छेले नयाँ पृथ्वी, नयाँ आकाश, नयाँ वायु लिएर यहाँ आएको होइन र लिएर पनि जान्न । उहिलेको केही पनि खुइलिएको छैन । बरू हाम्रो बुद्धि खुइलिएको छ, विवेक खुइलिएको छ ।' पुरानो हो भनेर हिजोका सबै कुरा फाल्ने हो भने हामी सभ्यता, भव्यता, र संस्कृतिविनाको बुङ्गा र बर्बर हुन्छौँ भन्दै पुष्टि दिन्छन् उनी- 'नूतनताको नाममा पुरातन धरोहरहरू भत्काउने होइन ।

हो विकृतिहरू राख्ने होइन । आफ्नै शरीरको पनि मल फाल्नुपर्छ । सतीप्रथा थियो, हरायो । दासप्रथा थियो, हरायो । छुवाछूत प्रथा छ नराम्रो, त्यो पनि हराएर जानेछ । कुविचार, कुप्रथा, सङ्कीर्णता हराएर जानेछन् सबै ।...पुरानो हो भनेर सुन फाल्नु हुँदैन, नयाँ हो भनेर कसिङ्गर राख्नु पनि हुँदैन ।'

'क्रान्ति' शीर्षकको निबन्धबाट क्रान्तिबारेमा लेखकका धारणा बुझ्न सहयोग मिल्छ । लेखक उल्लेख गर्छन्- 'चौपारी भत्काउनेलाई होइन, बनाउनेलाई क्रान्तिकारी भनिन्छ । क्रान्ति विध्वंस होइन, नवनिर्माण हो, अन्वेषण हो, नवसृजन हो । जसले नवयुगको ढुकढुकी छाम्छ त्यही क्रान्तिकारी हो । विचार र प्रविधिले ल्याउँछन् क्रान्ति ।...हाम्रा पुर्खाहरू पुल नहुँदा खोला तर्थे । पुल बनेपछि खोलामा पस्नु पर्दैन । लोभीपापीहरू क्रान्तिकारी होइनन् । मान्छेका दुःख निवारणका लागि भिक्षु बन्ने गौतम बुद्ध क्रान्तिकारी हुन् । सत्यका लागि क्रसमा टाँगिने क्राइस्ट क्रान्तिकारी हुन् । सुकरात, रूसो, डार्बिन, फ्रायड र मार्क्स जसले नयाँ विचार ल्याए ती क्रान्तिकारी हुन् ।'

'धन' पाठ्यक्रमलाई पछ्याएर धनभन्दा विद्या ठूलो भनी विपक्षीका तर्कलाई पछि पार्ने विद्यार्थी बेठीक लाग्छ अचेल लेखकलाई । जताततै जे जसरी पनि धन थुपार्ने र 'धनी'लाई नै सर्वगुण सम्पन्न ठान्न थालिएकाले लेखकको मथिङ्गल टट्याएको देखिन्छ । सार र शैली व्यङ्ग्यात्मक हो तापनि लेखक यथार्थको सहारा लिँदै यो निष्कर्षमा पुगेको देखिन्छ-'धनविना न विद्या हुन्छ न यश । विद्या र यश नगदमा बिक्री हुन्छन् बजारमा । धनाढ्यता नै कुलीनता हुन्छ । धनाढ्यता नै गुणवत्ता हुन्छ । धनाढ्यता नै नैतिकता र सभ्यता बन्छ यस युगमा । निर्धनको विद्वता मजाक बन्छ । धनाढ्यको अनैतिकता नैतिकता बन्छ, असभ्यता सभ्यता बन्छ, व्यभिचार सदाचार बन्छ । भ्रष्टाचार पुरुषार्थ बन्छ । सच्चा कमाइको कुरा गर्नेलाई कमजोर मानिन्छ । सादा जीवन उच्च विचार भन्नेलाई छुचो भनिन्छ । जसरी भए पनि धन कमाउनुपर्छ । केवल धन चाहिन्छ । क्षम्य छन् धनार्जनका टेढामेढा बाटाहरू । धनमत्त माफिया र भ्रष्ट शिर ठाडो पारेर हिड्छन्, धाक, मान र शान छ बेइमानहरूको ।'

यस कृतिको अर्को निबन्धशीर्षक हो- शङ्खे किरा, हुटिट्याउँ र माकुराहरू । अचम्मको दर्शन भेटिन्छ यसमा । 'शङ्खे किराको खोल मान्छेलाई काम लाग्छ मलामी जाँदा एकोहोरो बजाउन । मान्छेको खोल शङ्खे किरालाई काम लाग्दैन । न त काम लाग्छन्-यी कर्मकाण्ड, दूना, टपरी र जौ तिल । जन्मेपछि मर्न पर्छ भनेर घोकिरहने मान्छे किन शङ्खे किरा बन्न खोज्छ ? धन्यवाद दिन्छु । कस्तो पवित्र जीव हो जो मरेर पनि मन्दिरमा चढ्छ । कस्तो भाग्यशाली प्राणी हो जो निस्प्राण भईकन पनि उच्च घोष प्रकट गर्छ । शङ्ख एउटा तुच्छ किराको खोल-पाञ्चजन्य भएर भगवान् कृष्णको ओठसित जोरिन्छ ।' मौकानुसार

उपाय गरेर, रङ बदलेर अरूलाई दुःख दिने मूलतः नायकवर्गप्रति कटाक्ष प्रहार हो भन्ने बुझिन्छ प्रस्तुत निबन्ध । शङ्खे किरा, हुटिट्याउँ र माकुराहरूका गतिविधि नै टाठाबाठाले नक्कल गरेका हुन् यत्रतत्र । नक्कल नगर्ने वा गर्न नसक्नेहरूलाई युगले नै नक्कली पो मान्ने हो कि !

'अक्षर र अमूर्त अभिव्यक्तिहरू' शीर्षकको यो अर्को निबन्धमा आदर्श, निष्ठा र इमानदारीका पछि लाग्नेहरूले भोग्नुपर्ने अवनतिका परिणतिहरू वर्णन गरिएका छन् । यो नेपाल के विभिन्न कालखण्डका वीर-सङ्गठकहरूको भूलले बनेको हो भनेर प्रश्न तेर्सिएको छ निबन्धकारको-'के नेपाल पृथ्वीनारायण, कालु पाण्डे, दामोदर पाण्डे, बहादुर शाह र अमरसिंह थापाका भूलहरूबाट जन्म्यो ? किन आज हामी नेपाललाई खण्डखण्ड गराउन उद्यत छौँ ? भूल कसको हो ? भूल ।'

'यात्रामा' शीर्षकको यो निबन्धमा जिन्दगीको यात्राको वर्णन छ । बालक, युवा, यौवन, वृद्धता, मृत्यु... वास्तवमा प्राप्ति केही नहुने र प्राप्तिका लागि उपक्रम पनि एक्कासि नछोडिने शून्य र निरर्थक सिसिफसको कथाजस्तो महानिरर्थक छ यात्रा जीवनको । एउटै बाटोलाई निस्कनेले त्यसलाई उकालो भन्ने र झर्नेले ओरालो भन्दै यात्रा गरिरहेकै छन् । हिजो हामी नहुँदा केही थिएन । यात्रामै आफन्त, धन, जन, यौवन, मिलन, बिछोड भेटिएका हुन् । यी सबै बाटैमा छाडेर हामी जान्छौँ अनन्त यात्रामा भन्ने जीवन-यथार्थ प्रकटीकरण गरिएको छ प्रस्तुत निबन्धमा । जे जति कर्म गरे पनि जीवनको यात्रान्तमा हामीले छाडेर जाने बस् अलिकति धुवाँ र बस् अलिकति खरानी भन्ने वाक्यांश कम्ती पारदर्शी कटु यथार्थ लाग्छ र !

'राजनीति' यो शीर्षकमा निबन्धकारले आफ्नै मौलिक परिभाषा दिएका छन् राजनीतिबारे । कतै उनी भन्छन्-'अप्राप्त राज्यसत्ता प्राप्त राज्यसत्ता जोगाइराख्न खेलिने खेल हो राजनीति । सर्वश्रेष्ठ अनीतिको नाम हो राजनीति । यो कटु सत्य हो । मेरा कुरा कसैलाई मन परून् वा नपरून् तर यो घामझैँ छर्लङ्ग छ, बर्खे झरीझैँ छताछुल्ल छ ।' कतै फेरि भन्छन्-'शिवजी जसरी नाचे पनि ताण्डव नृत्य हुन्छ, आदर्श नृत्य हुन्छ । जीवन्त राजनीतिमा रक्तसञ्चारजस्तै हुन्-हिंसा, षड्यन्त्र, धोका, स्वाङ र छलकपटहरू । जनता नझुक्याईकन, जालझेल नगरीकन, अर्कोलाई सत्ताबाट नगलहत्याईकन कोही सर्वोच्च पदमा पुग्दैन । राजनीतिमा षड्यन्त्र जायज मानिन्छ । साम, दाम, भेद र दण्ड त उपाय हुन् राजनीतिका ।' निबन्धकारले व्यङ्ग्य त हान्नुसम्म हानेका छन् तर उनी आफै भन्छन्-'मैले राजनीतिको निन्दा गरेको होइन, जीवन्त राजनीतिका सत्यहरूको चर्चामात्र गरेको । राजनीति त्याग, सन्न्यास र वैराग्यको मेसो होइन, भोग, राग र द्वेषको मेलो हो । राजनीतिमा धर्म, त्याग, निष्ठा, सिद्धान्त खोज्दै हिड्नेहरू

जोगी भएर हिडे हुन्छ, खरानी घसे हुन्छ । त्यस्ता लकीरका फकीरहरू गुफा पसेर ध्यानमा बसे हुन्छ । राजनीतिमा पाप गर्नु भनेको हार्नु हो, धर्म भनेको जित्नु हो ।...कसैले एक जना मान्छे मारे आजन्म कैद हुन्छ । राजनीतिको नाममा हजारौँ मान्छे मारे सर्वोच्च पद प्राप्त हुन्छ ।' कूटनीतिको हवाला दिँदै लेखक भन्छन्-'नेताको बोली विनम्र हुनुपर्छ तर हृदय छुराको धारजस्तो हुनुपर्छ । बोल्दा मुस्कुराएर बोल्नुपर्छ तर कर्म क्रूर र निर्दयी हुनुपर्छ ।' लेखकले देशको सम्पूर्ण कुराको मियो राजनीति हुन्छ तर आफूहरूले देखिरहेको राजनीतिमा नीतिसिद्धान्त हारेको र शक्तिसिद्धान्तले जितेको छ भन्दै राजनीतिका सम्पूर्ण विद्रूप दृश्य अन्त्य भएर राजनीतिमा नयाँ संस्कृतिको, नयाँ सभ्यताको, इमानको, सौजन्यको र देशप्रेमको उदय होस् भन्ने कामना गर्दै सपनाहरू विपना भएको त्यस दिनमा उत्सव मनाउँला भनेका छन् ।

'माया' मा महर्षि सन्न्यासीहरूले मायालाई मिथ्या ठाने पनि उनीहरू मायाकै टुनाले पग्लिरहेका छन् । मायाका अनेकानेक रूप, शाखा, छटाहरू छन् । माया नहुँदो हो त सृष्टिका छताछुल्ल सौन्दर्य छ्यालब्याल देख्न पाउने थिएनौँ भन्दै जताततै माया नै मायाका स्वरूप देख्ने निबन्धकार भन्छन्-'सन्तानको मायामा असीम कष्ट भोग्छन् आमाहरू । मायाकै प्रेरणामा पिठ्यूँमा बच्चा बोकेर रूखरूख फुङ्गाल्छन् बाँदरहरू । मायाकै प्रेरणाले बच्चाहरूको मुखमा चारो पुऱ्याउँछन् चराहरू । देशको मायामा ज्यूज्यान अर्पन्छन् सहिदहरू । जादूझैँ, टुनाझैँ, सम्मोहनझैँ हुन्छ मायाको प्रभाव । च्यात्न नसकिने हुन्छ मायाको जाल । सृष्टिको निरन्तरता र जीवनको स्थिति मायामै अवलम्बित छ ।'

अर्को निबन्ध 'सुर्ताहरू' हो । सुस्तामा छिमेकीबाट सीमा मिचिँदाको सुर्ता, कन्चनपुरमा बालिका बलात्कृत हुँदाको सुर्ता, इराकमा नेपालीको घाँटी रेटिँदाको सुर्ता, भ्रष्टाचारबाट देश बर्बादी हुँदाका लगायत अनेकौँ सुर्ताहरू छताछुल्ल छन् यहाँ । 'किन चाहियो ज्ञान विज्ञान, कला र साहित्य ? आहार जुटाउने सोझो धन्दामा लागे हुन्छ । ढुङ्गे युगमा सिकेको विद्याले काम चल्छ । खानुपर्छ-भोजन जुटाऊ । लड्नुपर्छ-हतियार बनाऊ । शासन गर्नुपर्छ-बल बढाऊ । रतिक्रीडा गर-वंश बढाऊ । जसको बल छ- उसको पृथ्वी । मसल बढाऊ-बलमिच्याइ गर । व्यर्थ टाउको खाने ज्ञान र पुस्तक नल्याऊ । कमजोर बनाउने-नीति र सदाचार नल्याऊ । भूत बिर्स-त्यो गयो । भविष्यत्को सुर्ता नगर । वर्तमानमा रमाऊ ।'

'अक्षर र अमूर्त अभिव्यञनाहरू-२' मा अक्षर र यसका संवाहकहरूको महायात्रालाई रोक्ने हिम्मत कसैको थिएन, छैन र हुने छैन भन्ने दावी यहाँ भेटिन्छ । केही क्षण विश्व थर्काएका चंगेज खान, तैमूर लङ, मुसोलिनी, हिटलर र पोलपोटसँगसमेत नदबेका अक्षर इतिहासका प्रत्येक तानाशाहलाई पराजित गर्ने

सक्षम रहेको उल्लेख गर्दै यसको निरन्तरताको पक्षमा लेखक देखिन्छन्-'अक्षरको विजययात्रा जारी छ । अब पनि झुक्दैनन् अक्षरहरू कसैसँग ।'

'एकान्तवासका प्रलाप' प्रस्तुत निबन्धसङ्ग्रहको समापक अर्थात् अन्तिम सूचीको निबन्ध रचना हो । तम्घासमाथि रेसुङ्गाको शिखरमा चढेर तलतिर हेर्दा त निबन्धकारले अर्जुनडाँडा निकै होचो देखे । यसबाट आफूमा अग्लो छु भन्ने भाव आएको प्रसङ्ग ल्याएका छन् । मानव आफै आफ्ना कर्मले भन्दा अर्केको उचाइमा चढेर उच्च बनिरहेको जमानालाई अनेक विषय-प्रसङ्ग थपथाप पारी स्वादिलो पारेका छन् । रेसुङ्गाबारे निबन्धकारको दिव्य बुझाइ छ-'शून्य छ रेसुङ्गा । यो महर्षिहरूको तपोभूमि । एकान्त कोलाहल शून्य धर्तीको निधार हो यो । यहाँ फुक्छन् बुद्धिका कँसिएका मुर्राहरू । यहाँ फुक्छन् विचार र कल्पनाका बन्धनहरू । बैरागीहरूको स्वराज छ यो अनुपम । यहाँ शान्ति र आनन्दका दसै द्वार खुला छन् । यहीँ खुल्छ समाधि ।' जूनकिरीले ज्योति बालेर चेतनाको सार्थक प्रकाश फिँजारिरहेको अनुभूति निबन्धकारले गरेका छन्-'सुन्दर स्वरलाई रूपले सजाउने जूनकिरीहरू टिमटिमे ज्योति बालेर आए । के खोज्न धद्‌दाउँछन् कुन्नि यी जूनकिरीहरू त्यति सानो टुकी बालेर ? अन्धकारको साम्राज्यमा सानो ज्योति बालेर जूनकिरीले चेतनाको प्रकाश छर्न खोजिरहेछ । आकार सानो भएर के हुन्छ ? झ्याउँकिरीले रातको निस्तब्धतालाई आफ्नो सङ्गीतले चिरिरहेछ । जूनकिरीले रातको अन्धकारलाई टिमटिमे बत्तीले चुनौती दिइरहेछ ।'

मूलतः कृतिको रूपपक्षमा भन्दा सारपक्षमा विश्वास गर्ने पाठकका लागि सानै आयामकै भए पनि प्रस्तुत कृति उल्लेख्य, पठनीय र मननीय मान्न सकिन्छ । प्रस्तुत निबन्धकृति लामो समयसम्म रेसुङ्गा बहुमुखी क्याम्पस (तम्घास, गुल्मी) मा मूलतः नेपाली विषयमा प्राध्यापन कार्यमा संलग्न रहँदै अनेकानेक विधामा लेखन तथा समीक्षणका क्षेत्रमा प्रवृत्त भई खारिएका सिद्धहस्त निबन्धकारको रचना भएकाले यसमा पाठकले एकैसाथ गहिरा गहिरा दिव्य दर्शन, मर्मान्त व्यङ्ग्यबाण, कटु यथार्थ र फैलिइरहेका यत्रतत्रका बहु क्षेत्रका बिब्ल्याँटाहरू सँगालिएर कञ्चन भई सभ्य तथा समुन्नत समाजको सृजना हुन सकोस् भन्ने अन्तर्य अवश्यै लुकेका छन् । सबै निबन्ध छोटा तर रसिला र रोचक लाग्छन् । पढूँपढूँ लाग्ने, सलल बगेको प्राञ्जल शैली लोभलाग्दो देखिन्छ । कुनै कुनै निबन्धमा निबन्धकार आफूले देखे भोगेको प्रसङ्ग, घटना वा लागेको विचार ड्याङड्याङ प्रकट गर्न साहसी बनेको पाइन्छ । केही नौला लाग्ने र निबन्धकारको नौल्याइँसमेत झल्किने शब्दको प्रयोग देखिन्छ । जस्तै-सुनृता (साँचो र मिठो बोली, पृ. ६), अर्थदूषण (भ्रष्टाचार, पृ.५), शिश्नोदरपूर्ति (सायद काम र मामको पूर्ति होला, पृ.४), अस्तेय (चोरी गर्नु, पृ.६), भूकम्पजस्तै (आकाश वा खगोलको कम्पका लागि खकम्प, पृ.४३) आदि । त्यस्तै विभिन्न वेद-उपनिषद्‌का समग्रमा संस्कृत भाषाका सूक्ति, श्लोक तथा ऋचाहरू पनि केही उल्लेख भएका छन् । जस्तै-वसुधैव

कुटुम्बकम् (पृ.४-५), अक्रोधेन जित क्रोधम् (पृ.६), सहनाववतु सह नौ भुनक्तु सह वीर्यं करवावहै, तेजस्विनावधितमस्तु मा विद्विषामहै (पृ.६), प्रकृतिश्चेतनः पुरुषस्तु जडः (पृ.८), अत्मानं कामाय सर्वं प्रियं भवति (पृ.२८), या विद्या सा विमुक्तये (पृ.३५), चरैवेति, चरैवेति (पृ.३६), बडे बडे पोथी पढकर पण्डित भए न कोय (हिन्दी, पृ.३६), धनाद् धर्म ततः सुखम् (५९), तमसो मा ज्योतिर्गमय (पृ.६६), जीवेम शरदःशतम् (पृ.६८), नराणां च नराधिप (पृ.७०), वीरभोग्या वसुन्धरा (पृ.७०), सदा समरविजयीनम् (पृ.७१), वीरभोग्या वसुन्धरा (पृ.७१), तृष्णा नजीर्णा वयमेव जीर्णा (पृ.७७), सत्यमेय जयते नानृतम् (पृ.८०) आदि ।

त्यसैगरी निबन्धकारले आफूले भन्नुपर्ने वास्तविक कुरा वा विषयलाई अनेक बिम्ब र प्रतीकका माध्यमले उजागर गरेका छन् । सामान्य मानिसले सहजै बोध गर्न सक्ने तथ विशिष्ट अर्थ द्योतनको क्षमता वहन गरेका दुबै प्रकारका बिम्ब र प्रतीकको प्रयोगले प्रस्तुत कृति पूर्ण उत्कृष्ट मान्न सकिन्छ । यहाँ प्रयोग गरिएका बिम्ब र प्रतीकका केही झलक यसरी दर्शाउन सकिन्छ । जस्तै- पानीको फोका (पृ.३), हिउँ, आगो, चन्द्र, सूर्य, नदी, वायु (पृ.१०), फूल, बाघ, भालु, बानर, पुस्तक (पृ.१३), हात्तीको सुँड, भुसुनो, जिराफको घाँटी, चमेरो, मयूर, डाँफे, उल्लू, काग, गुराँस, कोइली, गाई, ढेडुवा (पृ.१४), बादल, जिभ्रा (पृ.१५), घडी, झरना, बन्दुक, पसिना, कुरूक्षेत्र, आँसु (पृ.१६), कुकुर (पृ.१९), भकुन्डो (पृ.२१), उन्यू, सिमल, दूध (पृ.२२), डाइनोसर (पृ.२३), माहुरी (पृ.२४), हनुमान्, बालि, सुग्रीव, रावण, अङ्गद, जानकी (पृ.२५), माउखाने (पृ.२७), फूल (पृ.२८), खेत, राक्षस, बिजुली, बाख्रा, भैँसी, कसाई (पृ.२९), घोडा (पृ.३१), ढुङ्गा, सञ्जीवनी (पृ.३३), वनमारा, हात्ती, खरायो, शिशु, कपास (पृ.३४), किताब, सुगा, ढोका, गुरु (पृ.३५), पुतली, परेवा, दत्तात्रेय (पृ.३६), राम, लङ्का, अयोध्या (पृ.३९), सिकन्दर, चंगेज खान, हिटलर (पृ.४०), पोलपोट, खरानी, मसान, तरबार, बुद्ध, ईशा, वाल्मीकि, व्यास, शेक्सपियर, भिन्ची, देवकोटा, सुकरात, प्लेटो, अरस्तू, शङ्कराचार्य, रूसो, भोल्तेयर, गान्धी, हेनरी ड्युना, तैमुर लङ, मुसोलिनी, इदी अमीन, बोकासा, आकाश, चन्द्र, सूर्य, नेपोलियन, नादिर शाह, खुमेनी, सद्दाम हुसेन, कद्दाफी, बगर, रङ्गमञ्च, झाँता (पृ.४१), धुवाँ, हुटिट्याउँ (पृ.४२), हुँडार, डडेलो, समुद्र, इन्द्रेणी, (पृ.४३), पानी, छायाँ (पृ.४४), लिङ्कन, मार्क्स, कालिदास, होमर, गेटे, ह्युगो, गोर्की, प्रेमचन्द, विवेकानन्द, शेली, किट्स, मोतीराम, अच्छा राई रसिक, शाहजहाँ, ताजमहल, गोड्से, शुक्रराज शास्त्री, जुद्ध शमशेर, गङ्गालाल, नर शमशेर राणा, जिसस क्राइस्ट, सुकरात, श्रीकृष्ण, बुद्ध (पृ.४५), शिव, काकाकुल, घाम, कपास, हिमाल, नाइल, सरस्वती, यमुना, सिन्धु, गण्डकी, अम्याजन, मिसिसिपी, भोल्गा, ह्वाङ्हो, इरावती, (पृ.४७), हाँस, रारा, फेवा, माछापुच्छ्रे, मादल, आँधी, हुरी, सुनामी, टापु (पृ.४८), पिञ्जरा (पृ.५०), ग्रेटवाल, भर्जिल, दाँते, सम, लेखनाथ, चाणक्य, कपिल, पतञ्जलि, मार्कोनी,

एडिसन, न्युटन, आइन्स्टाइन, (पृ.५४), घडी (पृ.५६), बाघ, हरिण, बाज, झन्डा, लौरो, खुकुरी (पृ.५७), रगतको होली (पृ.५८), डढेको वन, मृग (पृ.६०), शङ्खे किरा, माकुरा, छेपारा, ग्यालिलियो, कोटिल्य, डार्बिन, फ्रायड (पृ.६१), सङ्ग्राम, समुद्र मन्थन, जुवाको खाल, युधिष्ठिर, शकुनि (पृ.६५), शिशिर, वसन्त, लाटोकोसेरो, पृथ्वीनारायण, कालु पाण्डे, दामोदर पाण्डे, बहादुर शाह, अमरसिंह थापा, भ्यागुता (पृ.६६), बाटो, रात (पृ.६८), ठाँटी, पौवा, (पृ.६९), रेफ्री (पृ.७०), विष, खुर्सानी (पृ.७१), भऱ्याङ (पृ.७२), कुहिरो, घाम, औँसीको रात, सुनाखरी, जूनकिरी (पृ.८०), चङ्गा, अर्जुन (पृ.८२), गाई, गोधुलि, साँढे, कर्फ्यु, गँड्यौला, बम, ढोका, मरिच, महर्षि, झ्याउँकिरी, पजेरो, गजबार (पृ.८३), वीणा, टुकी (पृ.८४) आदि ।

प्रस्तुत निबन्धकृतिको शुद्धाशुद्धि र वर्णविन्यास अर्को वैशिष्ट्य बनेको छ । वर्णविन्यास ज्यादै राम्रो छ तर यसका लेखकको भन्दा प्रविधिका कारण र टङ्कणकर्ताका कारण पनि हुन सक्छ केही हल्का अशुद्धि पनि दृष्टिगोचर हुन्छ । नेपाली भाषाको पछिल्लो वर्णविन्यास नियमसँग केही मेल नदेखिएका र उदारताका कारण (?) रहन गएका केही उदाहरण पृष्ठसङ्ख्यासहित यसरी उल्लेख गर्न सकिन्छ : शहर (पृ.१), सारथी (पृ.६), पन्छी र पक्षी (पृ.१०), पोशाक, गंगाजल (पृ.११), अहंकार र अहङ्कार (पृ.१२), आकाश र समयको आदि–अन्त होला कि न होला । (पृ.१३), शिशिरले भुत्ल्याएका पाखाहरूले फेरि हरियो चोली लगाए । (पृ.१५), यसपालि र यस पालि, हामीले नव वर्षको शुभकामना बाँड्यौ यसपालि (पृ.१६), खोजीरहेछु (पृ.१८), औँठ, ढंगा, शंख (पृ.१९), एरिष्टोटल, अलेक्जेण्डर, गंगालाल (पृ.२०), तत्व (पृ.२१), जंगल (पृ.२४), तै पनि (पृ.२६) धर्मिक (पृ.२८), स्वाङ्, ढोङ् (पृ.२९) तीब्रता (पृ.३०), संकीर्ण, सत्यान्वयी लेखकहरू हावाको गतिमा ढल्किनन् । (पृ.३१), बिऊ, दुनिया (पृ.३३), जमीन, पण्य, झुण्डिएको (पृ.३४), गरीब, ढिडो (पृ.३७), यहँ (पृ.३८), रगत् (पृ.३९), एशिया, हिट्लर (पृ.४०), खोइ (पृ.४१), संग्रह (पृ.४२) राम पुरुषोत्तम बनैँ (पृ.४५) त्यागीहरू भने नक्षत्र झै चंकिए इतिहासमा ।, न तिनीहरू पूज्य बनैँ ।, राजगद्दी त्यागेर भिक्षु बनेका सिद्धार्थ बुद्ध बनैँ ।, पलङ्मा (पृ.४६), मंगल, हिंजो (पृ.५३), सस्कृति (पृ.५३), सपनाथ (सायद सर्पनाथ हो पृ.५५), गरीबी (पृ.५५), अँस्ति (पृ.५६), समय न आई क्रान्ति हुन्न, संकेत, सौँच, झोंक (पृ.५७), हुँन्छ (पृ.६०), जग्जगी (पृ.६२), सोंच्छु (पृ.६३), वेताल (पृ.६५), लाटोकोशेरो (पृ.६६), झिस्मिसेमै (पृ.६७), अर्कोलाई सत्ताबाट न गलत्याईकन कोही सर्वोच्च पदमा पुग्दैन । (पृ.७१) भंग, शहीद (पृ.७५), मुडकट्टा, भेडा झै, मुस्ताङ्, गोरू (पृ.७६), संकल्पहरू, संकट, (पृ.७७), गोरू (पृ.७९), मान्छें, ढुंगे (पृ.७८), चंगा (पृ.८२), ठाँन्दा (पृ.८३), गर्व नगर ए ! खस्रुका अविनीत बुटाहरू तिमीहरूले हिमाल छेक्न सक्ने छैनौँ । (पृ.८३) संगीत (पृ.८४) आदि ।

अतः भट्ट देख्दा ज्यादै मसिना कुरा तथा ससानाझैँ लाग्ने विषयवस्तुहरू भोगेर, अनुभूत गरेर, जुटाएर, जुराएर तिनलाई विशेष रूपमा उठान गर्दै, मस्तिष्क-मन्थन गर्दै, केलाउँदै, माझ्दै, परिपाकपूर्ण तुल्याएर कलाको चास्नीमा चुलुम्मै डुबाएर रसिलो-सुस्वादु परिकारका रूपमा पाठकमाझ आएको लेखनसीपका कुशल व्यक्तित्वको प्रस्तुत कृति नेपाली निबन्धाकाशमा तम्घासको रेसुङ्गाडाँडा नजिकबाट प्रक्षेपण गरिएको एक चोटिलो, धारिलो र गहकिलो साहित्यिक क्षेप्यास्त्रका रूपमा रहेको मान्न सकिन्छ ।

ooo

# भावना

**✍ गणेशपुण्य श्रेष्ठ**
**देवीनगर, बुटवल, रूपन्देही**

**कोइलीको भाषा बोल्दछु म**
**काँ काँको भाषा बोल्दिनँ ।**
**सबैको भलो चाहन्छु म**
**कसैको कुभलो गर्दिनँ ।**
**सागर बनी बहिरहन्छु म**
**खोली कहिल्यै बन्दिनँ ।**
**समानताको खोजी गरिरहन्छु म**
**असमानताको कल्पना गर्दिनँ ।**
**मानवताको नाता जोड्दछु म**
**दानवतालाई श्रद्धाञ्जलि दिन्छु म ।**

ooo

# वाणी विकास र पढाइ सीप विकासको अन्तरवस्तु

✍ **उत्तरकुमार पराजुली**
**काठमाडौं**

विभिन्न जीवहरूले आफ्नो इच्छा, सुख, दु:खलाई विभिन्न सङ्केत, आवाजका माध्यमबाट प्रकट गर्छन् । यसरी प्रकटित आवाजका आधारमा त्यस जीवको अवस्थाको बारेमा जानकारी लिन सकिने जीवशास्त्रीहरूको ठम्याइ छ । मान्छेबाहेकका जीवहरूले प्रकट गर्ने यस्ता आवाज सङ्केतहरू सीमित प्रकारले वर्गीकरण गर्न सकिने वा विशिष्टीकृत गर्न सकिने हुन्छ । तर मान्छेले आफ्नो आवाज वा ध्वनिलाई धेरै किसिममा विशिष्टीकृत मात्रै गरेन बरू यसलाई प्राकृतिक स्वरूपबाट परिष्कृत गर्दै अभ्यास गर्न योग्य, अभ्यासबाट सिक्न योग्यसमेत बनायो । हाल संसारमा रहेका विभिन्न भाषा र तिनको सिकाइलाई यसको उदाहरणका रूपमा लिन सकिन्छ ।

लिपिको विकास हुनुपूर्व भाषालाई भौतिक रूपमा देख्न, पढ्न, बुझ्न सकिने अवस्था थिएन । ध्वनि सचेतनाकै अभ्यासबाट भाषा सिकिने र व्यवहार चलाउने हुन्थ्यो जुन कुरा आज पनि निरक्षर वृत्तमा चल्दै आएको छ । लिपिको विकास हुनुपूर्व पनि थुप्रै ज्ञान सङ्गृहीत भएका थिए । ती ज्ञान-सङ्ग्रह श्रुति परम्पराबाटै बाँचेका थिए र सोही परम्पराबाटै एक पुस्ताबाट अर्को पुस्तामा हस्तान्तरण हुँदै आएका थिए । यसरी पुस्तानुपुस्ता श्रुति पद्धतिबाट हस्तान्तरण हुँदै आएका ज्ञानलाई श्रुति भनियो । त्यसैले वेदलाई श्रुति भनिने कथन प्रसिद्ध छ ।

हुन त लिपिको विकास नहुँदै पनि पठनपाठन प्रक्रिया चलेचलाएको कुरा माथिकै श्रुति परम्पराले प्रमाणित गर्‍यो । जब लिपिको विकास भयो तब ज्ञान गठरीको अभौतिकतालाई (देख्न पढ्न नसकिने अवस्थालाई) भौतिक स्तरमा(देख्न पढ्न सकिने अवस्थामा) रूपान्तरण गर्न सकिने भयो । यसले ज्ञान तथा सीप सुरक्षणमा पनि ठूलो मद्दत पुर्‍यायो । उच्चारण अङ्गको अक्षमताका कारण भाव सम्प्रेषणमा पर्न जाने समस्या पनि लिपि विकासका कारणले केही हदसम्म हल भयो । (जस्तो र लाई ल उच्चारण गर्ने समस्या भएका व्यक्तिले "रामुका खलक खरकमा गए" भन्नुपर्दा "लामुका खलक खलकमा गए"भनिने हुन्थ्यो । तर अक्षर वा भनौं लिपिको विकास भएपछि शुद्धसित भन्न नजाने पनि शुद्धसित लेखेर देखाउन सकिने भयो ।)

सामान्य रूपमा भन्नुपर्दा कण्ठ, तालु, मूर्द्धा, दाँत, ओँठ, जिभ्रो, नाक आदि अङ्गको संयोजनबाट अर्थपूर्ण ध्वनि निकालेर आफ्नो भावना अरूलाई सम्प्रेषण

गर्ने ध्वनिलाई वाणी भनिन्छ । माथि उल्लिखित अङ्गहरूमा केही गडबडी भएमा चाहेको जस्तो, सोचेको जस्तो ध्वनि निकाल्न सकिदैन । जसले गर्दा स्थापित मानक ध्वनिको अभावमा भाव वा भनौँ भावना, विचार सम्प्रेषणमा बाधा, अवरोध सिर्जना हुन्छ ।

के ध्वनि उच्चारणका अङ्गहरूको खराबीले मात्रै वाणी निर्माणमा अबरोध आउने हो ? यसका लागि के कस्ता आधारभूत पृष्ठभूमिको आवश्यकता पर्छ ? यी प्रश्नहरूका बारेमा प्राचीन कालदेखि नै निकै खोज अनुसन्धान हुँदै आएका छन् ।

पहिलो कुरा त वाणी वा ध्वनि उच्चार्य अङ्गहरू सबल स्वस्थ भए पनि जसले सुन्न सक्तैन उसले बोल्न सक्तैन भन्ने स्थापित प्रमाण छँदै छ । यसले के देखाउँछ भने वाणी श्रुति सिकाइको अमूल्य पुर्ख्यौली निधि सङ्ग्रह हो । अन्तरक्रियात्मक सिकाइको बेजोड नमूना हो । यही कारणले गर्दा वाणी उच्चार्य अङ्गको बनोटमा वैयक्तिक भिन्नता रहे पनि अभ्यासका कारणबाट नै कुनै पनि भाषाको साझा ध्वनि उच्चारण गर्न सम्भव हुन सकेको हो ।

घर परिवारले एक बच्चालाई भाषा सिकाउन धेरै समय र प्रयत्नको लगानी गरेको हुन्छ । यसको खासै लेखाजोखा गरिएको हुँदैन । त्यसमा पनि सबैभन्दा धेरै लगानी आमाको हुन्छ । त्यसैले कसैको उसको परिवारमा बोलिने भाषालाई निजको मातृभाषा भन्ने गरिएको हो । आमाको, परिवारको, ऊ आफ्नै वैयक्तिक भिन्नताअनुसार बालबालिकाले आआफ्नै किसिमले कुनै ध्वनि, शब्द, वाक्य उच्चारण गर्न सिकेको हुन्छ । जस्तो कि कुनै परिवारमा सबैको अलि चर्को बोल्ने स्वभाव छ भने त्यस्ता परिवारमा हुर्केको बालबालिकाले सामान्य अवस्थामै पनि अलि चर्को बोल्छन् । शुद्ध उच्चारण गर्ने परिवार छ भने त्यस परिवारका बालबालिकाले पनि शुद्ध उच्चारण गर्ने गर्छन् ।

परिवारमा थुप्रै प्रारम्भिक भाषिक सीप सिकेका बालबालिका विद्यालय आउँदा उनीहरूको भाषिक सीपले थुप्रै ठाउँमा हन्डरठक्कर खाने अवस्था आउँछ । साथीसित, शिक्षकसित, समुदायका व्यक्तिसितको अन्तरक्रियाले उनीहरूले आफ्नो भाषिक सीपलाई परिमार्जित गर्दै,परिष्कृत गर्दै, माझ्दै जान्छन् र त्यस विद्यालय क्षेत्रभित्रको साझा भाषा बनाउने प्रयत्नमा रहन्छन् । परिवार, छरछिमेक, साथीसितको बोलीचालीबाट सिकिएको कथ्य भाषाले बालबालिकाको अन्तरक्रिया गर्ने सीप विकासमा सहयोग पुऱ्याउँछ । कथ्य भाषाको सम्वाद अभिलिखित नहुने, ज्यादा अनौपचारिक हुनुले पनि बालबालिकालाई भाषिक त्रुटि सच्याउँदै अभ्यास गर्दै अघि बढ्न सजिलो हुन्छ । अर्थात् अलिखित भएकाले सानोतिनो गल्तीमा चर्को मुद्दा बन्ने समस्या हुँदैन ।

वाणी विकासका सन्दर्भमा धेरै खोज अनुसन्धान भएका छन् । वाणी मानव जातिकै एक विशिष्ट अभिव्यक्ति कार्य क्षमताको सूचक हो । त्यसो त सबै मान्छेमा वाणी क्षमता हुँदैन भन्ने कुरा स्पष्ट भइसकेको छ । श्रवणशक्ति शून्य हुनेको के वाणी विकासको पृष्ठभूमि पनि शून्य नै हुन्छ त ?यस्ता प्रश्नका जवाफका लागि हाम्रा पूर्वजले वाणी विकासका चार चरणहरूको व्याख्या गरेका छन् । ती चरणहरू यस प्रकार छन्–

१. **परावाक् –** बोल्नका लागि सबैभन्दा पहिले मष्तिष्कले योजना गर्छ । परावाक् अवस्था व्यक्तिले बोली बोल्ने योजनाका लागि मष्तिष्कमा भावना तरङ्गित हुने अवस्था हो । यो अव्यक्त अवस्था हो । यसलाई वाणी विकासको सुषुप्ति अवस्था भन्न सकिन्छ । जसरी सुख्खा मकैको बीऊको दानामा हेर्दा कुनै टुसो वा अङ्कुर देखिँदैन तर माटोमा रोप्दा टुसाउँछ । सो दानामा सुषुप्त रहेको टुसो उपयुक्त वातावरण आउनासाथ प्रकट हुन थाल्छ । वाणी विकासमा परावाक् चरण पनि त्यस्तै सुषुप्त र अव्यक्त चरण हो । यस चरणमा वाणी विकासका अति प्रारम्भिक तरङ्गहरू तरङ्गित हुन्छन् र दोस्रो चरणतिर सङ्क्रमित हुन्छन् ।

२. **पश्यन्तिवाक् –** परावाक् चरणमा सुषुप्त अवस्थामा तरङ्गिएको वाणी यस चरणमा आन्तरिक रूपमा दृश्यमान हुन्छ । अर्थात् मन मष्तिष्कमा कता कता देखे जस्तो, कता कता सुने जस्तो भान सिर्जना हुन्छ । चिन्तनमा नव सिर्जना टुसाउने अवस्था पनि यही हो । वेदका मन्त्र सिर्जना गर्ने ऋषि ऋषिकालाई "मन्त्र द्रष्टा" भनिनुको अर्थ पनि यही हो । माटोमा रोपिएको मकैको बीऊ टुसाउने तर माटोबाहिर नआइसकेको अवस्था जस्तो ।

   पश्यन्तिवाक् सन्दर्भमा बेन्जिन रसायनका सूत्र आविष्कारक जर्मन वैज्ञानिक केकुलेको सपनाको घटना बडो अनौठोको छ । केकुलेले बेन्जिनको अध्ययन गर्दा त्यसका धेरै गुण हाइड्रोकार्वनसित मिल्दाजुल्दा पाउँथे । तर आणविक विश्लेषणमा कुरो मिल्दैनथ्यो । त्यसैले केकुलेले सो रसायनको सूत्र तयार गर्न नसकेर दिक्क थिए । यस्तै चिन्तनको हैरानीमा रहेका वैज्ञानिक केकुलेले एक रातको निद्रामा अनौठो सपना देखे । सो सपनामा कार्बनका अणुहरू कुनै एक नृत्य मञ्चमा नाचिरहेका थिए । ती कार्बनका अणुहरू नाच्दानाच्दै केही अणुहरू ६/६ वटा अणुहरूको समूहमा मिलेर उभिए । त्यसको लगत्तै एउटा सर्प आयो र ती ६ वटा अणुहरूको समूहलाई फनक्क फन्को मारेर घेरी आफ्नो पुच्छर आफैले टोकेर एक वृत्त जस्तो बन्न पुग्यो । सपनापछि केकुले जागे । अनि त्यो सपनाको बारेमा सोच्न लागे । तर्कवितर्क गर्दै जाँदा विपनामा नसुझेको समस्याको समाधान सपनामा आएको होला र भन्ने सोच आयो । मैले आजसम्म सूत्र व्याख्या गर्न नसकेको यो पदार्थ(बेन्जिन) के सरल रेखीय बनोट नभएर षट्भुजाकारमा होला र ? भन्दै षट्भुजाकारमा

कार्बन र हाइड्रोजनका अणु मिलाएर सूत्र तयार गरे । अनि षट्भुजाकार सूत्रमा कार्बन र हाइड्रोजनका अणुहरू मिलाउँदा समस्याको समाधान निस्कियो ।

यस घटनाले के देखायो भने ज्ञानका तरङ्गहरू अभिव्यक्त हुनका लागि विभिन्न चरण पार गर्दै आउँछन् । यो पश्यन्तिवाक् चरण अभिव्यक्तिको झझल्को चरण हो ।

३. **मध्यमावाक् –** मध्यमावाक् चरणमा वाणीले लगभग मूर्तरूप लिने सँघारमा पुगेको हुन्छ । यो चरणमा वाणीले अभिव्यक्तिका लागि माध्यम खोजिरहेको हुन्छ । यस अवस्थामा वाणी व्यवस्थित भएर, खिपिएर, माझिएर अभिव्यक्तिका लागि तयार हुन्छ । यो अभिव्यक्ति प्रस्फुटनको पूर्वावस्था हो । मनमा आएको छ मुखमा आएन भन्ने अवस्था हो । धामी झाँक्री काम्दा, कबल्दा, पतुर्दा उच्च कम्पन छुटेर पनि बक्न नसकेको उकुसमुकुसको अवस्था हो । मकैको बीऊ टुसाएर माटो उचालेर जमिन पट्ट फुटेर टुसो बाहिर निस्कनै लागेको अवस्था जस्तै हो ।

बहिरोपनका कारणले होस् वा वाणी उच्चारण अङ्गहरूको (घाँटी, तालु, जिब्रो... आदि) कमजोरीका कारणले वाणी अवरूद्ध भएका व्यक्तिहरूको पनि मध्यमावाक् चरणसम्म अरू सरह नै वाणी विकास हुन्छ । जब यस चरणपछि अभिव्यक्तिको मार्ग रोकिन्छ तब विभिन्न सङ्केत, अभाषिक आवाज वा ध्वनिबाट वाणीको अभिव्यक्ति प्रकट हुन्छ ।

४. **बैखरीवाक् –** यो वाणीले मूर्त रूप लिएको अवस्था हो । वाणी उच्चारणका अङ्गहरूमा हुने वैयक्तिक फरकका कारण सबै व्यक्तिको बोलीमा केही न केही फरक पर्छ । कुनै बेला त शब्द उच्चारणको गडबडीले अर्थको अनर्थ पनि हुन पुग्छ । जस्तो कुनै व्यक्तिलाई र ध्वनिको उच्चारण ल ध्वनि र त ध्वनिको उच्चारण ट ध्वनिको रूपमा हुने समस्या भएको अवस्थामा "मेरो रातो माटो भएको बारी छ" भन्नुपर्दा "मेलो लाटो माटो भएको बाली छ" भन्ने हुन पुग्छ । वाणीमा आउने यस्ता समस्या अर्थात् शब्द उच्चारणमा आउने यस्ता समस्या समाधान गर्ने उपाय छन् कि छैनन् ?

यसको जवाफ हो अवश्यै छन् । यसका लागि हाम्रा प्राचीन शिक्षाविद्ले सन्था विधिको विकास गरे । यस विधिलाई गुरुमुखी विद्या पनि भने । गुरुमुखी विद्यालाई आधिकारिक, भरपर्दो मान्ने संस्कारको निर्माण गरे । "म फलाना गुरुको गुरुमाको चेलो हुँ । चेली हुँ" भनी गर्व गर्ने संस्कारको निर्माण गरे ।

सन्था भनेको गुरुगुरुमाले आफ्ना चेलाचेलीलाई पाठ दिनु हो । चेलाचेलीले गुरुगुरुमासित पाठ लिनु हो । यो पाठ लिनुदिनुमा झट्ट हेर्दा सुन्दा आज्ञा गरे जस्तो र आज्ञा पालन गरे जस्तो देखिए पनि सन्थामा त्योभन्दा बढ्ता थुप्रै कुरा

छन् । सन्थामा विद्यार्थीले शिक्षकले कुनै वर्णको उच्चारण, शब्दको उच्चारण, वाक्यको र छन्दको उच्चारण गरेको प्रत्यक्ष सुन्छ, हेर्छ, अनुभूति गर्छ र शिक्षकले जस्तै गरी दोहोऱ्याउँछ । विद्यार्थीले कुनै वर्ण, शब्द, वाक्य र छन्दको सही उच्चारण गर्न नसकेमा शिक्षकले तुरून्तै सुधारी शुद्ध उच्चारणका लागि अभ्यास गराउँछन् । सन्था विधि वैयक्तिक शिक्षणको उत्कृष्ट नमूना हो । सहसिकाइको राम्रो उदाहरण हो । सन्था दिंदाखेरि नै शिक्षकले कुन विद्यार्थीलाई कहाँ अप्ठ्यारो पर्छ भन्ने कुरा थाहा पाउँछन् र त्यो समस्या समाधानका लागि लागिरहन्छन् ।

पुरानो जमानामा सन्थालाई शिक्षण विधि मात्रै होइन एक अनुशासनको रूपमा समेत लिइन्थ्यो । गुरुसित सन्था नलिई कुनै पनि शास्त्र पढ्नुहुँदैन भन्ने बलियो मान्यता थियो । यसको मूल मर्म सुरूवाती चरणमा उच्चारण बिग्रियो, व्याख्या बिग्रियो, यति, गति, लय, छन्द बिग्रियो भने विषयवस्तुले दिन खोजेको अर्थ बिग्रिन्छ । यसले उक्त सिकारूको पढाइको आधारशिलालाई पछिसम्म नकारात्मक प्रभाव पारिरहन्छ । एक पटक बिग्रेको समझको छाप पछिका दिनमा मेटाउन गाह्रो हुन्छ । सिकारूको आत्मविश्वास दह्रो हुन सक्तैन ।

प्राचीन गुरुकुल शिक्षण शैली बहुकक्षा बहुस्तर किसिमको थियो । एक जना शिक्षकले विभिन्न तह र स्तरका विद्यार्थीलाई एकै ठाउँमा राखेर पढाउँथे, सिकाउँथे । शिक्षकलाई कुन विद्यार्थी पढाइको कुन तहमा छ भन्ने कुरा याद हुन्थ्यो, जानकारी हुन्थ्यो । जानेका विद्यार्थीले नजानेका विद्यार्थीलाई सिकाइदिने सहसिकाइको पनि राम्रो व्यवस्था हुन्थ्यो ।

अहिले विशेष गरी सानो कक्षामा (कक्षा १–३) सन्था विधिको अभावमा पढाइ सीप विकासका लागि निकै समस्या भएको छ । राम्रोसित वर्ण नचिनेका विद्यार्थी कक्षा २ मा पुगेका, शब्द उच्चारण गर्न नसक्ने विद्यार्थी कक्षा ३ मा पुगेका तथ्य विभिन्न सर्वेक्षणले देखाएका छन् । यसले पनि साना कक्षामा शिक्षक र विद्यार्थीको निकट सम्बन्ध छैन भन्ने कुरालाई थप स्पष्ट पारेको छ । कक्षामा ५/७ जना विद्यार्थी भए पनि लेख्ने पाटीकै छेउमा गएर पढाउने चलनलाई सुधार गर्नुपर्ने देखिएको छ । अर्थात् नजिकै बसेर सबैलाई सिकाउन सकिने अवस्थामा पनि अछट्ट भएर सिकाउने अवस्थामा सुधार गर्नुपरेको छ ।

सानो कक्षामा बालबालिकाले शुद्धसँग छिटोछिटो पढ्न सकेमा मात्रै पनि आजको विश्वको गरिबीलाई १२ प्रतिशतले घटाउन सकिन्छ भनी ग्लोबल मनिटरिङ रिपोर्ट युनेस्कोले भनेको छ । कक्षा १–३ का बालबालिकाले पढ्नका लागि सिक्ने सीप सिक्छन् भने कक्षा ३ देखि माथिका बालबालिकाले सिक्नका लागि पढ्छन् । त्यसैले साना कक्षाको मुख्य ध्येय शुद्धसित छिटोछिटो पढ्ने नै हो । साना कक्षामा छिटोछिटो र शुद्धसित पढ्ने सीप राम्रोसित सिक्न सकेका बालबालिका माथिल्लो कक्षाको पढाइमा अब्बल हुने गरेको तथ्यले पनि पढाइको

जग प्रारम्भिक कक्षा नै हो भन्न थप बल मिल्छ । जसरी बिरूवाका जरामा मलजल गरे बिरूवाले राम्रो उत्पादन दिन्छ त्यसै गरी साना कक्षामा राम्रो लगानी गरे देशको भविष्य उज्ज्वल हुन्छ भन्न सकिन्छ ।

वाणी विकास र पढाइ सीप विकासबीच सम्बन्ध– भाषा सिकाइमा सुनाइ, बोलाइ, पढाइ र लेखाइ मुख्य सीप मानिन्छन् । भाषा सिकाइका सुरूवाती चरणमा माथि उल्लिखित सीपहरूको प्राथमिकीकरण पनि उल्लिखित क्रममै हुनुपर्छ । पढाइ सीपलाई विशेष जोड दिनुपर्ने हेतुले विशेष गरी भाषाको पढाइ सीप विकासका सहजताका लागि पढाइ तत्त्वको परिभाषा गरिएको छ । पढाइ तत्त्वहरू यस प्रकार छन् –

१. ध्वनि सचेतीकरण २. लेख्यवर्ण सचेतीकरण ३. शब्द भण्डार ४.पठन प्रवाह ५. पठन बोध

१. **ध्वनि सचेतीकरण –** उच्चार्य ध्वनिप्रति आफ्नो सचेतता प्रकट गर्ने र सोअनुसारको प्रतिक्रिया जनाउने सीप बालबालिकाले विद्यालय नजाँदै आफ्नै घर, छरछिमेकमा सिकिरहेका हुन्छन् । यस सीपलाई विद्यालयमा पद्धतिबद्ध गर्ने काम गरिन्छ । वर्ण वा अक्षरका सार्थक ध्वनिलाई पहिचान गरी सोअनुसारको सकारात्मक प्रतिक्रिया दिने सीप ध्वनि सचेतीकरणअन्तरगत पर्छ । सुनिएको ध्वनिलाई टुक्राउने (संभवलाई), टुक्रिएका ध्वनिलाई जोड्ने सीप पनि यसअन्तरगत पर्छन् । यसमा बालबालिकाले लेखिएका वा छापिएका अक्षर वा वर्ण चिन्ने, शब्द चिन्ने सीपको प्रयोग गर्नुपर्दैन । केवल मौखिक क्रियाकलाप गरिन्छ । बैखरीवाक् चरणमा अभिव्यक्त सार्थक ध्वनि पहिचान र प्रतिक्रिया आदानप्रदान यसअन्तरगत पर्छ । यो सीप विकासका लागि सन्था अत्यन्त महत्वपूर्ण हुन्छ । शिक्षकले गर्ने क्रियाकलाप "म गर्छु तिमी हेर, सुन । हामी सँगैसँगै गरौँ । तिमी गर म हेर्छु, सुन्छु । " जस्ता कुराले सन्थाको मर्म सार्थक पार्छ । अहिले चलनचल्तीमा रहेको "म गर्छु, हामी गरौँ, तिमी गर" (ग्र्याजुयल रिलिज मोडल)को सारभूत कुरा पनि त यही हो ।

२. **लेख्यवर्ण सचेतीकरण –** लेखिएका वा छापिएका वर्ण, शब्द तथा वाक्यलाई शुद्ध उच्चारण गर्ने तथा कसैद्वारा उच्चारित ध्वनिलाई पहिचान गरी लेखिएका वा छापिएका वर्ण, शब्द वा वाक्यसित सम्बन्धित गर्ने वा बताउन सक्ने सिपको विकास यस पठन तत्वअन्तरगत आशा गरिएको हुन्छ । बोली वा ध्वनिको श्रुति सङ्केतलाई लिपि चिह्नका माध्यमबाट दृश्य सङ्केतमा अवतरण हुने यो अवस्था पठन सीपको निकै महत्त्वपूर्ण अवस्था हो । कसैले बोलेको ध्वनिलाई सुनेर सङ्केतन(कोडिङ) गरी त्यसलाई लिपि सङ्केतमा सही किसिमले विसङ्केतन(डिकोडिङ) गरेर देखाउनु निकै चुनौतीपूर्ण सीप हो । सुनेका आधारमा (वाणी विकासका

चरणहरू छिटोछिटो तरङ्गित गर्दै)सुनिएको ध्वनिलाई लिपि सङ्केतसित विसङ्केतन गरी मिलान गर्ने कलाको विकासले पढाइ सीपलाई नयाँ उचाइमा पुऱ्याउँछ ।

३. **शब्द-भण्डार –** बालबालिकासितको सहज ज्ञान तहको पहुँच स्तर, औपचारिक प्रचलन स्तर, पारिभाषिक वा अर्थ गाम्भीर्यता स्तरका हिसाबले कक्षा, तहमा प्रयोग हुने शब्द समूहलाई तीन तहमा वर्गीकरण गरिएको हुन्छ । यस्ता शब्दहरू वर्गीकरणका लागि पाठ्यक्रमले दिग्दर्शन गरे पनि यहाँ सामान्य बुझाइका लागि चलनचल्तीका खानेकुरा, लगाउने कपडा, शरीरका अङ्ग, वस्तुभाउ, आफ्ना घर वरपर देखिने सामान तथा भाँडाकुँडा, वस्तुका नाम जस्ता शब्दहरू पहिलो तहमा पर्छन् ।

विद्यालय जाँदा, पुस्तक पढ्दा, विशेष ठाउँमा जाँदा देखिने सुनिने शब्द दोस्रो तहमा पर्छन् । जस्तै कालोपाटी/सेतोपाटी, चक, डस्टर, घन्टी, पिरियड, कक्षाकोठा, रजिस्टर, हाजिरी, प्रार्थना, गयल, हाजिर, पाठ, अभ्यास, शिक्षक आदि ।

त्यसैगरी प्राविधिक वा पारिभाषिक शब्दहरू तेस्रो तहका शब्दहरूमा पर्छन् । जस्तै कार्यालय, समय सारिणी, प्रधानाध्यापक, बैठक आदि ।

उल्लिखित तहका शब्द भण्डारसित परिचित र अभ्यस्त भई पढाइ सीपलाई राम्रो बनाउनु पर्ने आशा प्रारम्भिक कक्षाको पठनपाठनमा राखिएको हुन्छ ।

४. **पठन प्रवाह/पढाइ गति –** कुनै पनि कुरा पढेर बुझ्नका लागि पढिने वाक्यका शब्दको अर्थ ज्ञान हुनु जरूरी छ । शब्दको अर्थ ज्ञान भए पनि पढाइको गति, यति मिलेन, शब्द उच्चारण वा पढ्ने तरिका ठीक भएन, पढ्ने गति उपयुक्त भएन, शुद्धसँग शब्द उच्चारण गर्ने सीप भएन भने पढेर पनि बुझिदैन । एक अनुसन्धानले के देखाएको छ भने १२ सेकेन्ड भित्र ७/८ वस्तु हेरिएको छ भने त्यसलाई मस्तिष्कले व्यवस्थित रूपमा सम्झन बुझ्न सक्छ । यो कुरा पढाइका सन्दर्भमा पनि लागू हुन्छ ।

साना नानीहरूका लागि वर्ण, मात्रा, शब्दहरू छुट्टाछुट्टै वस्तु जस्तो लाग्न सक्छन् । अब एक उदाहरण लिऊँ – एउटा वाक्य "हाम्रो खेतमा धान फलेको छ ।" लाई पढ्न कुनै एक विद्यार्थीले २० सेकेन्ड लगायो भने माथिको सिद्धान्तअनुसार उसले सो वाक्यले भन्न खोजेको पूरै अर्थ बुझ्न सक्तैन । मानौं उसले "हाम्रो खेत" पढ्न ८ सेकेन्ड लगायो र "धान फलेको छ" पढ्न १२ सेकेन्ड लगायो भने सो विद्यार्थीलाई सो वाक्य पढी सिद्धाउनासाथ "के फलेको छ ?" भन्ने प्रश्न गर्दा "धान फलेको छ" भन्ने

जवाफ दिन सक्छ । तर "कहाँ फलेको छ ?" भन्ने प्रश्नको जवाफ भने दिन सक्तैन । किनकि उसको मष्तिष्कले अन्तिम १२ सेकेन्डमा पढी सिद्धाएको कुराको अर्थपूर्ण संयोजन गर्छ ।

अर्को एक व्यावहारिक उदाहरणको सन्दर्भ लिऊँ । अलि परिपक्क पढालेखाले पनि अलि गाह्रा शब्दसितको लामो वाक्य पढ्नुपर्दा अर्थ नबुझेर दोहोस्याउनु पर्ने अवस्था आउँछ । यसको कारण पनि गाह्रा शब्दका कारणले पढाइ गति मन्द हुनु नै हो । त्यसैगरी टेलिभिजन पर्दामा घुमुवा समाचार(स्क्रोलिङ न्यूज) पढ्दा सजिला शब्द र सजिला वाक्य भए पढ्दै जान सकिने हुन्छ । गाह्रा शब्द संयोजन भएको समाचार भए पढ्दापढ्दै फुस्किहाल्छ । यसको कारण पनि गाह्रा शब्दले हाम्रो पढाइ गति सुस्ताउनु हो । यी सबै कुराले के देखाउँछ भने राम्रो बुझाइसितको पढाइका लागि पढाइको गति पनि राम्रो चाहिन्छ । निचोडमा के भन्न सकिन्छ भने छिटो पढाइले राम्रो बुझाइ हुन्छ । पाठ्यक्रम विकास केन्द्रले ४५ शुद्ध शब्द प्रति मिनेट पढाइ गति र बुझाइको प्रतिशत पनि ८० प्रतिशत हुनुपर्ने भनी आधार रेखा(बेन्चमार्क) तोकेको छ ।

५. **पठन बोध –** पढाइ तत्त्वको अर्को महत्त्वपूर्ण तत्त्व हो पठन बोध अर्थात् बुझाइ । कुनै कुरा पढ्न त शुद्ध पढियो तर अर्थ बुझिएन, विषयवस्तुले स्पष्ट पार्न खोजेको कुरा बुझिएन भने पढाइको अर्थ हुँदैन । हुन त प्रारम्भिक कक्षामा (कक्षा १–३) पढ्नका लागि सिक्ने (लर्निङ टु रिड) सीपको विकास गर्ने मुख्य उद्देश्य रहेको हुन्छ । कक्षा ३ देखि माथि लागेपछि सिक्नका लागि पढ्ने (रिडिङ टु लर्न) मुख्य उद्देश्य हुन्छ । त्यसैले साना कक्षामा शुद्ध र छिटोछिटो पढ्नु नै महत्त्वपूर्ण हुन्छ । पठन गति र बुझाइको आधार रेखाका बारेमा त माथि उल्लेख गरिसकिएको छ ।

वाक्य वा अनुच्छेद पढ्दा वर्ण, मात्रा शुद्ध र छिटोछिटो पढे पनि गति, यति मिलाएर शब्दलाई ठीकसित उच्चारण गरिएन भने अर्थको अनर्थ हुन्छ । जस्तो "राम बिहानै स्कूल जान्छ" भन्ने वाक्यलाई "रा म बिहा नै स्कू लजान् छ" जसरी पढियो भने वर्ण मात्रा शुद्ध उच्चारण गरेर पनि अर्थ लाग्दैन । शब्द टुक्रिएका हुनाले वाक्य अर्थहीन बन्न पुगेको हो । त्यसैले कसरी शुद्धसित छिटोछिटो र अर्थपूर्ण तरिकाले पढ्ने भन्ने कुरा शिक्षकले बालबालिकाको पढाइको सुरूवाती चरणमा राम्रोसित सन्था दिनुपर्छ । अनि विद्यार्थीले पनि शिक्षकको सन्थालाई ध्यानपूर्वक ग्रहण गरी पछ्याउनुपर्छ ।

सस्वर पठन गर्दा एकै पढाइमा दुई पटक पढे सरह हुन्छ । मौन पठन नभईकन सस्वर पठन हुँदैन । त्यसैले पहिलो पढाइ उच्चारण गर्नका लागि नबोली पढ्दा हुने भयो । दोस्रो पढाइ उच्चारण गरेपछि आफ्नो बोली आफैले सुन्दा हुने भयो । सस्वर पढ्दा यदि गलत उच्चारण गरियो भने आफैले पढेको सुनेर सच्याउने अवसर थुप्रै आउँछन् । त्यसैले सस्वर पठनले पढाइ अभ्यास निकै राम्रो हुने गर्छ । साना कक्षाका बालबालिकालाई सस्वर पढ्न प्रेरित गर्ने र अभिभावकले उनीहरूले पढेको सुनिदिनुपर्ने भन्नुको मुख्य कारण पनि पढाइ सीप सुधार नै हो ।

अन्तमा,सुरूवाती अवस्थामा बालबालिकाले वर्ण, मात्रा ठहस्याएर पढ्ने बानीको विकास गर्ने वातावरण मिलाइदिनुपर्छ । देखेका शब्दहरू बालबालिकाले तस्वीर पढे जसरी पढ्ने गर्न सक्छन् । बालबालिकाको विसङ्केतन क्षमता (डिकोडिङ अविलिटी) बढाउन वा जाँच्न उनीहरूलाई उनीहरूले नदेखेका शब्द दिएर उच्चारण गर्न लगाउँदा राम्रो हुन्छ । यसका लागि बालबालिकालाई उनीहरूले नदेखेका शब्द पढ्न दिने गर्नुपर्छ । कक्षा १– ३ का बालबालिकाको प्रारम्भिक कक्षा पढाइ सीप परीक्षण( अर्ली ग्रेड रिडिङ असेस्मेन्ट– एग्रा) मा बालबालिकाको विसङ्केतन क्षमता मापन गर्नका लागि निरर्थक शब्द उच्चारण उपकार्य राखिएको हुन्छ ।

सानो कक्षामा शुद्धसित छिटोछिटो पढ्ने अभ्यासले बालबालिकाको वाणी विकासका चरणमा हुने क्रियाकलापमा तीव्रता आउँछ । यसले उनीहरूमा नव प्रवर्तनात्मक सोचको विकास हुने, तत्काल उचित प्रतिक्रिया दिने (प्रत्युत्पन्न मति) क्षमताको विकास तथा वृद्धि हुन्छ ।

राष्ट्रिय प्रारम्भिक कक्षा पढाइ कार्यक्रम सञ्चालन भएको पाँच वर्ष पूरा भएको छ । हालसम्म ३० जिल्लामा लागू भइसकेको यो कार्यक्रमको मध्यावधि मूल्याङ्कनले समग्रमा यो कार्यक्रम प्रभावकारी रहेको देखाएको छ । औसतमा परीक्षणको नतिजा सकारात्मक देखिए पनि केही जल्दाबल्दा मुद्दाहरू पनि परीक्षणले औंलाएको छ ।

नेपाली भाषाबाहेकका मातृभाषा हुने बालबालिकाको पढाइ कमजोर देखिएको छ । यो समस्या समाधानका लागि स्थानीय मातृभाषा जान्ने बुझ्ने परीक्षक राखेर परीक्षण गर्ने अभ्यास भएको छ । तर पनि यसमा खासै सुधार आएको छैन । यहाँ मननीय कुरा के छ भने ती नेपाली भाषा मातृभाषा नभएका बालबालिकाले वर्ण उच्चारण, शब्द उच्चारण गर्ने क्रियाकलापमा पनि निकै कमजोर देखिएका छन् । पठन बोध कमजोर हुनु दोस्रो भाषाका कारणले स्वभाविक मान्न सकिन्थ्यो । उच्चारणको हदसम्म त मातृभाषाका कारणले यति ठूलो समस्या नआउनुपर्ने हो । यसले के देखाउँछ भने ती बालबालिकाहरू शिक्षण

क्रियाकलापकै कमजोरीका कारणले समस्यामा छन् । एउटा सानो उदाहरण लिऊँ । रूपन्देही, कपिलवस्तु, नवलपरासी क्षेत्रका बालबालिकाले ङ को उच्चारण अङ्ङ भनी गर्छन् । यस्ता सुधारयोग्य कुरा थुप्रै छन् । यो सुधार शिक्षकबाटै हुनुपर्छ ।

नचिनेका परीक्षकसित साना बालबालिका राम्ररी खुलेर नबोल्ने समस्यालाई सम्बोधन गर्न सकिएको छैन । हाम्रा विद्यालयमा अतिथि शिक्षक प्रयोग गरी पठनपाठन गर्ने प्रचलन छँदैछैन भन्दा पनि हुन्छ । त्यसैले बालबालिकाले पाठनपाठन सन्दर्भमा कुनै नचिनेको व्यक्तिसित खुल्ने संस्कार बन्न सकेको छैन । नचिनेका परीक्षक परीक्षण गर्न जाँदा बालबालिकाहरू जानेको कुरा पनि बोल्न हिच्किचाउँछन् । अहिले विद्यालयमा स्थानीय पाठ्यक्रम निर्माण तथा कार्यान्वयनको सन्दर्भ छ । यसमा स्थानीय विषय विज्ञलाई कक्षामा सहजकर्ताका रूपमा प्रयोग गर्ने गरियो भने बाहिरी व्यक्तिसित दकस मान्ने, मन खोलेर बोल्न गाह्रो हुने समस्या समाधान हुने आशा गर्न सकिन्छ ।

बालबालिकाको दृष्टि क्षमता, श्रवण क्षमता र सुस्त मानसिक क्षमताका हिसाबले उनीहरूमा विभिन्न फरक क्षमता हुन्छ । तर यस राष्ट्रिय कार्यक्रमले यस्ता फरक क्षमता भएका बालबालिकालाई पढ्नका लागि पाठ्यसामग्री उत्पादन तथा विकास र ती फरक क्षमता भएका बालबालिका मैत्री परीक्षणको व्यवस्था गर्न अझै सकिरहेको छैन । अबका दिनमा ती बालबालिकाको पढाइ सीप विकासका लागि सही सम्बोधन हुने गरी पाठ्यसामग्री, शिक्षण क्रियाकलाप र परीक्षणका कार्यक्रमको योजना तर्जुमा गर्नु आवश्यक छ ।

राष्ट्रिय प्रारम्भिक कक्षा पढाइ कार्यक्रमलाई आगामी वर्षहरूमा कसरी लैजाने भनी कार्यक्रम दस्तावेज परिमार्जन गर्ने क्रममा रहेको छ । यस क्रममा राष्ट्रिय प्रारम्भिक कक्षा पढाइ कार्यक्रम( नेशनल अर्ली ग्रेड रिडिङ प्रोग्राम)को नाम परिवर्तन गरी राष्ट्रिय प्रारम्भिक कक्षा सिकाइ कार्यक्रम (नेशनल अर्ली ग्रेड लर्निङ प्रोग्राम) बनाउने तर्क पनि आएका छन् । कुनै पनि कार्यक्रम त्यसको कामले प्रभावकारी हुने हो । त्यसैले विगत पाँच वर्षसम्म स्थापित भइसकेको नामलाई नफेरी कार्यक्रमलाई प्रभावकारी बनाउन दस्तावेजका अन्तरवस्तु परिमार्जन गर्नु उचित हुनेछ । ध्वनि सचेतीकरणलगायतका पठन तत्त्वको कुरा गर्दा, विश्वव्यापी रूपमा स्थापित परीक्षण एग्रा जस्ता परीक्षणले पनि हामीले नाम फेर्दा भोलिका दिनमा हाम्रो कार्यक्रम परिभाषित गर्ने झन्झटले पछ्याइरहनेछ । शब्दको कुनै बेला अर्थ विस्तार हुन्छ, कुनै समयमा अर्थ सङ्कुचन हुन्छ । अहिले इजिआरपीलाई अर्थ विस्तारको हिसाबले बुझी इजिएल्पीतिर नजानु नै श्रेयस्कर हुनेछ ।

ooo

# सातै रङ्ग नभई इन्द्रेनी कहाँ बन्छ र ?

✍ **गणेश ज्ञवाली**
**थोर्गा, गुल्मी**
**हाल : मीनभवन, काठमाडौं (पूर्व सहसचिव, नेपाल सरकार)**

"म कालीगण्डकी नजिकको निवासी । सानो छँदा हाम्रो गाउँबाट कालीको पारितर्फ बस्नेहरूलाई मात्र 'कालीपारे' भन्ने गरेको बुझेको थिएँ । पछि बुझें, उनीहरूले पनि हामीलाई 'कालीपारे' भन्दा रहेछन् । " यी हरफहरू वि.सं.२०६० मा प्रकाशित मेरो आफ्नै निबन्ध-सङ्ग्रह "यो पानी कस्तो बेइमानी"बाट टपक्क टिपेर यहाँ लेखनीलाई अगाडि बढाउने यत्न गर्दैछु ।

हो, 'कालीपारे' । यस शब्दले मलाई यतिखेर वरिष्ठ गायिका तारादेवीले गाएको 'कालीपारे दाइ कति राम्रो, ढाका टोपी काँधैमा गलबन्दी' भन्ने लोकगीतको संझना गराइरहेको छ । साँच्चै त्यो राम्रो दाइ यताबाट देखिने दाइ होला कि उताबाट देखिने दाइ ? मैले छुट्टाउन सकेको छैन । मलाई विश्वास छ, नदीको एकातिरका राम्रा बस्ने र अर्कातिरका नराम्रा बस्ने भन्ने हुँदैन । अथवा यसो भनौं, काली गण्डकी वारिपारि दुबैतिर राम्रै मान्छेको बसोबास छ । यहाँका मान्छे समय-समयमा कालीमा डुबुल्की मारेका छन् । यहाँका मान्छेको सौन्दर्यमा कालीको कुनै भूमिका छ भने सकारात्मक भूमिका मात्रै छ ।

कालीको भूमिकाकै कुरा गर्दा हामी उनीलाई तँ भन्दैनौं, तिमी भन्छौं । त्यहाँ बग्नेलाई पानी भन्दैनौं, जल भन्छौं । कालीको पवित्रतामा हामी विश्वास गर्छौं । शालिग्राम गर्भमा राख्ने एकमात्र नदी हाम्रै काली मात्र हुन् । उनी ठूली छन्, त्यसैले हामी खोला भन्दैनौं, नदी भन्छौं । मलाई थाहा छैन, खोला र नदीमा के पार्थक्य हुन्छ । नदी ठूलो हुन्छ । नदी पवित्र हुन्छ । हिन्दू संस्कारमा मृतकको सत्गत्का लागि नदी रोजिन्छ । नदी गहिरो हुन्छ । पैदल तर्न सकिन्न । बाल्यकालदेखि सुनेको, बुझेको यस्तै-यस्तै हो । यद्यपि पवित्रताका लागि त्यसको मुहानको अस्तित्व र आस्थाले पनि अहं भूमिका खेलेको हुन्छ । अर्थात् खोलाको सापेक्षतामा विशालता र पवित्रताको अर्को नाम नदी हो ।

नदी ठूलो हुन्छ । ठूलो नदी हुन्छ । अरू साना छन् र त ऊ ठूलो छ । साना नभैदिए ठूलो भन्ने नै हुँदैनथ्यो । यिनै सानालाई हामी खोला भन्ने गर्छौं । खोला साना छन् तर यिनले हाम्रो दैनिकीसँग अत्यन्त सान्निध्य राख्दछन् । नदीमा पुग्नुअघि नै उनीहरूमा हाम्रो बलेनी (बलेंसी) को पानी मिसिएको छ । हाम्रो पँधेराको पानी मिसिएको छ । हाम्रै कुलो-कुलेसोको पानी मिसिएको छ । हाम्रै पहाडका पहराबाट फुटेका मूलको पानी मिसिएको छ । अफ यसो भनौं हाम्रो आत्मीयता मिसिएको छ । हामीले हात मुख धोएको पानी पनि यसको स्रोत हो ।

हाम्रै खेत-बारी भिजाउँदै जाने भल पनि यसको स्रोत हो । हामीले खेत-बारीमा जतिसुकै रोक्न खोजौँ, अन्ततः ऊ खोलामा पुगिहाल्छ । उसको लक्ष्य खोलामा मिसिनु हो । खोलाको लक्ष्य नदीमा मिसिनु हो । नदीको लक्ष्य समुद्रमा मिसिनु हो । तर उसले हामीलाई धेरै दिएर जान्छ । उसलाई हामीले हाम्रै वरिपरि जति अल्मल्याउन सक्यौँ उति नै धेरै दिएर जान्छ । खोलाले आफ्नो आकार नलिदै हाम्रो जनजीवनलाई चलायमान बनाएर जान्छ । हाम्रो शरीरलाई पुष्ट र आत्मालाई तृप्त बनाएर मात्र ओह्रालो लाग्छ । अन्ततः ऊ नदीमा मिसिन्छ । नदी समुद्रमा मिसिन्छ । हो, जान त को जाँदैन र आएपछि ? तर ऊ हामीलाई सबै दिएर मात्र जान्छ । यही अकाट्य अर्तीसमेत हामीलाई दिएर जान्छ ।

दिनेलाई हामी दानी भन्छौं । सामान्यतः दानमा स्वार्थ हुँदैन र हुनुहुँदैन पनि । तर कसले के दिन्छ र कसरी दिन्छ, त्यसको आफ्नै चरित्र हुन्छ । ठूलाले ठूलै दिन्छ । सानाले सानै दिन्छ । ठूलाबाट लिन ठूलै समर्पण चाहिन्छ । सानाबाट लिन सानै परिश्रमले पुग्छ । सानाले दिने स-साना कुरा दैनिकीका लागि अति खाँचो पर्ने खालका हुन्छन् । ठूलाले दिने ठूला कुरा खाँचो टार्नेभन्दा माथिल्लो, अझ समुन्नत जीवनका लागि हुन्छन् । हो, ठूला मानिएका नदीले दिने कुरा भिन्न छन् भने साना भनिएका खोलाले दिने कुरा पनि भिन्न छन् । नदीबाट लिन कठिन छ भने खोलाबाट लिन सरल । नदीबाट लिन उसले अपेक्षाकृत अधिकतम साधन, स्रोत र प्रविधिको माग गर्दछ । खोलाबाट लिन उसले स्थानीय स्रोत, साधन, सीप र समर्पणको संयुक्त साथ खोज्दछ । हामीले हाम्रै काली गण्डकी र त्यही सेरो-फेरोका खोलातर्फ नजर घुमाऊँ त, मैले अहिलेसम्म कालीलाई कुल्याएर फाँटमा पुऱ्याएको देखेको छैन । टारीलाई गैरीखेत बनाएको देखेको छैन । हाम्रै काली मात्र किन, सेती, कोशी, कर्णाली कसैलाई पनि कुल्याउने आँट हाम्रो जस्तो निर्वाहमुखी खेती गर्ने किसान समुदायका लागि कल्पनातीत हुन्छ । यिनलाई कुलोले हैन, बाँधले छेक्नुपर्छ । ब्यारेजले रोक्नु पर्छ । अनि यसरी रोकिएको कुलो हुँदैन, नहर हुन्छ । हामीले त यहाँ कुलोको कुरा गर्दैछौं जो खोलाबाट गरामा पुग्छ । त्यहीँ फुल्छ । त्यहीं फल्छ । त्यही फल गलामा पुग्छ र चेहरामा फुल्छ । हो, खोला चेहरामा सानन्द खुल्छ ।

हाम्रोतिर पनि यस्ता फुलाउने, फलाउने र खुलाउने रिडी खोला, खर्ज्याङ खोला, ताल खोला, उल्ली खोला, छल्दी खोला, पनाहा खोला, निस्दी खोला, बडीगाड खोला जस्ता केही ठूला र कैयौं ससाना खोलाहरू निरन्तर प्रवाहित छन् । यहाँनिर एउटा सम्भावित खुल्दुली खोलौं । हाम्रोतिरका नदीभन्दा साना अरू सबै खोलाहरूको नामका पछाडि खोला नै भनिन्छ, जस्तै रिडी खोला, उल्ली खोला, छल्दी खोला बडीगाड खोला आदि, तर बडीगाडलाई गाड भनिसकेपछि खोला भन्नु नपर्ने हो, किनकि हाम्रोभन्दा पश्चिमतिर नदीभन्दा केही साना खोलालाई गाड भन्ने गरिन्छ, जस्तैः नलसिङगाड, रूकुमगाड, नायगाड, सुलीगाड,आदि ।

बडीगाडको मुहान पनि ढोरपाटन जो गुल्मी, बाग्लुङ र रूकुमको सिमाना क्षेत्रमा पर्छ, त्यहाँको पानीढलोबाट यतातिर बग्ने भएकोले नै उताको सिको गर्दै गाड पनि भनिएको हो कि ? सोही पानीढलोबाट उता रूकुमतर्फ बग्ने बडीगाडभन्दा पनि केही ठूलो अर्थात् नदी भएकोले होला सानी भेरी/उत्तरगङ्गा नामले परिचित छ । जे होस्, यी खोलाहरू किसानकै चाहनामा, किसानकै हितमा बगिरहन्छन् जन-जीविकाकालागि अत्यन्त उपयोगी बन्दै, जीवन-प्रवाहका क्रममा सर्वथा सार्थक बन्दै ।

पानीको उपयोग त हाम्रा लागि जुनसुकै रूपमा पनि भएको हुन्छ । बर्खाका भलहरू थोरै समयका लागि आउँछन् र पनि पाखा-पखेरालाई रसिलो र चेहरालाई हँसिलो पारेर जान्छन् । यस्ता भल-भेलहरू खोलामा समाहित हुन्छन् । खोलाहरू नदीमा निर्बाध मिसिन्छन् । नदीले खोलाहरूलाई आफूमा समाहित हुनबाट अस्वीकार गर्दैन । नदीको विशालतालाई आकार दिन खोलाहरूले नै सघाउँछन् । स-साना खोलाहरूलाई अँगालोमा समाहित गरेर नै त नदी ठूलो भएको हो । सम्भवतः त्यसैले बढी सम्पूज्य भएको हो कि ? कुवा यथास्थितिको चिनारी हो भने बग्नु अग्रगतिको । भल-भेल-कुलो नहर-नदी सबै सधै गतिशील हुन्छन् । ऊर्जाको अर्को नाम गतिशीलता हो । गतिशीलताले सधै नयाँ क्षितिज खोजिरहेको हुन्छ, गतिशील मान्छे विचार, चिन्तन, सोँच र कर्मले सधै ऊर्जावान् रहेझैँ । हो, यसरी विशालताको र गतिशीलताको चिनारी पाएको नदीले हामीलाई दिने कुरा पनि आकारअनुरूप ठूलै हुन्छ । ठूलाले ठूलै कुरा दिन्छ । ठूलो कुरा लिन ठूलै सङ्कल्प गर्नुपर्छ मन, वचन र कर्मले । ठूलै समर्पण गर्नुपर्छ बुद्धिको, विवेकको र बर्कतको । यसैबाट उत्पादित विद्युत्का प्रतिफल त हुन् अँधेरोमा मझेरी र आँगन उजेलिनु, खोलाको पानी डाँडाकाँडा पुग्नु, दिनभरको काम छिनभरमा सकिनु । यसैका प्राप्ति त हुन् कारखानाको माध्यमले हाम्रो समुन्नत जीवनका लागि खाँचो पर्ने सबै कुरा ठूलै परिमाणमा उपलब्ध हुनु । यसरी हेर्दा यसो भन्नु उचित होला, नदीले बिजुलीको माध्यमबाट हाम्रो समुन्नत र अझ सुखी जीवनका लागि ज्योत्स्ना छरिरहेको हुन्छ । यिनै कुराका प्रतिबिम्बहरू हाम्रो समाजमा पनि देखिन्छन् । नदी र खोलाको चरित्रको अनुसरण हाम्रै जीवन जगत्मा पनि बग्रेल्ती भेटिन्छन् ।

यस पृष्ठभूमिमा पनि ठूलासँग हुने सानोको सान्निध्यलाई छुटाउन सकिदैन । ठूला कारखानाले कपडा बनाउँछन् तर त्यहाँ प्रयुक्त धागो किसानकै खेतबारीमा र उनीहरूकै श्रमबाट उब्जने कपासबाट नै त बन्ने हो । त्यही कपडालाई पनि हाम्रो रोजाइ र आकारअनुसार सिलाउने पनि हाम्रै गाउँको सूचीकारले नै त हो । अथवा यसो भनौँ, कपडा ठूलो आकार हो, जसलाई कारखानाले बनाउँछ । हामीले लगाउने लुगा साना हुन्, जसलाई सूचीकारले हाम्रो रुचि र आकार अनुसार शिरका लागि होस् कि शरीरका लागि, पाउका लागि होस् कि पञ्जाका

लागि, वरका लागि होस् कि वधूका लागि, वृद्धका लागि होस् कि बालकका लागि त्यस्तै त्यस्तै स्वरूपमा बनाइदिन्छन् । घामको रापबाट शीतलता पाउन होस् वा चिसोको सिरेटोबाट न्यानो पाउन होस् यिनै स्थानीय सूचीकारको आत्मीय सीपले नै हामी सबैको मन जितेको हुन्छ ।

खालि पाइतालाले हिड्नु भनेको जाडोमा चिसोले चरचरी खुट्टा फुटाउने निम्ता हो भने गर्मीमा तातोले फोका पार्ने । यसको प्रतिरक्षामा प्रयुक्त हुने परम्परागत कच्चा पदार्थ मृतपशुको छाला हो, जो जुत्ताको व्यवसाय गर्नेका लागि खाँचो पर्छ । अरू कामका लागि आवश्यक नहुने एवं वातावरण नै प्रदूषित बनाउने तर जुत्ताका लागि चाहिने छालाबाटै जुत्ता बनाउने काम हुन्थ्यो र त्यस पेशाको परम्परागत दक्षता चर्मकारमा हुन्थ्यो । यद्यपि अहिले त्यो समय विगत भइसकेको छ । यसरी कच्चा पदार्थमा पनि विविधता आएको छ भने पेशाकर्मीमा पनि ।

फलामकै कुरा गर्दा पनि पहाड-पहराबाट निकालिएको कच्चा पदार्थलाई जीवनोपयोगी फलाम बनाउन त्यही नदीबाट निकालिएको विद्युत्-ऊर्जा नभई हुँदैन । तर त्यो फलाम हाम्रोलागि भने कच्चा पदार्थमात्र हो । त्यसलाई हाम्रो खाँचोअनुसारको आकार दिन त हाम्रै घर-आँगनको आरन र बलिया पाखुरा नै चाहिन्छ । फाली होस् वा फरूवा, हँसिया होस् वा हाक्सो, चुलेसी होस् वा चिम्टा, करौँती होस् वा कोदालो हाम्रै गाउँका विश्वकर्माले बनाउँछन् र पुनः धार लगाउन परे अर्जाप्छन् पनि । उनीहरूको सीप विना फलामको कुनै औजार सम्भव नै हुँदैन । अथवा यसो भनौं गृहस्थीको दैनिकी ठप्प हुन्छ ।

सुनका गहनाले छपक्क सिँगारिएर सुन्दरताको अनुभूति गराउन स्वर्णकारको कति योगदान हुन्छ, भनिरहन परोइन । यद्यपि सुन्दरताको बोक्रो पक्ष र गुदी पक्षको गरिमाका सम्बन्धमा आ-आफ्नै तर्क रहेका छन् र यसमा बेग्लै बहस हुन सक्छ । जे होस् सुनलाई शिरफूल बनाउने कि पाउजू, गलामा सजाउन कि हातमा लगाउन, औँलाको औँठी कि कम्मरको कटी, यी सबै स्वर्णकारका मिहिन शिल्पका परिणति हुन् भन्ने कुरामा द्विविधा छैन । यसमा कलात्मक सौँच भएका त्यस्ता स्वर्णकारको कलाकृति नै गहनाका रूपमा प्रकटीकृत भएको हुन्छ । यस्ता कलाकृतिका आकार-प्रकार र विविधता हेर्न तीज जस्ता चाडपर्वमा चेलीबेटीको जमघट भएको ठाउँमा गए पुग्छ । तर यसको प्राप्तिको कुरा भने केही भिन्न छ । सुन जस्तो बहुमूल्य धातुको चर्चा गर्दा सुलभता र दुर्लभताको कुरासँग जोडिन पुगिंदो रहेछ ।

सुलभता र दुर्लभताकै तराजुले तौलिने र तदनुरूप व्यवहार गर्ने साबिकको सामाजिक चाल-चलनको पृष्ठभूमिलाई बिर्सनु एकाङ्गी हुन सक्छ । माथि उल्लेख गरिएका समाजलाई दैनन्दिन नभई नहुने वस्तुहरू–ती औजार हुन् वा गहना, कपडा हुन् वा जुत्ता–बनाउने काम गर्ने ती पेशाकर्मीलाई तत्कालीन समाजले हेर्ने

दृष्टिकोण सङ्कीर्ण र त्याज्य रहेको कुराको पुष्ट्याइँ अहिले ती पेशामा अन्य समुदायहरूको बढ्दो आकर्षणले नै दिइरहेको छ । सम्भवतः मानवीय स्वभाव नै यस्तो बनेछ कि सजिलै पाइने र मिहिनेतपूर्वक पाइने वस्तुका बीच विभेद हुँदोरहेछ । सस्तो र महँगोको पनि कुरा उठ्दोरहेछ । कथित ठूलो र सानोबीच गरिने व्यवहारको पनि हेक्का हुँदोरहेछ । शिक्षित-अशिक्षित, धनी-गरीबजस्ता कुराले पनि ध्यान खिच्दोरहेछ । सम्मानपूर्वक र सामान्यका रूपमा ग्रहण गरिने चरित्र पनि देखिंदोरहेछ ।

प्राकृतिक कुराहरू त्यसका आकार/स्वरूपले साना-ठूला होलान् तर मान्छे सानो-ठूलो सीपले हुन्छ । जुनबेला जस्तो सीपको खाँचो पर्छ त्यसबेला त्यसैको महत्ता बढी हुन्छ र त्यो ठूलो मानिन्छ । घन-छिनोले पिट्दैमा कहाँ सबैले ढुङ्गालाई द्यौता बनाउन सक्छन् र ? पानीको भेलले बगरमा ढुङ्गा गुडाउँदैमा कहाँ सबै नदीले शालिग्राम बनाउन सक्छन् र ? शालिग्राम बनाउन हाम्रै काली गण्डकी चाहिएझैँ मान्छेलाई, समाजलाई, सामाजिक संरचनालाई हरेक क्षण कुनै न कुनै शिल्पकारको, ज्ञानीको, विज्ञानीको, परिश्रमीको खाँचो परिरहेकै हुन्छ । त्यतिबेला त्यो ठूलो मानिन्छ जतिबेला उसको खाँचो पर्छ । अथवा यसो भनौं, समाजमा सबै निर्माण/निर्माता सम्पूज्य छन् र समयले त्यसलाई स्वयं बोलाउँछ–आखिर धर्तीका सबै संरचना केही न केही उपकार नगरी कहाँ त्यसै बिलाएका छन् र ? हाम्रो अज्ञानले पहिचानमा अन्योल देखिएको मात्र न हो, जब व्यावहारिक ज्ञानका ढोकाहरू उघ्रिंदै जान्छन् ती अज्ञानका अँधेरा स्वभावहरू क्रमशः नासिदै जान्छन् ।

हो, स्वभाव । हामी मान्छेका स्वभाव विविध हुँदा रहेछन् र त यिनै कुराको प्रतिवम्ब हाम्रो समाजमा देखिन्छ । नदी ठूलो हुन्छ, त्यसैले पूजा गर्छौं । 'यसले कुनै ठूलै अनिष्ट (धार्मिक/प्राकृतिक) गर्छ कि' भन्ने त्रासले । सुन दुर्लभ हुन्छ, त्यसैले बढी मूल्यमा किन्छौँ र सङ्ग्रह गर्न बढी उत्प्रेरित हुन्छौँ,'पछि पाइन्न कि' भन्ने पिरलोले । आफूभन्दा ठूलालाई केही दिनपरे ठूलै/धेरै दिन्छौँ, 'यति सानो/यति थोरै कसरी दिनु'को अप्ठेरोले । यी आँखाहरू पनि छोपिएका कुरा हेर्न अझ बढी लालायित हुन्छन्, उत्सुकताको चिमोट्याइले । किन हामीलाई दुर्लभ तर कम उपयोगी कुरामा मोह ? किन दैनन्दिन चाहिनेभन्दा नभए पनि हुने कुरामा मोह ? किन सधै चाहिने फलामभन्दा कहिलेकाहीं चाहिने/नभए पनि हुने सुनमा मोह ? हाम्रा आफ्नै वाद्ययन्त्रहरू मुर्चुङ्गा बनाउने हुन् वा मादल, सारङ्गी बनाउने हुन् वा बजाउने,सुखमा रमाउन होस् वा दुःखमा मन बहलाउन सधै क्रियाशील रहनेहरू,उनीहरू किन सुख-दुःखका साथीहरू बन्न सकेनन् ? सधै चाहिने ती व्यक्तिहरू किन सम-व्यवहारका पात्र मानिन सकेनन् ? परम्परागत श्रम, सीप र कला हाम्रा नास्न नहुने सम्पदा हुन् । यस्ता गौरव गर्नुपर्ने कार्यमा पनि किन कञ्जुस्याईं देखाइन्छ ? सायद हामीले बुझेनौं कि

जतिखेर पनि हामीलाई चाहिने तिनको मूल्य ? हामीहरूमा किन आएन सानाहरूले नै बनाउने हो ठूलालाई भन्ने अन्तश्चेतना ? हाम्रा परापूर्वकालदेखि प्रचलित रहन-सहन, चाल-चलन, साँस्कृतिक परम्परा, चाड-पर्व आदिका विविधताभित्र रहेका सुकिला पक्षहरूको खोज नगरी किन निन्दा/प्रशंसामा मात्रै हामी समय बिताउँछौं ? एकै प्रजातिका फूलहरू भएको बगैंचाभन्दा विविध प्रजातिका ढकमक्क फूलहरू भएको बगैंचा अझ सुन्दरतम हुँदैन र ?किन हुन सकेन समाज पनि इन्द्रेनी जस्तै हो भन्ने आत्मबोध ? साना-ठूला चाहे प्राकृतिक होउन् वा भौतिक वा मानवीय सबैको आ-आफ्नै अस्तित्व छ, योगदान छ ।

ooo

# शहीदको सम्झना

✍ **शिला पन्त**
**कालोपुल, सिफल, काठमाडौं**

शहीदका सपनाहरूले अझै पूर्णता पाएका छैनन्
हाम्रा गाउँ घरका भित्ताहरूमा
शहीदका रगतका छिर्काहरू
अझै सुकेका छैनन्
हाम्रो देशका कुना कन्दरामा
जुन गति लिनुपर्थ्यो लिन सकेको छैन
प्रजातन्त्रका लागि लड्ने योद्धाहरूले
अझ शान्तिले विश्राम लिन पाएका छैनन्

हामीले इतिहासमा पढेका छौं
आफ्नो ज्यानको बाजी लगाएर
कसै सामु शिर नझुकाई
देशका लागि समर्पित भएका थिए ।
नबिर्स हे नेपाल आमाका सपूतहरू
प्रत्येक गाँस, सास र मुटुको चालमा
रगत बगेको छ शहीदको
सपना सजेको छ शहीदको ।

हे नेपाली हो सम्झ है
शहीदको त्याग र बलिदान त्यो
प्रजातन्त्रको लागि लड्ने
शुक्रराज, धर्मभक्त, गंगालाल र दशरथ चन्द त्यो ।

ooo

# महिला राज्य

✍ **कृष्ण बजगाईं**
**हाल : बेलायत**

एनजिओको प्रायोजन र संभ्रान्त जस्ता देखिने कट्टरपन्थी फेमिनिष्टहरूको अगुवाइमा तारे होटेलमा महिला भेलाको आयोजना गरिएको थियो । त्यस भेलामा महिलालाई पुरुषले मात्र होइन राज्यले समेत गरेको विभेदका बारेमा बहस चल्यो । महिला हिंसा र बलात्कारदेखि आफ्नो शरीर आफ्नो मर्जी गर्न नपाएको विषयमा कुरा उठ्यो ।

उक्त भेलाले अलग्गै महिला राज्यको माग गर्ने निर्णय गर्‍यो । त्यस राज्यमा पुरुषहरूलाई प्रवेश निषेध हुने र त्यहाँ जानु पर्ने भए तिनले अनिवार्य भिसा लिनु पर्ने कुराले सहभागी महिलाहरू प्रभावित भए ।

महिला शासित राज्यमा राष्ट्रप्रमुख, सेना, प्रहरी, न्यायधीशलगायत शतप्रतिशत सबै पदमा महिला मात्र हुने हुनाले विभेद नहुने कुरामा सहभागीहरू विश्वस्त देखिए । पुरुषहरू नभएको राज्यमा महिलाहरूलाई पूर्ण स्वतन्त्रता प्राप्त हुने, पुरुषको शासनबाट मुक्ति पाइने र घरेलु हिंसा, बलात्कार जस्ता यातना भोग्नु नपर्ने कुरा सुन्ने बित्तिकै पुरुषबाट पीडित महिलाहरूले निकै बेर थपडी बजाएर खुसी व्यक्त गरे ।

'कुरा त ठीकै हो तर हामीलाई आमा बन्न मन लाग्ला । आमा भएपछि मात्र पूर्ण नारी भइन्छ । त्यसका लागि फेरि पुरुषकै आवश्यकता पर्दछ ।' एउटी महिलाले गम्भीर प्रश्न उठाइन् । आयोजकमध्येकी एक फेमिनिष्टले भनिन्-'हाम्रो महिला राज्य संसारमै नभएको उत्तरआधुनिक राज्य हुनेछ । यस राज्यमा आमा बन्न चाहने महिलाको स्वतन्त्रतालाई सम्मान गरिनेछ । त्यसका लागि पुरुषसँग संसर्ग नगरी बच्चा जन्माउन सकिने सुविधा उपलब्ध गराइनेछ ।'

'कसरी ?' सहभागी महिलाले सोधिन् । 'त्यसका लागि उन्नत जातको वीर्य आयात गरिनेछ । त्यसलाई प्रविधिको माध्यमले सिधै महिलाको पाठेघरमा राखिनेछ । र बच्चा हुनेछ । मैले पनि पुरुषसँग संसर्ग नगरी त्यसरी नै बच्चा जन्माएकी हुँ । ' ती फेमिनिष्टले प्रष्ट्याइन् । उनको कुरा सहभागी महिलाहरूले पत्याए । फेरि तालीको गडगडाहट सुनियो । 'छोरी जन्मे त ठीकै छ, तर छोरा जन्मियो भने नि ?' सहभागी महिलाले अर्को प्रश्न गरिन् ।

महिलाको शासन चलिरहेको त्यस कार्यक्रम हलमा तुरून्तै सन्नाटाको शासन सुरू भयो ।

ooo

# जीवनका क्षणमा

✍ **नारद गौतम**
**बुटवल, रूपन्देही**

विद्या सीप कला र उच्च प्रतिभा हुन् लोकसम्मानित ।
यिन्कै साधक छन् अगाडि दुनियाँ यस्मै छ आनन्दित ।।
यी चारै गुण मानवीय गहना गर्ने गरौं धारण ।
राखेमा क्षमता भइन्न पशु झैं बन्छौं असाधारण ।।

***

वाणीको महिमा हुँदैन नि जहाँ अस्तित्व नै छैन नि ।
बोलेमा पनि खेर जान्छ र कुरा राखिन्न वास्ता पनि ।।
यस्तामा बरू मौन बस्नु छ निको व्यर्थै नखोलौं मुख ।
लेखो छैन जहाँ त्यहाँ चुप रहे पर्दैन चिन्ता दुख ।।

***

गर्दा काम भनेसमान नहुँदा उठ्दिन्छ तातो रिस ।
ज्वालो बल्छ दिमागभित्र कणमा मानौं जल्यो मार्चिस ।।
त्यो बेला त विवेक काम नदिने बन्दिन्छ झन् संशय ।
सेलाओस् र दिमाग चिन्तन गरौं मिल्छन् सबै निर्णय ।।

***

जान्नेका नजिकै बसी गफ सुने जानिन्छ कैयौं कुरो ।
गर्दा प्रश्न मिलेर उत्तर सही पाइन्छ त्यस्को चुरो ।।
तिन्को संगतबाट मिल्छ गुण नै सल्कन्छ आफूतिर ।
ज्ञानीका उपदेशले हृदयका घट्छन् नि कैयौं पिर ।।

***

रक्सी जाँड र तास धूर्त रिपु हुन् यिन्ले खसाल्छन् तल ।
यिन्को सेवनले गिरी इजतमा बन्छौं सधै दुर्बल ।।
जाती हुन्छ नफस्नु यी कुलतमा फस्दा चुक्यो जीवन ।
पार्दिन्छन् मति नष्टभ्रष्ट र सबै सिद्धिन्छ आफ्नो धन ।।

***

श्रोता छैन जहाँ त्यहाँ सुबुझले के गर्छ वक्ता बनी ?
बुझ्ने मानिसको अभाव छ भने व्यर्थै छ बोल्नै पनि ।।
छन् जिज्ञासु र बुझ्नमा छ क्षमता त्यस्तो अवस्था परे ।
बोलेको पनि सार हुन्छ नजुटे औँठे नखोल्ने गरे ।।

***

ooo

**पुस्तकालय परिचय**

# दाङ चौघेरमा ऐतिहासिक पुस्तकालय

**जुनसुकै दुःखमा हवोस् सुखमा, श्रीधर्मकै नाम जपी**
**लोककै खातिरमा कलम चलिरह्यो, कष्टै अनेकौं खपी**
**झ्यालखानामा बस्दा, हिमाल चढ्दा, घुम्दा तराईमहाँ**
**नेपालको नदी तीर्थ खोजी रचना, गर्नुभएको यहाँ ।**

भनिन्छ अन्धकारले नै प्रकाश निम्त्याउँछ । समस्याले नै समाधान ल्याउँछ, विपत्तिले नै सम्पतिको द्वारा खोलिदिन्छ । यस्तै विडम्बनाका र पीडाका यी क्षणहरूमै योगी नरहरीनाथको अवतरण भएको थियो ।




मध्यपश्चिमाञ्चल क्षेत्र कालीकोट जिल्ला लालु गाउँमा सम्वत १९७१ साल फागुन १७ गते योगी नरहरिनाथको जन्म भएको थियो । ५ वर्षको उमेरमा नै उहाँमा साधुको भाव झल्किन्थ्यो-जानकारहरू बताउँछन् । एक समयमा चन्दननाथ मन्दिरमा शिदर्शनी योगी छिप्रानाथसँग कान चिरा गुरु मन्त्र लिई योग मार्गको शिक्षा-दीक्षा लिएर थप अध्ययनका लागि भारतको लुधियानामा अवस्थित सरस्वती संस्कृत कलेजमा भर्ना हुनुभएको थियो । छात्रावासमा रही रात्रिमा अध्ययन गर्नुपर्दा बत्तीको अभावमा परी रात्रीमा आफ्नो प्रकाश छाड्ने जीव जुनकिरी किराहरू छोपेर आँखीझ्यालजस्तो कपडाभित्र जुनकिरी किरा राखेर खुलारूपले बाँधी अग्लो ठाउँमा झुण्डाई उनैको ज्योतिबाट आएको प्रकाशमा आफ्नो पाठ

अध्ययन गरेर भोलिको समस्याको हल गर्नुभएको कथन छ । बेलाबेलामा उहाँले गीत गुन्गुनाउनुहुन्थ्यो रे -

**राजा खान्छन् पान्सुपारी जोगी खान्छन् गाँजा**
**घरबारीवाला सब घर जाउला, मै वैरागी काँ जा ॥**

संस्कृत केलजबाट स्नातक (शास्त्री)को उपाधि प्राप्त गरी गुरुबाट आज्ञा लिई काठमाडौंमा अवस्थित श्री गोरक्षपात्र देवता सिद्धरत्ननाथ मठमा गहन आसनग्रहण गर्नुभएछ ।

**ऋषि कृषि मिलि गर्छन् यज्ञ राम्रा घरमा**
**सकल कृषि विकासै हुन्छ सारा गरामा**
**श्रुति र सुरभि पाली पारी पियूष वर्षा**
**विनिमय महिमाले हुन्छ पृथ्वी सहर्षा ॥**

यस्तो परिश्रमी देशभक्त राष्ट्रवादी उहाँ आजीवन ब्रह्मचर्यवृत्त महान् त्यागी योगनिष्ठ योगी हुनुहुन्थ्यो । वि.सं. २०५९ चैत्र १३ गते योगाश्रम गोरक्षनाथ मठ मृगस्थलीमा ब्रह्मयोग समाधिस्त हुनुभयो । दाङ चौधेरा स्थित यस गोरक्ष रत्ननाथ पुस्तकालयमा योगी नरहरिनाथका सयौं मार्गका अनेकौं पुस्तकहरू छन् । यस पुस्तकालयको स्थापना सर्वप्रथम २०२३ साल वैशाखमा राष्ट्रगुरु योगी नरहरिनाथको नेतृत्वमा भएको थियो । योगी नरहरिनाथले इतिहास, पुरातत्त्व, योग, आयुर्वेद, भाषा आदिको विषयमा विभिन्न स्थानबाट प्राप्त गर्नुभएको ज्ञानलाई अभिलेखीकरण गर्ने क्रममा यो पुस्तकालयको निर्माण गर्नुभएको थियो । उहाँले नेपालमा यस्तै पुस्तकालय मृगस्थली काठमाडौंमा पनि स्थापना गर्नुभएको छ । शुरूवाती अवस्थादेखि नै यो पुस्तकालय सकुशल रहेको देखिन्छ । यहाँलाई सहयोग गर्ने चित्रकार योगी प्रभातनाथको पनि यस पुस्तकालय र नरहरिनाथले सम्पादन गर्नुभएका ग्रन्थहरूमा विभिन्न चित्रहरूको देन छ । योगीले सम्पादन, प्रकाशन, अनुवाद रचना गर्नुभएका ग्रन्थ धेरै छन् । विविध कारणवश जीर्ण बन्दै गएको अवस्थमा रहेको यस पुस्तकालयको पुनःनिर्माण गरी २०७६ माघ १६ गते वसन्त पञ्चमीको अवसर पारेर पुनः सञ्चालनमा आएको छ । यस पुस्तकालयमा नेपालको भौगोलिक, राजनीतिक, धार्मिक पक्षको इतिहास बोकेका ग्रन्थहरू धेरै मात्रामा रहेका छन् । विशेष गरी गोरक्षनाथ परम्पराका मूल ग्रन्थहरू यहाँ उपलब्ध छन् । नेपाल र भारतमा पनि प्राप्त गर्न नसकिएका नाथ योगका ग्रन्थ सम्पूण मानवमात्रको लागि उपलब्ध भएका छन् । उहाँले गोरक्षनाथ ग्रन्थमाला प्रकाशन गर्नुभएका पाँच सय ७२ पुस्तकमध्येका धेरै पुस्तहरू यहाँ उपलब्ध छन् । तर दुःखको विषय यो छ कि नेपालमा गोरक्षनाथ परम्पराका ग्रन्थहरू पढ्ने

पढाउने परिपाटी बसेको छैन । धेरैलाई जानकारी पनि छैन कि गोरक्षनाथ भनेको के हो ? र नेपालमा गोरक्षनाथको देन के छ भनेर ? गोरक्षनाथलाई अतिरञ्जित बनाईकन उहाँद्वारा रचना गरिएका सिद्धसिद्धान्त पद्धति, गोरक्ष पद्धति, नाथ पद्धति, योगबीज, योग सरावली, हठयोग प्रदीपिका गोरक्षसंहिता, स्वात्मयोग प्रदीप, नाथ सिद्धान्त डिण्डिय, शिवयोग दर्पण, गोरक्षयोग मञ्जरी, गोरक्ष उपनिषद्, सूक्ष्मवेद, गोरक्षवाणि जस्ता ग्रन्थको अध्ययन गरी



गुरुपद्धतिअनुसार व्यवहारमा उतार्न सकिने भएमा हामी सबैको आध्यात्म र भौतिक जगत्को मार्ग अत्यन्तै फराकिलो बन्नेछ । इतिहासको विभिन्न कालखण्डमा यस राष्ट्रको राजनीति र धर्मनीति दुबै कुरालाई जोगाउने कार्य गोरक्षनाथले गर्नुभएको छ । संसारमा ९९ कोटि राजालाई नाथयोग दर्शनको दीक्षाद्वारा दीक्षित गर्ने कार्य गरी जगतका निम्ति कल्याणकारी कार्य पनि गोरक्षनाथले गर्नुभएको छ । शिवगोरक्षनाथका कृपापात्र रत्न परीक्षित पनि नाथयोग दीक्षा प्राप्त गरी सिद्ध रत्ननाथका रूपमा जगत्मा प्रख्यात हुनुभएको छ । गोरक्षनाथको अमृतमय योगदर्शनलाई साहित्यमा अनुसरण गर्न सकेको खण्डमा आगम र निगम दुबै मार्गको सत्यता उद्घाटित हुनेछ । यस गोरक्षरत्न पुस्तकालयलाई नाथ विद्या अनुसन्धान केन्द्रको रूपमा स्थापित गर्दै लैजाने, त्यसका लागि नाथयोग परम्पराका सम्पूर्ण ग्रन्थ यहाँ उपलब्ध गराउने हाम्रो

योजना पनि छ । यस पुस्तकालयलाई वर्तमान समयमा प्राप्त भएका आधुनिक स्रोत र साधनको प्रयोग गरी यहाँ प्राप्त ज्ञानलाई संसारभरि फैलाउने कार्य पनि गोरक्षरत्न पुस्तकालयले अवश्य गर्नेछ । नाथयोग परम्पराका ग्रन्थ बाहिर बजारमा अत्यन्तै न्यून पाइन्छन् । र लगभग नपाउने जस्तै हुन् भन्दा फरक नपर्ला । यो स्थितिलाई बुझेर बाहिर बजारसम्म यसको सहजीकरण गराउने कार्यलाई अगाडि बढाउने पनि हाम्रो योजना छ । हाम्रा नेपाली लोकसाहित्य अध्ययन गर्ने परिपाटी पनि अगाडि बढाउने कार्य गर्नु अहिलेको अपरिहार्य आवश्यकता भएको छ । हाल यस पुस्तकालयमा नेपाली, संस्कृत, हिन्दी, अंग्रेजी, बंगाली भाषामा लेखिएका ग्रन्थहरू उपलब्ध छन् । विशेष गरी वैदिक सनातन पद्धतिको ज्ञान, उपासना, कर्मकाण्ड, प्रयोगात्मक पक्षको विषयमा बढी प्रकाश पारिएका पुराना ग्रन्थहरू यहाँ रहेका छन् । हाम्रो राष्ट्र र राष्ट्रियतासँग सरोकार राख्ने विषयका ग्रन्थहरू पनि यहाँ अध्ययन गर्न पाइन्छ । अहिले यस पुस्तकालयमा इतिहास प्रकाश भाग १, २, ३, सिद्धिसिद्धान्त पद्धति, गोरक्ष योग मञ्जरी, योग सरावली, स्वात्मयोग प्रदिप, नवनाथ चौरासी, सिद्धनाथ महिमा, श्रीनाथ नित्यकर्म, चर्पटशतकम्, सिद्ध चरित्र, हिमाली लोकसाहित्य, लक्ष्मी लोकोक्ति संग्रह, कर्मवीर परिचय, दिव्य उपदेश, कोटिहोम हमरीका एक दार्शनिक, चिन्तन जस्ता तीनसय ३७ प्रकारका ग्रन्थहरू यहाँ अध्ययनका लागि उपलब्ध छन् । निश्चित रूपमा यहाँ अध्ययनका लागि पाल्नसक्नुहुनेछ । यो पुस्तकालय २०७६ माघ १६ गते वसन्त पञ्चमीको अवसर पारेर पुनः सञ्चालमा आएको छ । वरिष्ठ पत्रकार युवराज घिमिरे र मठका मठाधीश देवनाथ योगीले पानसमा दीप प्रज्ज्वलन गरी पुस्तकालयको शुभारम्भ गर्नुभएको थियो । कार्यक्रममा गोरक्षरत्न पुस्तकालय ऐतिहासिक दृष्टिले महत्त्वपूर्ण भएकोले यसको जगेर्ना र विकासमा ध्यान दिनुपर्ने जस्ता महत्त्वपूर्ण धारणा राख्नेहरूमा पत्रकार युवराज घिमिरे, प्रदेश सांसद अमरबहादुर डाँगी, घोराही–१७ वडा अध्यक्ष खुशीराम चौधरी, सर्वोदय पुस्तकालय घोराहीका अध्यक्ष सुशील गौतम, संस्कृतिविद् डा. गोविन्द आचार्य, नयाँ युगबोध दैनिकका सम्पादक प्रताप रेग्मी हुनुहुन्थ्यो । जीर्ण अवस्थामा रहेको पुस्तकालयको लागि मर्मत सम्भारमा दश लाख बढी खर्च भएको रत्नमठका लेखापाल हीरानाथ योगीले स्वागत कार्यक्रममा जानकारी गराउनुभएको थियो । मठका भण्डारी लक्ष्मीनाथ योगी हितैषीले कविता वाचन गर्नुभएको थियो । गोरखनाथ वैदिक गुरुकुलका सचिव तोमनाथ योगीले सहजीकरण र वैदिक वटुकहरूले स्वस्ति वाचन गरेका थिए ।

**– शंकर योगी**

**(पुस्तकालय व्यवस्थापक), घोराही, दाङ**

ooo

# गुल्मीका नगर/गाउँपालिकाहरूलाई अनुरोध

विगत ४७ वर्षदेखि किरण पुस्तकालय, गुल्मीबाट प्रकाशनमा आइरहेको **'हाम्रो पुरुषार्थ'** राजधानी बाहिरबाट संस्थागत रूपमा अद्यपर्यन्त निस्किरहेको एक मात्र पुरानो साहित्यिक पत्रिका हो । प्रेस काउन्सिल नेपालबाट यो पत्रिका राष्ट्रिय स्तरको 'क' वर्गको साहित्यिक त्रैमासिक पत्रिकाको रूपमा वर्गीकृत भएको छ । यो पत्रिका नेपालका सातै प्रदेश, चौधै अञ्चल र सतहत्तरै जिल्लाका साथै विदेशमा पनि पुग्दछ । यसका आजीवन र स्थायी गरी एक हजारभन्दा बढी ग्राहकहरू छन् । इ-मेल, इन्टरनेट र वेभसाइटको अत्याधुनिक सञ्चार सञ्जालमा जोडिएको यस पत्रिकामा जहाँबाट पनि लेख -रचना पठाउन सकिने र संसारको जुनसुकै ठाउँमा बसेर पनि वेभसाइट खोलेर पढ्न सकिन्छ ।

'हाम्रो पुरुषार्थ'का विभिन्न विशेषाङ्कहरू प्रकाशित भएका छन् । विश्वविद्यालयमा स्नातकोत्तर तहमा अध्ययन गर्ने विद्यार्थीहरूले यस पत्रिकाका विविध विषयमा शोधपत्रहरू लेखेका छन् । यसलाई भविष्यमा अझ बढी अनुसन्धानमूलक साहित्यिक पत्रिका बनाउँदै लैजाने पुस्तकालयको लक्ष्य रहेको छ ।

वर्तमान समयमा नेपालको परिवर्तित संरचना र शासकीय स्वरूपअनुसार स्थानीय सरकार गठन भएको ३ वर्ष बित्न थालेको छ । नेपालभरि ७५३ स्थानीय सरकारको रूपमा महानगरपालिका, उपमहानगरपालिका, नगरपालिका र गाउँपालिकाहरू रहेका छन् । तीमध्ये गुल्मी जिल्लामा २ वटा नगरपालिका र १० वटा गाउँपालिका गरी जम्मा बाह्रवटा स्थानीय निकायहरू रहेका छन् । वि.सं. २०७७ सालदेखि हामीले **'हाम्रो पुरुषार्थ'**का प्रत्येक अङ्कमा स्थानीय निकायहरूको परिचय क्रमशः छाप्दै जाने योजना बनाएका छौं । यसका लागि हामीले स्थानीय नगर/गाउँपलिकाहरूको सहयोगको अपेक्षा गरेका छौं । पालिकाहरूको सहयोगविना हाम्रो अपेक्षाले पूर्णता प्राप्त गर्न सक्दैन । त्यसका लागि नगर र गाउँपालिकाहरूबाट हामीले दुई प्रकारको सहयोगको आशा राखेका छौं । एउटा प्रत्येक स्थानीय निकायहरूले आफ्नो नगर/गाउँको सबै प्रकारको सूचना या भिलेज प्रोफाइल किरण पुस्तकालयलाई उपलब्ध गराउने । दोस्रो उक्त नगर/ गाउँपालिकाको परिचय छाप्नका लागि एक लाखको आर्थिक सहयोग 'हाम्रो पुरुषार्थ'लाई दिने । यसरी प्राप्त भएको सहयोगको आधारमा पुस्तकालयले निम्न कामहरू गर्नेछ ।

१. प्रत्येक पालिकाहरूको भिलेज प्रोफाइल पुस्तकालयमा सुरक्षित राखिनेछ ।

२. प्रोफाइलको सारवस्तुलाई 'हाम्रो पुरुषार्थ' को एउटा अंकमा त्यस नगर/गाउँपालिकाको परिचय भनेर छाप्ने काम हुनेछ ।

३. पालिका परिचयका लागि बढीमा आठ पृष्ठ छुट्याइनेछ ।

४. पत्रिकाको आवरण पृष्ठ या भित्री पृष्ठमा त्यसै नगर या गाउँको चिनारी दिने कुनै ऐतिहासिक, धार्मिक, सांस्कृतिक, प्राकृतिक स्थान या विकास निर्माणको एक झलक प्रस्तुत हुने खालको एउटा फोटो छापिनेछ ।

५. परिचय छापिएको अङ्कका ५० प्रति नगर/गाउँपालिकालाई निःशुल्क उपलब्ध गराइनेछ ।

६. नगर/गाउँपालिकाले आफ्नो परिचय र सहयोग राशि पत्रिका प्रकाशन गर्ने अन्तिम महिनाभन्दा एक महिनापहिले किरण पुस्तकालयमा बुझाउनुपर्ने छ ।

७. यस कार्यमा सहयोग पुस्याउनु हुन हामी निम्न नगर/गाउँपालिकाहरूलाई हार्दिक अनुरोध गर्दछौ :

   इस्मा, कालिगण्डकी, गुल्मीदरबार, चन्द्रकोट, छत्रकोट, धुर्कोट, मदाने, मालिका, मुसिकोट, रुरुक्षेत्र, रेसुङ्गा र सत्यवती गाउँपालिका र नगरपालिका ।

८. नगर/गाउँपालिकाले सहयोगस्वरूप दिने अनुदान राशि राष्ट्रिय वाणिज्य बैंक, गुल्मी शाखामा रहेको किरण पुस्तकालयको ब.हि.नं. ३०१०००००२०७१० मा पठाइदिनुपर्नेछ ।

९. कुनै नगर/गाउँपालिकाबाट तोकिएको क्रमअनुसार समयमै परिचयात्मक विवरण र सहयोगराशि प्राप्त नभएमा अर्को नगर/गाउँपालिकाको परिचय अगाडि छापिनेछ । 'हाम्रो पुरुषार्थ' को यो योजना बढीमा ३ वर्ष चल्नेछ ।

१०. यसबाट गुल्मी जिल्लाका सबै नगर/गाउँपालिकाको एउटा ऐतिहासिक अभिलेख तयार हुनेछ । जिल्लाको आद्यन्त इतिहास तयार गर्न मद्दत मिल्नेछ । 'हाम्रो पुरुषार्थ'लाई नियमितता प्रदान गर्न टेवा पुग्नेछ । गुल्मी जिल्लाको बारेमा शोधखोज गर्नेहरूलाई सन्दर्भ-सामग्रीहरू प्राप्त गर्न सजिलो हुनेछ । सबै नगर र गाउँपालिकाहरूले यथासमयमा यस योजनालाई पूर्णता प्रदान गर्न सहयोग पुस्याउनुहुनेछ भन्ने हाम्रो पूर्ण विश्वास छ ।

**- *सचिव***

ooo



# नौलो सृष्टि : सानो दृष्टि



## १. पेनाल




वि.सं २०३६ सालमा 'ज्याग्दी र म' खण्डकाव्यबाट कृतिकारका रूपमा सार्वजनिक भएका देवेन्द्र लम्साल शिक्षण पेसाबाट सेवा निवृत्त व्यक्तित्व हुन् । उनका खण्डकाव्य, स्मृतिकाव्य, कविता-संग्रह, कथासंग्रह आदि गरी यो समेत ८(आठ) वटा कृतिहरू प्रकाशित भएका छन् । प्रस्तुत महाकाव्य कविको प्रकाशनको हिसाबले हालसम्मको कान्छो र भावाभिव्यक्तिका हिसाबले जेठो कृति हो । यसको प्रकाशक श्रीमती सुभद्रा लम्साल रहनुभएको छ । भूमिका खण्डसहित झण्डै चारसय पृष्ठ मोटो प्रस्तुत ग्रन्थ नेपाली महाकाव्यको इतिहासमा प्रयोगवादी महाकाव्य हो ।

नेपालीलाई पार्सी भाषामा पेनाल बनाएर शीर्षक दिइएको प्रस्तुत महाकाव्यमा श्रृङखला विहीन कथावस्तु रहेको छ । दश वर्षे द्वन्द्वमा हिरासत र नजरबन्दको चपेटा सहेका महाकाव्यकारले किशोरवयकालीन पार्सी भाषाका शब्दहरू प्रयोग गरेर समाजमा विद्यमान दमन, शोषण र अन्यायका कथाव्यथाहरू उल्लेख गरेका छन् । पूर्व र पश्चिमका महाकाव्य मान्यतामा नायक, नायिका ,खलनायक, नायिका आदि कुनैको काल्पना नगरी महाकाव्यकारले चिन्तनप्रधान महाकाव्य तयार गरेका छन् । केही प्रतिनिधि पात्र, केही प्रतीकात्मक पात्रको माध्यमबाट नेपाली समाजमा देखिएका अन्याय, अत्याचार, दमनशोषण र उत्पीडनका कथालाई कविले मर्मस्पर्शी रूपमा चित्रण गरेका छन् । कवि पृथ्वीलाई पृथ्वी नै मानिसलाई मानिस नै भन्न हिचकिचाएका छन् । कविको पार्सी शब्दचयनमा आफ्नै गूढ रहस्य लुकेको छ । छलकपट, दमनशोषण आदिले युक्त पेनाल, नेपाल बनोस, नामिस-मानिस बनून् भन्ने कामनाका साथ कृति अन्त्य भएको छ।

नवम सर्गलाई क र ख खण्डमा विभाजन गरी जम्मा १९ सर्गमा प्रस्तुत महाकाव्य संरचना गरिएको छ । हरेक खण्डमा श्लोक या भनौं उपखण्ड प्रसङ्गानुसार विभाजन गरिएको छ । यसरी दिइएको संख्या लामा सर्गमा ७३ र छोटा सर्गमा २२ वटा गरी जम्मा ९७५ उपखण्ड वा श्लोकहरू रहेका छन् । महाकाव्यकारले भिन्न बिम्ब र प्रतीकहरूको सहयोगबाट काव्याभिव्यक्तिलाई

प्रत्यक्षभन्दा परोक्ष बनाएका छन् । कविको कलम अभिधेयार्थतर्फ भन्दा व्यङ्ग्यार्थतर्फ अगाडि बढेको छ । नेपाली जनजीवनको रोग, शोक, व्यथा, अहङ्कार उल्लेख गर्दै विद्यमान राजनीतिक स्थितिप्रति तीव्र घृणा र आक्रोश व्यक्त गरिएको छ । प्रजातन्त्र लोकतन्त्र र समाजवादप्रति कविको उपेक्षा देखिन्छ । कवि द्वन्द्वकालीन समयमा कतै जनयुद्धका नाममा त कतै शान्ति सुरक्षाका नाममा भएका आततायी प्रवृत्तिप्रति पनि नरसिंह बनेर देखा परेका छन् । कुनै मूल पात्रविना, नेताविना देशमा भीडमात्र सल्बलाएर खैलाबैला मच्चिएको यथार्थलाई चित्रण गदै कवि पन्ध्रौ सर्गको श्लोक ९ का एक अंशमा लेख्छन् :

आजभोलि नयाँ राष्ट्र पेनालमा मादल बज्दैनन् गाजल बग्दछ । दोहोरी हराएर फोहरी खेल खेलिन्छन् ।

आँखा झिकेर आँखाका ठाउँमा आगो बलेको छ मुटु झिकेर मुटुको ठाउँमा बम जडेको छ । टाउकामा गिदी झिकेर त्यसको ठाउँमा रिमोट कन्ट्रोल छ ।

महाकाव्यकार मन्त्रिपरिषद्लाई पत्रुपरिषद्को नाम दिदै सत्रौंको ३९ औं श्लोकको एक अंशमा भन्दछन् :

पत्रुपरिषद्का मठाधीशहरूले बास गरेको हरेक आँगनको पेनाल दिउसै मसान निस्कने मुर्कट्टा निस्कने मसानघाटको पेनाल इन्द्रिय जस्तै जमेको पेनाल..............................खोज्दै जाँदा यस्ता तमाम अभिव्यक्तिहरू पाउन सकिन्छ । ऐन कानुन र नीति-नियमलाई एकातिर पन्छ्याएर स्वार्थ, पदलोलुपता, अन्याय, अत्याचार र भष्ट्रचारको खेती भैरहेको वर्तमान समय सन्दर्भलाई कविले तिखो रूपमा व्यङ्ग्य गर्दै उल्टो चालबाट चल्दा नेपाल होइन पेनाल अर्थात् अंग्रेजी शब्दको पेनाल्टी अर्थात् दण्डैदण्डको राज्य पेनाल सम्झेका छन् । आजका मानिसहरूमा विवेकहीनता, चरित्रहीनता उद्दण्डता, घमण्डीपन, अहङकार, क्रोध, छलकपट, वैमनस्य-दुर्भाव र वञ्चक प्रवृत्तिलाई कविले हरेक सर्गमा कतै न कतै कुनै न कुनै रूपमा छोएका छन् । विगत र वर्तमानका यावत् परिस्थितिहरूलाई जीवन्त चित्रण गरिएको प्रस्तुत महाकाव्य नेपाली महाकाव्यको इतिहासमा प्रगतिवादी धारामा लेखिएको प्रयोगधर्मी महाकाव्य हो । द्वन्द्वकालीन नेपाली परिवेशले आहत बनेका महाकाव्यकारको आवेग शब्द-शब्दमा प्रकट भएको छ । प्रस्तुत महाकाव्यमा कवि भिन्नै विचारधारामा समसामयिक वैचारिक दृष्टिकोणका साथ प्रस्तुत भएका छन् ।

### २. मुक्तिनाथ धामदेखि युरोपसम्म (यात्रासंस्मण)

झण्डै दुई दर्जन जति शैक्षिक सामाजिक, वित्तीय संस्थाहरूमा संलग्न समाजसेवी सुन्दरप्रसाद जोशी अर्थात् सुन्दरप्रसाद 'बादल'को तेस्रो कृति मुक्तिनाथधामदेखि

युरोपसम्म यात्रासंस्मरण-२०७५ प्रकाशित भएको छ । विघ्नहर्ता गणेशको स्तुतिबाट आरम्भ गरिएको प्रस्तुत संस्मरणात्मक कृतिको अनुक्रमणिका १.०२ देखि १.१५ सम्म युरोपका देशहरूमा गरिएको यात्रा वृत्तान्त छ । २.०१ देखि १२.०१ सम्म नेपालभित्रका विभिन्न स्थानहरूको भ्रमण र त्यससँग सम्बद्ध अनुभव र प्राकृतिक परिवेशको चित्रण गरिएको छ भने १३.०१ देखि १५.०१ सम्म केही संस्मरणका अनुभवलाई समेटिएको छ । बाँकी पाँच पृष्ठमा तस्वीरका झलकहरू छन् । देशभित्रको विभिन्न स्थान र भारतको गौहाटीतर्फको यात्रा वृत्तान्तहरू समावेश गरिएको छ । केही यात्रामा संलग्न भ्रमणका तस्वीरहरू पनि समावेश छन् ।




लेखकले यात्रा वृत्तान्तका अनुभवहरू शब्दमा उतारेका छन् । यात्रा संस्मरण पुस्तकाकार कृतिका रूपमा तयार हुँदा शीर्षकअनुसार नै मुक्तिनाथधाम र सेरोफेरोका भ्रमणका पाटाहरू अगाडि र युरोपीय क्षेत्रका भ्रमणका संस्मरणहरू पछिल्लो क्रममा मिलाउन सकेको भए सुनमा सुगन्ध हुने थियो । लेखहरूको क्रम राख्दा पनि परम्परागत शोध ग्रन्थमा जस्तै दशमलव पद्धतिद्वारा शीर्षकान्तर गरिएको छ । यसले विषयसूची हेर्दा पाठक अल्मलिने देखिन्छ । यात्रासंस्मरण र वर्णनले पाठकको ध्यान अवश्य तान्छ । यो सह्रानीय पक्ष हो । भाषा सम्पादन र विषय सम्पादनका क्षेत्रमा विशेष ध्यान दिन सकेको भए अझ राम्रो हुने थियो । आगामी दिनमा यी पक्षमा सुधारसहित यसैको अर्को संस्करणका साथै अन्य नवीनतम कृतिहरू प्रकाशित होऊन्, शुभकामना !




### ३. आगो केही राप, केही ताप

वि.सं. २०२७ सालमै डाँडाबाट कविता-संग्रह लिएर उदाएका तीर्थराज वन्त लेखन, सम्पादन र अनुवादसमेत गरी हालसम्म ३० वटा कृतिका अग्रपंक्तिमा नाम राखिसकेका व्यक्ति हुन् । उनका कानुनी साहित्य, रेडक्रस, मानव अधिकार, मुक्तक, लघुकथा,

हाइकुलगायतका विधागत कृतिहरू प्रकाशित भैसकेका छन् । रेडक्रसमा आबद्ध भएर लामो समयसम्म सेवा पुर्‍याएका वन्त अपाङ्ग महासंघ एवं सार्वजनिक पुस्तकालय महासंघमा समेत रही सामाजिक सेवा गरेका व्यक्ति हुन् । उनको 'आगो केही राप केही ताप' कविता-संग्रह (२०७५) प्रकाशित भएको छ । १०१ टुक्रा कविताका साथै उपसंहारसमेतमा अग्नि र यससँग सम्बन्धित विभिन्न सन्दर्भहरू कवितामा प्रस्तुत भएका छन् । आत्मपरक शैलीमा प्रस्तुत भएका कविले तीन पङ्तिको एक श्लोक निर्माण गरी हरेक कविताको शुरूमा "लेख्दै छु म आगोमाथि आलेख"बाट शुरू गरेर कविले चारै वेद र विज्ञानले समेत विशेष महत्त्वका साथ हेरेको आगो र यसका विविध रूपलाई प्रस्तुत कविता-संग्रहमा उल्लेख गरेका छन् । सम्पूर्ण प्राणीको हितका निम्ति सिर्जित आगो राप, ताप, ज्योति, खति सबै क्षेत्रमा प्रयोग हुने साधन हो । प्रस्तुत संग्रहमा कविका वैदिक, वैज्ञानिक एवं लौकिक ज्ञान र अनुभवका प्रसङ्गहरू अत्यन्त प्रभावकारी रूपमा प्रस्तुत भएका छन् । जन्मदादेखि अन्तिम संस्कारसम्म त्यत्तिकै प्रयोग हुने आगोका विभिन्न रूप र नामहरू यसमा रहेका छन् । कविले यी सबै सन्दर्भहरू भित्रसम्म पुगेर प्रस्तुत गरेका छन् । कविमा दुष्टात्माहरूप्रति विद्रोही बन्ने चेतना पलाएको छ । कवि भन्दछन् ।

**दुष्ट आततायीहरूको पाउमा**
**सक्दिनँ फूलको श्रद्धाञ्जलि चढाउन**
**म बाल्छु आगो, चढाउँछु आगो डढाउन (२९:२)**

पूर्वीय मान्यतामा अरणीमन्थनबाट उत्पन्न अग्निका विविध रूप छन् । दावानल, बडवानल, प्रलयाग्नि आदि कविले अग्निका ती सबै स्वरूपहरूको चर्चा गरेका छन् । ग्रीक पुराणअनुसार प्रमिथसले स्वर्गबाट धरतीमा मानव जातिको कल्याणका निम्ति चोरेर ल्याएको आगो हो । यसलाई पूर्वीय दर्शनमा वैदिक कालदेखि हालसम्म भिन्न रूप र प्रयोजनमा लिइन्छ । कविले ती सबै पक्षमाथि विहङ्गम दृष्टिकोण राखेका छन् । यो कृति आगोको सन्दर्भमा लेखिएको कविता संग्रह मात्र नभई अग्निग्रन्थ बनेको छ । कविले आफूभित्र रहेको वैदिक, लौकिक एवं समसामयिक ज्ञानलाई यसैभित्र समेटेका छन् । आकारका हिसाबले लघु देखिए पनि आगो केही राप, केही ताप एक बृहत् ग्रन्थ हो । यो कृति श्रद्धे कवि वन्तको प्रतिभाको उत्कृष्ट उपज पनि हो ।

### ४. पदचिह्न

सिद्धार्थ साहित्य परिषद् मोफसलबाट नेपाली साहित्यको सेवा गर्ने संस्था हो । नेपाली साहित्य सेवामा यसले विगत ३९ वर्षदेखि अनवरत सेवा गर्दै आएको छ । यस परिषद्ले सिद्धार्थ साहित्य सङ्गम कार्यक्रम नियमित रूपमा सञ्चालन गर्दै नेपाली साहित्यको श्रीवृद्धिमा योगदान दिएको छ । यसले पदचिह्नको पाँचौ

अङ्क नेपाली साहित्यमा केही पिछडिएको विधा समालोचनालाई निकै महत्त्व दिई प्राथमिकताका साथ प्रकाशित गरेको छ ।

विभिन्न २७ जना समीक्षकहरूका समालोचनाहरूको सँगालो पदचिह्नमा कथा, कविता, उपन्यास गजल, हाइकु, लघुकथाका साथै नेपाली साहित्यमा व्यक्तिविशेषको योगदानलाई पनि समेटिएको छ । देवकोटाका शाकुन्तल र प्रमिथस दुबै महाकाव्यका क्रमशः पात्र विधान र साभिव्यक्तिले स्थान पाएका छन् । २७ वटा शीर्षकहरूमध्ये १२ औं लेखमा सिद्धार्थ साहित्य सङ्गमका विगतदेखि वर्तमानसम्मका गतिविधिहरूको समीक्षा अध्यक्षबाटै गरिएको छ । अन्यभन्दा यो भिन्न संस्था समीक्षा बन्न पुगेको छ । छोटामा तीन पृष्ठसम्म र लामामा १८ पृष्ठसम्मका समीक्षा संग्रहहरू यसभित्र समावेश गरिएका छन् । अधिकांश कृतिपरक समालोचनाहरू छन् भने एउटा व्यक्तिपरक (जीवरज आश्रित) र एउटा साहित्य (गजल) सँग सम्बन्धित समीक्षाले स्थान पाएको छ । पदचिह्नको बिसाउनीमा देवकोटाको प्रतिमानिर्माणसँग सम्बद्ध गतिविधिहरू समावेश गरिएको छ ।




वि.सं. २०३८ सालमा स्थापित यस साहित्यिक संस्थाले स्रष्टाहरूको जयन्ती, स्रष्टा सम्मान, साहित्यिक गोष्ठीका साथै मासिक रूपमा सिद्धार्थ सङ्गम गरेर नेपाली भाषा, साहित्य कला र संस्कृतिको संरक्षणमा साहित्यिक मनहरूलाई एकत्रित गर्दै आएको पनि पदचिन्हबाट बुझ्न सकिन्छ ।

आवरणमा दुई पदचिह्न आरेखित गरेर विशेष सज्जाका साथ तयार प्रस्तुत कृतिको अर्थ आवरणबाटै सामान्य पाठकले पनि बुझ्न सक्ने बनाइएको छ ।

पदचिह्नजस्तै अन्य कृतिहरू प्रकाशित गरेर सिद्धार्थ साहित्य संगमले नेपाली साहित्यको विकासमा थप योगदान दिंदै जाओस् । यस्तै त्यागी एवं साहित्यसेवी हात र साथ अटुट रहुन् ! यही शुभेच्छा !

**- अकिञ्चन**

०००

# हाम्रो पुरुषार्थ

कालो भ्रष्ट पना पखालि मनको कर्तव्यको चिन्तन
गर्दै साहस ली अमूल्य क्षणको जानेर यो गर्जन ।
सारा देश विदेश विश्व भरमा भ्रातृत्वको भाव ली
यो 'हाम्रो पुरुषार्थ' सार्थक बनी टल्कोस् सदै टल्टली ॥

यो आफ्नो परको छ त्यो न भन है भन्ने त हो मूर्ख नै ।
यो मेरो र मलाइ मात्र बुझ्ने हो त्यो अरू धूर्त नै ।
राखी प्रेम सदै समस्त जति छन् प्राणीहरूमा सम
यो 'हाम्रो पुरुषार्थ' सार्थक बनी फैली रहोस् हर्दम ॥

मान्छे हौं तर कार्य मानव सरी गर्दै गए मात्र ता
कार्यै उल्टो गरे त दानव सरी बन्छौं सबै नत्र ता ।
राखी दृढ विचार हामी सबमा सत्यं शिवं सुन्दरम्
यो 'हाम्रो पुरुषार्थ' सार्थक बनी घन्कोस् सदै घन्घन ॥

फार्दै मानवका समस्त जति छन् अज्ञानका बादल
बन्दै यै जन जातिका हृदयमा फल्दै गरोस् सत्फल ।
भिर् पाखा पहरा र झार लहरा यस्का रहून् भूषण
यो 'हाम्रो पुरुषार्थ' सार्थक बनी हट्दै गरोस् शोषण ॥

-चिरञ्जीवी शर्मा

*(२०३० सालको 'हाम्रो पुरुषार्थ'को पहिलो अङ्कबाट)*

०००

# हाम्रो पुरुषार्थको सम्पूर्णाङ्क ८४ पढ्दा

श्रीमान् सम्पादकज्यू,
हाम्रो पुरुषार्थ त्रैमासिक, किरण पुस्तकालय, तम्घास, गुल्मी ।

पहिलेदेखि नै किरण पुस्ताकालयको बारेमा सुनेकी थिएँ र यहाँबाट प्रकाशित भएका केही पुस्तकहरू हुटिट्याउँको मन (२०७६) र तपोभूमि रेसुङ्गाधाम (२०६७) पहिले नै पढ्ने सौभाग्य प्राप्त गरेकी थिएँ । किरण पुस्तकालयलाई अझ नजिकबाट बुझ्ने अवसर अहिले पाएकी छु । नेपालमा धेरै पुस्तक तथा पत्रपत्रिका प्रकाशित हुन्छन् तर धेरै जसो पत्रिकाहरू स्थापित हुन नसकेको अवस्थामा किरण पुस्तकालय स्वर्णजयन्ती मनाउन सफल हुनु र यसबाट प्रकाशित यस हाम्रो पुरुषार्थले विभिन्न लेख रचनाको माध्यमबाट ज्ञानको किरण पाठकसमक्ष प्रस्तुत गर्नुले यस किरण पुस्तकालयको गरिमा बढेको छ । यसको ऐतिहासिक महत्त्व रहेको छ ।

जिल्ला तथा जिल्लाबाहिर लुकेर रहेका साहित्य, संगीत, कलाको संरक्षण र संवर्धन गर्न यस पत्रिकाको महत्त्वपूर्ण भूमिका रहेको छ । हाम्रो पुरुषार्थका प्रकाशित अंकहरू ८४ पुगेका छन् । यस पत्रिकाको ८४ औ अंकमा प्रकाशित लेखमा मलाई साह्रै मन परेको कविता 'हजुर सन्चै छ' जुन डा. बाबुराम ज्ञावलीजीले लेख्नुभएको छ । यस कवितामा जीवनको भोगाइलाई प्रस्ट पारिएको छ । आजसम्म मैले मेरो जीवनमा विभिन्न लेख रचना कृतिहरू पढ्ने मौका पाएँ तर हाम्रो पुरूषार्थमा हर क्षेत्रसँग सम्बन्धित लेखहरू पढ्ने अवसर पाए जहाँ समाजको थोरै भए पनि इतिहास, थोरै वर्तमान र थोरै भविष्यका कुराहरू पढ्ने अवसर पाएँ । साथै दुर्गाप्रसाद श्रेष्ठसँगको भेटघाटमा भएका कुराहरू अत्यन्तै गहन र पथ प्रदर्शक लागे । डा. तुलसी भट्टराईको खोया बिर्के खोया र हाम्रो समाज, प्रा. कपिल अज्ञातको सम्झनाका विम्बहरू, शिवशरण ज्ञवालीको भाषा शिक्षणमा प्रकार्यपरकता, होमनाथ शर्माको वैदेशिक शिक्षा, विष्णुराज सिग्देलको नेपाली समाजमा ज्योतिष, विनोद नेपालको वनस्थलीबाट कोटेश्वर हुँदै चन्द्रागिरि, चन्द्रकान्त आचार्यको गुल्मी छ प्यारो सदा, त्यस्तै स्व.कुलमणि देवकोटा, रमेश गौतम पाल्पाली, पन्थी रामप्रसाद, पद्मप्रसाद शर्माका लेखहरू पनि अत्यन्त पठनीय छन् । हाम्रो पुरुषार्थले वर्तमानमा जसरी आफ्नो अस्तित्व र महत्त्वलाई कायम गरेको छ त्यसरी नै भविष्यमा थप उचाइमा पुगोस् भन्न चाहन्छु ।

- **अस्मिता भुसाल,** मदाने गाउँपालिका-२, गुल्मी

ooo

# किरण पुस्तकालयका आजीवन सदस्यको परिचय

नाम : **राममणि पन्थी**
पिता/माता : ऋषवराज/सरस्वती उपाध्याय पन्थी
धर्मपत्नी : माया पन्थी
हजुरबुबा : हरिलाल उपाध्याय पन्थी
जन्ममिति : वि.सं. २०२४ साल असोज ११ गते
ठेगाना : साबिक तम्घास-७ (हाल रेसुङ्गा नगरपालिका-९, उपल्लो तम्घास, फेरा, गुल्मी)
शिक्षा : आई.ए.
सम्पर्क नं. : ९८४४७९१११११
संलग्नता : २०४४ सालदेखि शिक्षण पेशामा प्रवेश गरी भाडगाउँ मा.वि., रुन्खादह मा.वि., रानीपोखरी नि.मा.वि., उपल्लो तम्घास मा.वि.मा अटुट सेवा गर्दै २०७२ आषाढ ३१ देखि २०७६ पौष २० सम्म उपल्लो तम्घास मा.वि.मा प्र.अ.को जिम्मेवारी कुशलताका साथ निर्वाह गरी हाल जिल्ला लेखाजोखा केन्द्र गुल्मीको संयोजकको रूपमा कार्यरत ।
रुचि : अपाङ्गता भएका व्यक्तिहरूको सेवा गर्ने ।

---

नाम : **अमृतादेवी कुँवर**
पिता/माता : लिलबहादुर/पवित्रा बर्मा
धर्मपति : भेषबहादुर कुँवर 'प्रयासी'
जन्ममिति : वि.सं. २०१० कात्तिक १९ गते ।
ठेगाना : रेसुङ्गा नगरपालिका-२, तम्घास, गुल्मी ।
शिक्षा : एस्.एल्.सी.
कार्यानुभव : शिक्षिका (रेसुङ्गा मा.वि.) द्वितीय श्रेणी (२०३३-२०६३)
संलग्नता : नेपाल बाल संगठन, नेपाल हर्ट फाउण्डेसन, नेपाल नेत्रज्योति संघ, विश्व हिन्दू महासंघ, अन्तरपार्टि महिला सञ्जाल, नेपाली कॉंग्रेस जिल्ला कार्य समिति, गुल्मी ।



नाम : **रमेशजङ्ग कुँवर**

पिता/माता : भेषबहादुर कुँवर 'प्रयासी'/अमृतादेवी कुँवर

धर्मपत्नी : बीमा के.सी. कुँवर

जन्ममिति : वि.सं. २०३६ साल असोज ०७ गते

ठेगाना : रेसुङ्गा नगरपालिका-२, तम्घास, गुल्मी

शिक्षा : एम्.फिल. (समाजशास्त्र), अध्ययनरत

संलग्नता : भारतीय सेना, किरण पुस्तकालय, रूडेक, नेपाल ।

कृति : उज्यालाका खोजीमा, Pusslit of Elightment, खुकुरीको शान, वीरको सन्तान ।

---

# NOVEL CORONA VIRUS (nCOV)
सर्वसाधारणका लागि जनचेतनामुलक संदेश

## नोवेल कोरोना भाइरसका मुख्य लक्षणहरू



ज्वरो
*(१००.४ °F भन्दा माथि)*



श्वास प्रश्वासमा अत्याधिक समस्या



रुघा र खोकी

*"नोवेल कोरोना भाइरस प्रभावित देशहरूबाट आउने मानिसहरूमा दुई हप्ता भित्र रुघाखोकी लागेमा, ज्वरो आएमा, घाँटी/टाउको दुखेमा, श्वासप्रश्वासमा अत्याधिक समस्या भएमा तुरुन्त नजिकको स्वास्थ्य संस्थामा सम्पर्क गर्ने।"*

## नोवेल कोरोना भाइरसबाट कसरी आफू र अरूलाई बचाउने?

नियमित रूपमा साबुन-पानीले हात धुने।



खोक्दा र हाच्छ्युं गर्दा नाक र मुख छोप्ने।



फ्लू जस्तो लक्षण (Flu-like symptoms) देखिएमा चिकित्सकसँग परामर्श लिने।



फ्लू जस्तो लक्षण देखाउने जो कोहीको सम्पर्कबाट टाढा रहने।



जंगली तथा घरपालुवा पशुपन्छी सँगको असुरक्षित सम्पर्कबाट टाढा रहने।



पशुजन्य मासु तथा अन्डा राम्रोसंग पकाएर मात्र खाने।





नेपाल सरकार

सञ्चार तथा सूचना प्रविधि मन्त्रालय

**सूचना तथा प्रसारण विभाग**




# किरण पुस्तकालय, तम्घास, गुल्मीद्वारा
# प्रकाशित पुस्तकहरू

| क्र.सं. | पुस्तकको नाम | लेखक |
|---|---|---|
| १. | सन्त शशिधरको बाणोपनिषद् (२०३३) | स्वामी शशिधर |
| २. | रेसुङ्गाका आध्यात्मिक कृति (२०३६) | महाप्रभु लक्ष्मीनारायण, योगकुमार, लीलाम्बर भुसाल |
| ३. | केही जनश्रुतिहरू (२०४२) | डा. टीकाराम पन्थी |
| ४. | रुरुक्षेत्र (२०४३) | केशवप्रसाद पौडेल |
| ५. | नेनेपालः (२०४४) | डा. टीकाराम पन्थी |
| ६. | बुद्धस्मरणम् (२०५४) | डा. टीकाराम पन्थी |
| ७. | मेरो देश नेपाल (२०५४) | मुकुन्दहरि ज्ञवाली |
| ८. | गुल्मीको ऐतिहासिक झलक (२०५५) | डा. राजाराम सुवेदी |
| ९. | मानवताको कलङ्क : जातपात र छुवाछूत प्रथा(२०५८) | मोदनाथ प्रश्रित |
| १०. | सांस्कृतिक चिन्तन (२०६२) | डा.टीकाराम पन्थी |
| ११. | अर्वाचीन रेसुङ्गा (२०६४) | डा. टीकाराम पन्थी |
| १२. | तपोभूमि रेसुङ्गाधाम (२०६७) | परशुराम उपाध्याय पन्थी |
| १३. | ग्रहविमर्श (२०६८) | अर्जुनप्रसाद भट्टराई |
| १४. | काव्यमालिका (२०७५) | डा. लक्ष्मीकान्त पन्थी |
| १५. | आधा जिस्ता (२०७६) | प्रा.डा. बाबुराम ज्ञवाली |
| १६. | हुटिटयाउँको मन (२०७६) | दीन पन्थी |
| १७. | अमृतपान (२०७६) | विष्णुप्रसाद खनाल |


सुशिला प्रिन्टर्स, गुल्मी (५२०४९०)